

खाना पकाउने ग्याँस (एल.पी. ग्याँस) प्रयोगकर्ताहरुलाई सुरक्षा सम्बन्धी

# नेपाल आयल निगम लि. को

# अति आवश्यक जानकारी

एल.पी. ग्याँस अत्यन्तै प्रज्वलनशिल पेट्रोलियम पदार्थ भएकाले यसको प्रयोगमा पर्याप्त सतर्कता एवं सावधानी अपनाउनु जरुरी हुन्छ । त्यसैले खाना पकाउने ग्याँसको चुहावटले हुने दुर्घटनाबाट बच्न देहायका कुरामा विशेष ध्यान पुऱ्याउन सम्पूर्ण उपभोक्तावर्गमा नेपाल आयल निगम अनुरोध गर्दछ ।

## दुर्घटनाबाट बच्न ध्यान दिनुपर्ने कुराहरू :





१. सिलिण्डर ल्याउदा लैजादा नगुडाऔं । भान्सामा सिलिण्डर सँधै ठाडो राखी प्रयोग गरौं । सुताएर, घोप्टाएर प्रयोग नगरौं ।
२. रेगुलेटर, रवर, पाइप, चुलोजस्ता उपकरणहरु गुणस्तर भएको मात्र प्रयोग गरौ । साथै हरेक दुई वर्षमा ग्याँसको पाइप फेरौ ।
३. काम सकेपछि सँधै रेगुलेटर बन्द गर्न नबिर्सौं।
४. खाना पकाउदा सधै झ्याल ढोका खुल्ला राखौं र सुतीको कपडा लगाएर मात्र खाना पकाउने गरौ ।

## ग्याँस चुहावट भएमा ध्यान दिनुपर्ने कुराहरू :





१. खाना पकाउने स्थानमा एल.पि. ग्यासको तिखो गन्ध आइरहेको छ भने ग्याँस चुहिएको भन्ने बुझ्नु पर्दछ। ग्याँस लिक भएमा पहिले रेगुलेटरको र पछि चुल्होको नव बन्द गरौ ।
२. झ्याल ढोका खुल्ला राखौ र झिल्का निस्कने बस्तुहरु जस्तै ग्याँस चुल्हो, सलाई, लाईटर, धुप आदि नबालौ । विद्युतजन्य उपकरणको प्रयोग नगरौ ।
३. ग्याँस लिक भएमा रेगुलेटरलाई सिलिण्डरबाट छुटाई सिलिण्डरमा सेफ्टी क्याप लगाइ बाहिर खुल्ला स्थानमा राखौ र यथाशिघ्र नजिकको ग्याँस विक्रेता अथवा ग्याँस उद्योगमा सम्पर्क गरौ ।

*"सचेत र सावधान हुनु नै सुरक्षित हुनु हो ।"*

उपभोक्ता जनहितका लागि जारी




## नेपाल आयल निगम लि.

टेकु, काठमाडौं, नेपाल

फोन नं: ०१– ५३६४९७५, ५३६४९७४

प्रेस काउन्सिल पुरस्कारद्वारा पुरस्कृत 'क' वर्गको राष्ट्रिय पत्रिका जि.प्र.का.द.नं. १३/०५४/०५५

# कल्पतरु द्वैमासिक

*(Kalpataru By-Monthly litretary Magizine)*

वर्ष : २१, अङ्क : ३, पूर्णाङ्क १००, २०७९ मङ्सिर-पुस **(शताङ्क)**



**मुद्रण/प्रधान कार्यालय**
गोकर्णेश्वर न.पा., वडा नं ६
फोन: ०१-४९१३५२०, ९८४१२८२३०५

**रचना पठाउने इमेल ठेगाना**
navarajpudasaini@gmail.com
फेसबुक ग्रुप : कल्पतरु द्वैमासिक
Web.: www.kalpatarupub.com.np

**मूल्य : रू. २००।–**

सम्पादकीय

# शताङ्कसम्मको यात्रा

कल्पतरुको एक्काईस वर्षीय निरन्तर यात्रा शताङ्क प्रकाशनको अवस्थामा पुगेको छ । यस उपलब्धिबाट जति उत्साहित भएको छु, त्यत्तिकै उत्तरदायित्वबोधले गह्रुङ्गो भएको छु । एक्काईस वर्षअघि साहित्यकार मित्र मुकुन्द अर्याल र मेरो दस्तखतबाट खाता सञ्चालन हुने गरी पत्रिकाको नाममा खाता खोल्ने काम भएको थियो, प्रकाशक म रहने गरी । त्यो रहरलाई गोरखापत्र संस्थानका तत्कालीन अध्यक्ष किशोर नेपालले रु ३०००।- को विज्ञापन दिने तोक लगाइदिनुभएको थियो । तिनताक सरकारी संस्थानहरूले बल्लबल्ल दिइहाले भने तीन अङ्कको रकम दिन्थे– विज्ञापन तीन सय, पाँच सय यस्तो ।

यसै गरी पाँच-सात अङ्क प्रकाशित नगर्दै नुवाकोटका नेपाली काङ्ग्रेसका नेता बहादुरसिं लामासँग परिचय भयो अरू कुनै प्रसङ्गमा । उहाँले प्रत्येक अङ्कका लागि रु ५०००।- को विज्ञापन दिन थाल्नुभयो– हिमडुङ कन्स्ट्रक्सन प्रा.लि.को । यसरी सहजतापूवर्क केही अङ्क प्रकाशित गर्दै जाँदा प्रत्येक अङ्कमा उहाँसँग विज्ञापन लिएर छाप्न आफैँलाई अप्ठ्यारो लाग्न थाल्यो र हामी आफैँ टाढा भयौँ उहाँबाट । त्यसपछि मुकुन्दजी पनि आफ्नै कार्यालयको काममा व्यस्त हुन थाल्नुभयो ।

म आफू पनि बैङ्कको नोकरीमै थिएँ । यस्तैमा पत्रिकाको कार्यकारी सम्पादकको रूपमा जोडिनुभयो साहित्यकार किशन थापा 'अधीर' । केही अङ्क सहज रूपमा प्रकाशित हुँदाहुँदै उहाँ पनि अध्यापन पेशामा व्यस्त हुन थाल्नुभयो । त्यसपछि कार्यकारी सम्पादक सम्हाल्नुभयो साहित्यकार गोकुल अधिकारीजीले । पत्रिकालाई केही गुणात्मक बनाएर बिस्तारै उहाँ पनि पत्रिकालाई समय दिन नसक्ने अवस्थामा पुग्नुभयो ।

देशमा गणतन्त्र स्थापनापश्चात् पत्रिकालाई प्रेस काउन्सिल नेपालमार्फत वर्गीकरण गरेर लोककल्याणकारी विज्ञापन उपलब्ध गराउन थालेपछि अलि राहत मिल्दै आयो । पत्रिकाको गुणस्तर बढाउँदै लगियो । यस्तैमा साहित्यकार ऋषि बस्ताकोटीसँग सम्पर्क भयो । उहाँले 'कल्पतरु'को ८४ औँ अङ्कलाई 'उत्तर-अमेरिका अङ्क'का रूपमा प्रकाशित गर्न प्रस्ताव गर्नुभयो । उहाँकै संयोजनमा उक्त अङ्क प्रकाशित भयो । रु. ३०,०००।- को पत्रिका किनिदिनुभयो उहाँहरूले । यसरी नेपालको चार किल्ला नाघेर अमेरिका पुग्यो 'कल्पतरु' । उहाँको सहयोग अझसम्म जारी नै छ ।

यसपछिका अङ्कलाई गुणस्तर कम गर्न मनले मानिरहेको थिएन । खर्चको जोहो गर्न कठिन हुँदै थियो । सामाजिक सञ्जालमा सम्पर्क भयो रेहित सैँजुसँग । उहाँले पत्रिकामा काम गर्ने रहर देखाउनुभयो र पत्रिका परिवारमा भित्रिनुभयो । अतिथि सम्पादकको रूपमा उहाँको संयोजनमा ८७ औँ अङ्क प्रकाशित भयो । उहाँले आजीवन सदस्य बनाउने उपाय सुझाउनुभयो । यसबाट केही आर्थिक सङ्कलनमात्र भएन, पत्रिकाको बजार अथवा पाठकसङ्ख्या पनि बिस्तारित हुँदै गयो । त्यसै बेला मैले नोकरीबाट निवृत्त भएपछि सञ्चालन गर्दै आएको छापाखाना बन्द गरिदिएँ र मेरो सम्पूर्ण समय 'कल्पतरु' लाई नै दिन थालेँ । यसबाट वाक्क भएर मेरो आठ वर्षीय नातिले "म हजुरको 'कल्पतरु' जलाइदिन्छु" सम्म भन्न भ्यायो । नातिसँग खेलेर बिताउनुपर्ने मेरो समय, 'कल्पतरु'मा लागिरहेको जो थिएँ ।

अहिले 'कल्पतरु'को आजीवन सदस्य-सङ्ख्या २०० पुग्नेतिर लम्कँदै छ । 'कल्पतरु' अङ्क ९५ देखि १०० अङ्क सम्ममा प्रकाशित रचनाहरूबाट छनोट गरेर एक जना स्रष्टालाई नगदसहित सम्मानित गर्ने र सो पुरस्कार कोषका लागि अक्षयकोष स्थापनाको व्यवस्था गर्ने अवस्थामा आइपगेका छौँ । म घरमा गुनगुनाउँदै छु अझै पनि– "तिमीलाई छाड्न सकूँला बरु, 'कल्पतरु' सक्दिनँ के गरूँ !"

हामीलाई यहाँसम्म आइपुग्न बेलाबखत सम्पादन-मण्डलमा रहेर सहयोग गर्नुहुने सम्पादकज्यूहरू, संरक्षकज्यूहरू, सल्लाहकारज्यूहरू, आजीवन सदस्यज्यूहरू, विद्वान् स्रष्टाहरू, प्रबुद्ध पाठकवर्ग एवम् विज्ञापन उपलब्ध गराएर प्रोत्साहित गर्नुहुने गोकर्णेश्वर न.पा. तथा अन्य सङ्घसंस्थामा हार्दिक धन्यवाद टक्र्याउँछु ।
■■

# यस अङ्कमा

# कल्पतरूका आजीवन सदस्य

## विशिष्ट सदस्य

ईश्वर प्र. सापकोटा, काठमाडौँ
डा. ऋषि बस्ताकोटी, अमेरिका
गृष्मा पौडेल, जापान
गोविन्दराज पौडेल, काठमाडौँ
ताराप्रसाद चापागाईं
तीर्थ अधिकारी, अमेरिका
पदम विश्वकर्मा, अमेरिका
ब्रजेन्द्र श्रेष्ठ, अमेरिका
विमल अर्याल, गोकर्णेश्वर-६
दीपेन्द्र अधिकारी, जापान
योगेन्द्र तिमिल्सिना, काठमाडौँ
रश्मी भट्ट, अमेरिका
रामचन्द्र पुडासैनी, कागेश्वरी
लक्ष्मणकृष्ण ताम्राकार
वसन्त रिजाल, काठमाडौँ
विनेश रायमाझी, क्यालिफोर्निया
विमल अर्याल, जोरपाटी
विष्णा विरही, सिकागो
विष्णुबहादुर सिंह, काठमाडौँ
विजय चालिसे, काठमाडौँ
शारदा आचार्य, ललितपुर
शिखर दुलाल, अमेरिका
सरला श्रेष्ठ, अमेरिका
सीतादेवी क्षेत्री, मणिपुर, भारत
सीमा रोशी, अस्ट्रेलिया

## विशेष सदस्य

अजय गोले अन्जान द.कोरिया
कमल ढुङ्गाना, काठमाडौँ
काशीराज पुडासैनी, काठमाडौँ
किशोर पहाडी, ललितपुर
कृष्ण बजगाईं, बेलायत
खिम पुन, कतार
गङ्गा लिगल, काठमाडौँ
गोपाल दाहाल, अस्ट्रेलिया
गोविन्द सिग्देल, काठमाडौँ
डम्बर थामी, बहराइन
डोरबहादुर के.सी., गुल्मी
प्रकाश घायल, काठमाडौँ
पवन आलोक, काठमाडौँ
देविका तिमिल्सिना, काठमाडौँ
नारायण भट्टराई, अमेरिका
नेत्र खड्का, अस्ट्रेलिया
रमेश ठकुरी, भक्तपुर
राजदास श्रेष्ठ, साँखु
राजेन्द्र कार्की, क्यानडा
रामबहादुर पण्डित
लिम्पिया नेशनल कलेज, गोकर्णेश्वर
विनय गुप्ता, काठमाडौँ
विन्दा चापागाईं, गोठाटार
मधुवन पौडेल, काठमाडौँ
सागर फुयाँल, जर्मनी
सुरेश भट्ट, गोर्खा
शकुन ज्ञवाली, अमेरिका
श्रीकृष्णराज पुडासैनी, जोरपाटी
हिमलाल श्रेष्ठ, भक्तपुर
रमेश रिजाल, जोरपाटी
त्रैलोक्य खरेल, इमाडोल

## आजीवन सदस्य

अप्सरा पुडासैनी, कलैया
अनिल चन्द, कञ्चनपुर
अमर सन्तति, रामेछाप
अमृत भट्टराई, काठमाडौँ
अर्जुनविलास पन्त, भक्तपुर
अविचल आस्था मणि, तनहुँ
अर्जुन पुडासैनी, बानेश्वर
उपेन्द्र पौडेल, पोखरा
उमाकान्त पोखरेल, झापा
उमेश तिमिल्सिना, काठमाडौँ
एल.पी. पराजुली, कपन
ऋषिराम भुषाल, काठमाडौँ
ओम आचार्य, काठमाडौँ
कमल सापकोटा, नाम्ची
कविन्द्र खड्का, भक्तपुर
कान्छा तिवारी, काठमाडौँ
कुमारराज सुवेदी, काठमाडौँ
केशव शर्मा, अष्ट्रेलिया
केशव ज्ञवाली, भक्तपुर
कोमलप्रसाद लामिछाने, काठ.
खेमराज पोखरेल, अमेरिका
गङ्गा दाहाल, ललितपुर
गणेश नेपाली, पाल्पा
गुप्तबहादुर श्रेष्ठ, काठमाडौँ
गुरुदत्त ज्ञवाली, बुटवल
गोपाल बराल, गोकर्णेश्वर
घन थापा, काठमाडौँ
झषनाथ दाहाल, विराटनगर
टीकाराम देवकोटा, स्याङ्जा
टीकाराम रेग्मी, भरतपुर
दमनबहादुर सिंह, रातोपुल
दाजु गुरुङ, ललितपुर
नवप्रज्ञापन त्रैमासिक, बारा
नरराज आचार्य, काठमाडौँ
नवराज रिजाल, काठमाडौँ
नवराज रिमाल, काठमाडौँ
नवराज शर्मा, भक्तपुर
नानु राना थापा, बेलायत
नारायण निर्भय, रत्ननगर
नारायण न्यौपाने, बुटवल
निशा के.सी., काठमाडौँ
नीला घिमिरे, जनकपुर
नेत्रमान श्रेष्ठ, नुवाकोट
प्रकाश तिवारी, काठमाडौँ
पदम दाहाल, भक्तपुर
परशुराम गौतम, जोरपाटी
पुष्कर रिजाल, कोहलपुर
पूर्णबहादुर श्रेष्ठ, पनौती, काभ्रे
प्रजापति तिमिल्सिना, काठमाडौँ
प्रदीपरत्न शाक्य, बौद्ध
प्रमोद भट्टराई, भक्तपुर
प्रेम कटुवाल, कुबेत
प्रेमलाल श्रेष्ठ, रामेछाप
बज्र इ. कलेज, जोरपाटी
बद्रीप्रसाद ढकाल, काठमाडौँ
बद्रीनारायण श्रेष्ठ, रामेछाप
बलभद्र भारती, सुर्खेत
बाबुराम पोखरेल, विराटनगर
बाबुराम श्रेष्ठ, सिन्धुली
बालकृष्ण बराल, जोरपाटी
बुद्धिराज पाण्डे, काठमाडौँ
भीम गौतम, चितवन
भोजराज रेग्मी, पेप्सीकोला
मनीषकुमार शर्मा, भक्तपुर
मात्रिका घिमिरे, काठमाडौँ
मीरा पुडासैनी, काठमाडौँ
मैना विष्ट, साँखु
यम रेग्मी, दाङ
युवराज भण्डारी, क्यानडा
डा. राजेन्द्र पौडेल, कपन
राजेन्द्र श्रेष्ठ, काठमाडौँ
राम आचार्य, झापा
रामबहादुर पहाडी, काठमाडौँ
रामेश्वर श्रेष्ठ, काठमाडौँ
राजेशमान के.सी., भक्तपुर
राजेशराज गड्तौला, काठमाडौँ
रामचन्द्र तिमल्सिना, रौतहट
रुद्र थापा, तनहुँ
डा. रूपक श्रेष्ठ, बेलायत
रोहिणी लोहनी, चितवन
लक्ष्मी स्मृति, विराटनगर
वसन्त अनुभव, दाङ
विकल त्यागी, खोटाङ
विकास शैलपुत्र, भक्तपुर
विनोद उपाध्याय, विराटनगर
विनोद नेपाल, पाल्पा
विजय सापकोटा, बेलायत
विष्णु भण्डारी, मोरङ
विश्वनाथ सञ्जेल, मकवानपुर
शारदा घिमिरे 'भैल', बनेपा
शेखरकुमार श्रेष्ठ, फर्पिङ
शैलेन्द्रकुमार शाह, काठमाडौँ
श्रीराम अर्याल, बानेश्वर
सीता शर्मा, पर्वत
सीता शर्मा पन्थी, वीरगन्ज
हरिप्रसाद घिमिरे, काठमाडौँ
हरिहर भण्डारी, बानेश्वर
हिमलाल पाठक, स्याङ्जा
हेमराज पौडेल, काठमाडौ
त्रिलोचन आचार्य, कपन
त्रिविक्रम पाण्डे, दोलखा

# ‘कल्पतरु’को ९९ औँ अङ्क केलाउँदा

✍ शिव पलाँस



कल्पतरुको उनान्सय अङ्कलाई पाठकको चश्माले हेर्दा कस्तो देखिन्छ भनेर आफ्ना धारणा राख्ने जमर्को गरेको छु । हरेक वर्षायाममा आइलाग्ने प्राकृतिक विपत्तिले निम्त्याउने भौतिक एवम् मानवीय क्षति न्यूनीकरण गर्नका निम्ति सरकारी तवरबाट खासै उल्लेखनीय पहलकदमी केही नभएको प्रसङ्गबाट सम्पादकीयको विषयप्रवेश भएको छ । वर्षायाम निख्रिँदै जाँदा बिस्तारै राष्ट्रिय चाडपर्वहरू भित्रिएका र चुनावी माहौल गर्माएको परिदृश्यसँगै सम्पादकीय अगाडि बढ्दै जान्छ । हालसम्मलाई दलका चुनावी घोषणापत्रहरू हात्तीका देखाउने दाँतमात्रै साबित हुँदै गइरहेकोमा देशको राजनीतिमा उदाएका वैकल्पिक दल र युवा अनुहारहरूको प्रवेशले नागरिकमा थोरै भए पनि आशाको सञ्चार भएको विचार व्यक्त भएको छ । यसका साथै शताब्दीपुरुष सत्यमोहन जोशी, गुप्त प्रधान र सीताराम लम्सालको निधनले नेपाली संस्कृति र साहित्यको क्षेत्रलाई ठूलो क्षति हुन गएकोमा दुःख व्यक्त गरिएको छ । साथै, सत्यमोहन जोशीको लामो कालखण्डको अनवरत योगदानको सम्मान गर्दै राष्ट्रव्यापी शोक मनाउने र सार्वजनिक बिदा दिने सरकारको निर्णयको स्वागत गरिएको छ ।

विकास शैलपुत्रले अन्ठान्नब्बेऔँ अङ्कमा चिलका आँखा लगाएका छन् । कथा, लघुकथा, नियात्रा, संस्मरण, समीक्षा, गीत, गजलदेखि मुक्तकसम्मका स्रष्टा र सिर्जनाका विषयवस्तुमा उनले आफ्नो पाठकीय विचार व्यक्त गरेका छन् ।

‘कलुवा’ कथामा हरिप्रसाद भण्डारीले समाजमा रहेका बालविधवाहरूलाई हेय र शोषणको दृष्टिले हेर्ने होइन, बरु उनिहरूको हात थाम्न र आँसु पुछ्न अहिलेको शिक्षित युवा पुस्ताले हिम्मत देखाउनुपर्छ भन्ने सन्देश दिएका छन् । ‘म’ पात्रमार्फत कथा भन्दै गर्दा कथाकारले हाम्रो दिमागमा डेरा जमाएको पुरानो सोच तथा संस्कारले कसरी नारीलाई आजीवन पिँजडामा कैद गरेको छ र त्यसलाई चिर्न हामीले किन सकिँदैन ? भन्ने सवाल उठाएका छन् । सामाजिक नियम र परम्परा बदल्न वा समयसापेक्ष सुधार गर्न किन सकिँदैन ? भनेर पाठकलाई सोचमग्न पनि बनाएका छन् ।

दुर्गाप्रसाद ग्वालटारेको ‘मन’ लघुकथाले परिवारकै बीचमा एक्लो हुँदै गइरहेका वृद्धवृद्धाको मनोविज्ञान बोलेको छ । समयले जीवनको हरियो पात पहेँलो बनाउँदै लैजाँदा मन कति निरस हुन्छ भन्ने कुरा देखाइएको छ । त्यसमाथि पुरानो पुस्ता नयाँ प्रविधिमा अभ्यस्त हुन नसक्दा मन भुलाउने कुनै उपाय बाँकी नरहेको यथार्थ पनि चित्रण भएको छ । फेरि, एउटा सत्य के पनि भनिएको छ भने प्रविधिले जति नै फड्को मारे पनि मान्छेको मन पढ्ने चिजको आविष्कार भएको छैन ।

अशोककुमार शिवाले ‘चित्त बुझाउनुपर्छ’ शीर्षकको कथामार्फत सन्तानले अभिभावकप्रतिको दायित्व बिर्सिँदै गएकोले जमाना यस्तै छ भनेर आफ्नो चित्त आफैँले बुझाउनुपर्ने अवस्था इङ्गित गरेका छन् । घर र जागिर धान्ने ध्याउन्नमा आफैँलाई बिर्सिनुपर्ने नारीको कथा-व्यथा हो, जन्मदिन । यसलाई पुष्पा नेपाल सुवेदीले लेखेकी हुन् ।

छोटा कवितामा ऋषि बस्ताकोटी जमेका छन् । पेशल पोखरेलले ‘देउता’ शीर्षकको कवितामा मान्छे स्वार्थकेन्द्रित हुँदै गएको र त्यसले मान्छे-मान्छेलाई विभाजित गरेकोले ममात्र र मेरो मात्र भन्ने भाष्य

नै विनिर्माण गर्न आवश्यक छ भन्ने विचार राखेका छन् । त्यसैगरी रामकुमार पण्डित क्षेत्रीले ज्यान धोएर मात्र चित्त शुद्ध पार्न सकिँदैन भनेका छन् । शङ्ख-घण्ट बजाएर, पूजापाठ गरेर, मन्दिर धाएर मात्र आत्म-शान्ति मिल्दैन, बरु निःस्वार्थ भावले मानवसेवा गर्नुले अर्थ राख्छ भन्ने उनको मत छ । यसबाहेक 'कल्पतरु'ले गङ्गा भण्डारी, प्रीति आत्रेय ज्ञवाली, गोपालकृष्ण डङ्गोल, ओम आचार्य, नीता गुरुङ भाटिया, मधुर भट्टराई, नवराज रिमाल, इन्दिरा चापागाईं, बिलोक शर्मा र सम्पत काफ्लेका मीठा कविताहरूलाई पनि समावेश गरेको छ ।

शारदा क्षेत्री, शिरोमणि पौडेल, मात्रिका घिमिरे, नीरकमल खड्का, उमेश विश्वकर्मा र ऋषिराम भुसालका मुक्तकहरू स्वादिला छन्; खोट लगाउनुपर्ने केही छैन । वसन्त गौतमले खराब राजनीति र यसको नेतृत्वलाई मुक्तकबाटै कसेर थप्पड हानेका छन् । जीवनका तीतामीठा भोगाइ, राजनीतिक बेथिति, सामाजिक विसङ्गति, आशा, निराशा र प्रेमभावका विषयवस्तुमा टेकेर मुक्तककारहरूले खबरदारी बोलेका छन् । गजलतर्फ शोभा शाह थापा, प्रदीप नेपाली, जीवनपानी र केशर बोहरा सङ्घर्षले कलम चलाएका छन् । लक्ष्मणकृष्ण ताम्राकार र प्रेम ओभाले गीतमा प्रेमको भाव पोखेका छन् । यस अङ्कमा हाइकु भने पढ्न पाइएन ।

कृष्ण शर्माले नाम र दामका निम्ति मरिहत्ते गर्ने फाइदामुखी प्रवृत्तिलाई व्यङ्ग्य गरेका छन् । जेबी खत्रीको संस्मरण मर्मस्पर्शी छ । त्यसमा घर चलाउन बूढा र रोगी बाउ-आमालाई छाडेर परदेश लाग्नुपर्ने लाखौँ युवायुवतीको साझा पीडा छ । घर नछाडौँ— दुई पैसाको जोहो हुँदैन; घर छाडौँ— अन्तिम घडीमा बूढा बा-आमाको मुखमा एक घुट्को पानी हाल्दिन पनि पाइँदैन ! घाम, पानी, आँधी-बेहरी र असिना भोगेर बाँचिरहेका धुपीका रूखहरूमा उनले आमाको अनुहार देखेका छन् ।

धर्म-दर्शनमा निराजन खरेलले ज्ञानको उच्चतम अनुभव गर्न सक्ने मान्छेले जीवनका धेरै आयामहरूमा सिद्धि पाउन सक्छ भन्ने कुरामा जोड दिएका छन् ।

पुस्तकवार्ताका सन्दर्भमा डा. ऋषि बस्ताकोटीले स्याङ्जा, फेदीखोलाका स्रष्टा सुरज उपाध्यायसँग सवाल-जवाफ गरेका छन् । सुरज उपाध्याय कथा, कविता, गीत, गजलका साथै बालसाहित्यको क्षेत्रमा निरन्तर क्रियाशील व्यक्ति हुन् । हालसम्म उनका तीन पुस्तक प्रकाशित छन् । **तिम्रो मन फर्किएन** गजलसङ्ग्रह, **चील उड्यो आकाशमा** बालकवितासङ्ग्रह र **साइकल** बालगीतसङ्ग्रह । कुराकानीको केन्द्रमा उपाध्यायको पछिल्लो बालगीतसङ्ग्रह **साइकल** छ । उनी बाल-बालिकालाई उपदेश र मनोरञ्जनमात्र दिने साहित्यभन्दा उनीहरूको मनोविज्ञानसुहाउँदो साहित्य लेख्न जरुरी ठान्छन् । अन्तर्वार्ता छोटो छ, तथापि गुदी छ ।

साहित्यलेखन र चित्रकलामा योगदान दिएकी इन्दु पन्त र आख्यानकार निरन्जन पन्तको संयुक्त लेखनमा प्रकाशित उपन्यास **स्वीकृति**माथि ठाकुर शर्मा भण्डारीले समीक्षा गरेका छन् । उनको आशय छ— यो कृतिले सामाजिक सन्दर्भमा विभिन्न अवस्था, परिवेश, व्यक्ति र दायित्वविशेषका अनुभूतिमार्फत आदर्श जीवनको सन्देश दिएको छ । समाजमा देखिने, भोगिने गरेका राम्रा पक्षहरूमा माया, प्रेम, सद्भाव, कर्तव्य, व्यावसायिक दृष्टिकोणका साथै सूक्ष्म रूपमा रहेका विसङ्गत अवस्थालाई सूत्रात्मक रूपमा प्रयोग गर्नु उपन्यासको मूल विशेषता ठहऱ्याइएका छन् । 'चिल्लो पात' स्तम्भका आश्विन राना 'हुने बिरुवा' जस्ता देखिन्छन् । यस पटक 'कल्पतरु'ले नेपाल, भारत, कम्बोडिया, अमेरिकालगायतका देशमा रहेका नेपालीभाषी लेखकहरूलाई समेटेको छ । हुर्कँदै गरेका बिरुवादेखि हुर्किसकेका बिरुवालाई एकै थलोमा जुटाएको छ । समावेशी पखेँटा फैलाएको छ ।

'कल्पतरु'को दुई दशक लामो सङ्घर्ष र इतिहास छ । आफ्नै वेभसाइटमार्फत विश्वभरका नेपाली पाठकमा पुग्नु यसको अर्को सुखद पक्ष हो । उनान्सयौँ अङ्क पनि अघिल्ला अङ्कहरूजस्तै आफ्नो स्तरीयता कायम राख्न प्रयत्नशील देखिन्छ ।

साहित्यिक पत्र-पत्रिकाको भीडमा 'कल्पतरु'ले आफ्नो अलग्गै उचाइ लिन सकोस् ! हार्दिक शुभकामना !



*अमेरिका*



# कल्पतरु र म

✍ मुकुन्द अर्याल

'कल्पतरु' ।

मनले चिताएको फल दिने वृक्षको नाम हो– कल्पवृक्ष ।

साहित्यिक पत्रिकाको नाम नै 'कल्पतरु' ।

शब्दमै कति मिठास । शब्दमै दिव्यताको आभाष !

सायद यही दिव्यताकै कारणले सत्यसाई साहित्यअन्तर्गत राष्ट्रिय वाणिज्य बैङ्कका पूर्वप्रमुख कार्यकारी अधिकृत जनार्दन आचार्यको संस्मरणको नाम नै रहेको थियो– कल्पवृक्ष ।

साहित्यिक पत्रिकालाई कसरी, कसले जुराइदियो यो नाम ? प्रधान सम्पादक नवराजजीले आफ्नो लेखोटमा बताउनु नै होला । 'कल्पतरु'ले मलाई कसरी अँगालोमा बेऱ्यो ? म कसरी यस कल्पवृक्षको लहरामा बाँधिन आइपुगेँ ? यसबारेमा मात्र सिंहावलोकन गर्नेछु यस सङ्क्षिप्त लेखनमा ।

'कल्पतरु'का संस्थापक नवराज पुडासैनी र म राष्ट्रिय वाणिज्य बैङ्कमा लामो समय सँगै काम गऱ्यौँ । त्यसो त रा.वा. बैङ्कमा काम गर्ने कर्मचारी सङ्ख्या ६ हजारको हाराहारीमा थियो । चिनजान धेरैसँग रह्यो तर मित्रता, त्यो पनि घनिष्ठ मित्रता, धेरै कमसँग । यीमध्ये केही निकटतम मित्रहरूको सूचीमा पहिलोमै नवराजजी पर्नुहुन्छ ।

यसको पनि कारण छ । हामी पहिला रा.वा. बैङ्कको विशालबजार शाखामा सँगै काम गर्थ्यौं । चिनजान त्यहीँ भयो । पछि बैङ्कको केन्द्रीय कार्यालयमा फेरि सँगै भयौँ । उहाँ आ.ले.प.मा व्यवसायमा हुनुहुन्थ्यो, म हिसाब तथा खर्च विभागमा, रा.वा बैङ्क, केन्द्रीय कार्यालयको टङ्गाल विभागमा, भेटघाट अलि बाक्लिन थाल्यो ।

०४६ को जनआन्दोलनमा बैङ्कका कर्मचारी पनि जुर्मुरायौँ । जनआन्दोलन सफल भयो । बैङ्कमा युनियनहरू अस्तित्वमा आए । साहित्यप्रति समान अभिरुचि र लोकतन्त्रप्रति समान आस्थाका कारण हामीहरू नजिकिँदै गयौँ । हाम्रै पहलमा बैङ्कमा नवगठित नेपाल वित्तीय संस्था कर्मचारी सङ्घ राष्ट्रिय वाणिज्य बैङ्कको नाममा केही साहित्यिक, केही युनियन गतिविधि र कर्मचारीका आवाज समेटेर 'आह्वान' नामक भित्तेपत्रिका निकाल्न थाल्यौँ ।

समय-क्रममा हाम्रै युनियनद्वारा प्रकाशित गरिने 'मनोभाव'को सम्पादन कार्य मलगायत नवराजजी, कवि दिनेशविक्रम थापाले आलोपालो सम्हाल्यौँ । बैङ्क कमजोर हुँदै गएको बेला बैङ्कप्रतिको जिम्मेवारीबोध बढी हुन थाल्यो । बैङ्कका नयाँ जिम्मेवारी पनि थपिए । युनियनमा भन्दा बैङ्कको काममा बढी खट्ने प्रेरणा मिल्यो । म बैङ्कको मूलप्रवाहमा सामेल भएँ । नवराजजीले पनि प्रेसको मेसो सुरु गर्नुभएछ ।

समय बर्ताएको यसै कालखण्डमा जन्मिएछ 'कल्पतरु' ।

नवराजजीले भि.आर.एस. रोजेर 'कल्पतरु'को पूर्णकालीन अभिभावकत्व लिनुभयो ।

'कल्पतरु'को सम्पादनमा मेरो भूमिका सामान्य रह्यो । म नाममात्रको सम्पादक रहेँ । पहिला रहर थियो, त्यसबखत साथीको करले मात्र । बरु यसको सम्पादनमा मित्र गोकुल अधिकारीको भूमिका उल्लेख्य रह्यो । प्रधान सम्पादकको रूपमा नवराजजीले नै जिम्मेवारी बहन गरिरहनुभयो । उहाँकै योगदानबाट 'कल्पतरु' 'क' वर्गको राष्ट्रिय साहित्यिक पत्रिकामा स्थापित हुनुका साथै राष्ट्रपतिबाट सम्मानित पनि भयो ।

‘कल्पतरु’ बामे सर्दाका सम्झनाहरू ताजै छन् । एक जना अलिअलि सूराको ताल लगाउने मित्रले भन्नुहुन्थ्यो, “तपाईंको पत्रिकाको नाम ‘कल्पतरु’ कि अल्पतरु ?”

यो सुन्दा लाग्थ्यो– ‘कल्पतरु’ कहीँ बीच बाटोमै अलपत्र पर्ने त होइन ? त्यस आशङ्काका बावजुद ‘कल्पतरु’ आज यहाँ आइपुगेको छ । यसको श्रेय यसका रचनादाता, विज्ञापनदाता र आजीवन तथा साधारण सदस्यहरूमा जान्छ ।

प्रारम्भिक अङ्कका लागि विज्ञापन माग्न नवराजजी र म सँगै हिँड्दा गोरखापत्र संस्थानका तत्कालीन प्रमुख किशोर नेपालले प्रथम भेटमै रु. ३०००/– को विज्ञापन उपलब्ध नगराएको भए र त्यसपछि हालका प्रदेशसभा सांसद बहादुरसिंह लामाले लगातार केही अङ्कका लागि विज्ञापन नदिनुभएको भए अहिले ‘कल्पतरु’ १०० औँ अङ्कमा आइपुग्दैनथ्यो कि !

‘कल्पतरु’ समयमै प्राप्त गर्न पाए हुन्थ्यो, आजीवन र अन्य सबै सदस्यहरूका अपेक्षा छन् ।

रचना छापेपछि धेरथोर पारिश्रमिक पाए हुन्थ्यो, हाम्रा सर्जकहरूका अपेक्षा छन् ।

नागरिकलाई सकारात्मक ढङ्गले जिम्मेवार बनाउने, समाज र देशलाई मार्गनिर्देश गर्ने स्तरीय रचनाहरू प्राप्त गर्न पाए हुन्थ्यो, ठीक समयमा ‘कल्पतरु’ प्रकाशन गर्न पाए हुन्थ्यो, हामी सम्पादन समूहको अपेक्षा छन् ।

‘कल्पतरु’ले समाजलाई कही दिन सक्यो या सकेन ? ‘कल्पतरु’ आगामी दिनमा कसरी अघि बढ्नुपर्ला ? यी उत्तर र सल्लाहको जिम्मा ‘कल्पतरु’ का आजीवन सदस्य, पाठक, विज्ञापनदातालगायत सम्बद्ध सबै सरोकारवालाको काँधमा सुम्पँदै १०० औँ अङ्क यहाँहरूको हातमा अर्पण गर्दछौँ ।

■■



# मभित्रको म

✍ कात्यायन



उसले सलबलाउँदै मलाई सोध्यो, “तिमी को हौ ?”

“म मान्छे हुँ ।” मेरो सपाट उत्तर थियो ।

“कस्तो मान्छे ?” ऊ जिस्क्याउँदै थियो ।

मैले, म जो हुँ जस्तो लाग्थ्यो, समाजले जसरी मलाई हेर्थ्यो, व्याख्या नगरी दुरुस्त त्यही भनेँ, “म एक निष्ठावान् राष्ट्रसेवी ! समाजसेवी ! प्रतिष्ठित ... मान्छे !”

ऊ बेस्सरी मेरो मुटुको रालो हल्लने गरेर हाँस्यो । म थुचुक्क घुँडामा शिर राखेर घोप्टिएँ ।

उसले, मलाई जुरुक्क उचाल्दै, सम्मोहन लगाएजस्तै गरी, डोहोऱ्याउँदै घाटको सामु लगेर उभ्यायो । र, फेरि सोध्यो, “भन ! भन ! तिमी को हौ ?”

मेरो उत्तर उही थियो, “म मान्छे ।”

ऊ मबाट खुत्रुक्क बाहिर निस्कियो । अगाडि दन्किरहेको चिताको हुर्हुराउँदो आगोको मुस्लोसँग रत्तिभर नडराई मुस्कुराउँदै, खेल्दै, फेरि पनि मलाई सोध्न थाल्यो, “अब भन ! तिमी को हौ ?”

उसलाई हेर्दाहेर्दै, सुन्दासुन्दै; मेरा दृष्टि र कर्णशक्ति हराए । न आवाज थियो, न शब्द थियो, न मस्तिष्क नै ! न त मभित्रको म !

■■

*चाबहिल, काठमाडौँ-७*



# 'कल्पतरु'को सारथि बन्दा

✍ डा. ऋषि बस्ताकोटी

"'कल्पतरु' अङ्क ८३ को लागि साहित्यिक रचना पठाउनुस् न है !" मेसेन्जरमा नवराज पुडासैनी 'ज्योत्स्ना' को खबर आयो । म कार्यालयको काममा व्यस्त थिएँ । "हस्, म दुईचार दिनमा केही पठाउँला" भनेर छुट्टिएँ । रचना पठाउनका लागि उहाँले आफ्नो इमेल दिनुभयो । फागुनको सुरुवाती दिन, काठमाडौँमा बिस्तारै जाडो घट्दै थियो । साहित्यिक पत्रकारहरूको एक टोली सुदूरपश्चिमको भ्रमणमा थियो । उहाँले मलाई रचना आह्वानको खबर पनि बाटोबाटै पठाउनुभएको थियो ।

म अमेरिकाको नर्थ क्यारोलाइना राज्यमा बस्छु । यहाँ म 'नर्थ क्यारोलाइना नेपाली साहित्य समाज' मा पनि संलग्न छु । यहाँ यो संस्थाले मासिक रूपमा नियमित साहित्यिक कार्यक्रम गर्छ । 'कल्पतरु'को लागि आफ्नो मात्रै रचना पठाउनुभन्दा संस्थाका इच्छुक साथीहरूको पनि केही सामग्री पठाउन पाए राम्रै होलाजस्तो लाग्यो । साथीहरूसँग कुरा राखेँ । ५-६ वटा रचना केही दिनमै जम्मा भए । मैले नर्थ क्यारोलाइनाबाट अरू पनि रचना सङ्कलन गरेको जानकारी सम्पादक पुडासैनीलाई गराएँ ।

"त्यो त झन् राम्रो नि !" उहाँले उत्साह देखाउनुभयो । सुदूरपश्चिमको भ्रमण सकेर काठमाडौँ फर्केपछि विस्तृत कुरा गर्ने निर्णय भयो ।

एउटा नियमित अङ्कमा अमेरिकाको एउटै शहरबाट ४-५ रचना समावेश गर्नुभन्दा बरु विशेष अङ्क पो प्रस्ताव गरूँ कि जस्तो लाग्यो । नर्थ क्यारोलाइना नेपाली साहित्य समाजका तत्कालीन अध्यक्ष शिखर दुलालसँग कुरा गरेको, उहाँले "यो त गज्जप प्रस्ताव नि, गरौ-गरौँ !" भन्नुभयो । यसअघि पनि हामीले 'शारदा' र 'जनमत'सँग मिलेर विशेषाङ्क गरेका थियौँ । प्रसङ्गवश अनेसासका तत्कालीन बोर्ड अफ ट्रस्टी उपाध्यक्ष पदम विश्वकर्मासँग 'कल्पतरु'को बारेमा कुरा भयो । कुरैकुरामा 'उत्तर अमेरिका विशेष अङ्क' पो गर्ने कि भन्ने सोच आयो । पदम र शिखर रचना सङ्कलन र अन्य व्यवस्थापकीय काममा परेको सहयोग गर्न तयार हुनुभयो । ख्यालख्यालमै 'कल्पतरु' 'उत्तर अमेरिका विशेष अङ्क'को खाका बुनियो तर सम्पादकसँग विस्तृत कुरा हुन बाँकी नै थियो ।

भ्रमण सकेर साहित्यिक पत्रकारको टोली काठमाडौँ फर्केपछि एक दिन सम्पादक नवराज पुडासैनी र मेरो विस्तृत कुराकानी भयो । 'कल्पतरु'को लागि यस्तो विशेष अङ्क पहिलो प्रयोग थियो । 'कल्पतरु'लाई बाहिरी भूगोलसँग जोड्ने प्रयास पनि हुन्छ । यो ऐतिहासिक काम गरौँ भन्ने निर्क्योल भयो । नियमित अङ्क ८३ को काम सकेपछि अङ्क ८४ 'उत्तर अमेरिका विशेष' अङ्कको रूपमा आउने भयो । एक महिनाको समयसीमा दिएर अमेरिका र क्यानडाका विभिन्न शहरमा बस्ने नेपाली साहित्यकारहरूबाट रचना सङ्कलन सुरु भयो । हामीले राम्रै सङ्ख्यामा प्रतिनिधिमूलक रचना प्राप्त गऱ्यौँ । मैले 'अतिथि सम्पादक'को जिम्मा लिएर रचना सङ्कलन, प्रारम्भिक सम्पादन र सम्पादकीय लेखनको काम गरेँ । 'नर्थ क्यारोलाइना साहित्य समाज'ले संयोजनको काम गऱ्यो । डा. नारायण राजभण्डारी र मेरो छोरा अभि बस्ताकोटीबाट आवरण डिजाइनमा मद्दत मिल्यो । 'कल्पतरु' परिवारले काठमाडौँबाट बाँकी काम सम्पन्न गऱ्यो । सबै मिलेर एउटा ऐतिहासिक काम सफल भयो ।

कोरोनाको महामारीले विश्व आक्रान्त थियो। मानिसहरू प्रायः घरमै थुनिएका थिए। अफिसको काम, बैठक सबै बिस्तारै भर्चुएल हुन थालेका थिए। प्रविधिले दिएको अवसरलाई प्रयोग गरेर भानु जयन्तीको अवसरमा 'कल्पतरु उत्तर अमेरिका विशेष अङ्क'को जूमबाट विमोचन र परिचर्चा कार्यक्रम गर्ने निर्णय भयो। नर्थ क्यारोलाइना नेपाली साहित्य समाजको आयोजनामा नेपाल, अमेरिका र क्यानडाका साहित्यिक व्यक्तित्वहरूको भर्चुएल उपस्थितिमा 'कल्पतरु उत्तर अमेरिका विशेष अङ्क' विमोचन भयो। यस अङ्कमा समेटिएका रचनाहरूका बारेमा क्यानडाबाट डा. गोविन्दसिंह रावतले टिप्पणी गर्नुभयो। 'कल्पतरु'का सम्पादकले यो अङ्क 'कल्पतरु'को इतिहासमा 'टर्निङ प्वाइन्ट' भएको र यसले अब नेपालबाहिर फैलिन सघाएको बताउनुभयो। एउटा असल कर्ममा सारथि बन्न पाउँदा मलाई पनि खुशी लाग्यो।

'कल्पतरु' मूलतः नवराज पुडासैनीको एकल प्रयासबाट प्रकाशित हुँदै आएको साहित्यिक पत्रिका हो। साहित्यिक पत्रिकाको प्रकाशन संस्थागत रूपमै गर्दा पनि उति सजिलो छैन। एकल प्रयासमा वर्षौंदेखि नियमित प्रकाशित हुनुको पछाडि सम्पादक/व्यवस्थापकको कडा तपस्या र लगन कति छ भन्ने सहजै अनुमान गर्न सकिन्छ। नवराज पुडासैनीलाई मैले करीब बीस वर्षअघि देखि साहित्यिक साधनामा तल्लीन र स्वार्थरहित सादगी व्यक्तिको रूपमा चिनेको छु। 'कल्पतरु'को यात्रामा यहाँसम्म आइपुग्दा कैयौँ साथ भेटिए, हिँड्दै जाँदा कति छुटे, कति फेरि जोडिए। 'कल्पतरु'को यात्रा भने अविचलित, अविराम बढिरहेको छ। उहाँको विनम्रताले 'कल्पतरु'लाई टिकाएको छ, झन् फराकिलो पारेको छ।

उत्तर अमेरिका विशेष अङ्कको प्रकाशन र विमोचनपछि 'कल्पतरु'का सम्पादक पुडासैनीमा नयाँ उत्साह पनि भरियो, चुनौती पनि थपियो। यो चुनौतीमा उहाँलाई एक्लै छाड्ने कुरा भएन। ८४ अङ्कपछि म पनि 'कल्पतरु' परिवारसँग पहिलेभन्दा सघन रूपमा जोडिएँ। अझ भनूँ, कामले फुत्कन नमिल्ने गरी जोड्यो। हामीले समीक्षा गर्‍यौँ, अझ थप राम्रो पार्ने र बिस्तार गर्ने योजना बुन्यौँ। बिस्तार र विकासको नयाँ अभियान नै थाल्यौँ। अहिले १०० औँ अङ्क पाठकको हातमा आइपुगेको छ।

यहाँसम्मको यात्रा गर्दा थुप्रै शुभचिन्तकहरू 'कल्पतरु'सँग जोडिनुभएको छ। ठूलै सङ्ख्यामा विशिष्ट सदस्य, विशेष सदस्य र आजीवन सदस्यहरू बन्नुभएको छ। यसले 'कल्पतरु'माथिको आकर्षण बढाएको प्रमाणित गर्छ। अब बिस्तारै सम्पादकको झोलाबाट 'कल्पतरु' काठमाडौँबाहिर र अझ नेपालबाहिर पनि राम्रै बिस्तार हुँदै छ। देशभित्र मात्र होइन, नेपालीको बसोबास भएका मुलुकहरूमा 'कल्पतरु'का प्रतिनिधि छन्। ऊर्जावान् सम्पादन-समूह छ। साहित्य र व्यवस्थापनमा विज्ञता भएका संरक्षक र सल्लाहकारहरू छन्।

पछिल्लो समय 'कल्पतरु' स्तरीयताको हिसाबले पनि उचाइको सिँढी चढेको भान हुन्छ। स्थापितदेखि सिकारुसम्मका लेखकले स्थान पाएका छन्। विधा, भूगोल, लैङ्गिक र अन्य हिसाबले पनि समावेशी छनक मिल्छ। भाषा, साहित्य, कला र संस्कृतिको विकासमा जिम्मेवारीबोध हुने गरी सम्पादकीय लेखिने गरेका छन्। पुस्तक-वार्ता, चिल्ला पात, नारदीय र पाठक चक्षु नियमित र रोचक स्तम्भको रूपमा स्थापित छन्। डिजाइन र छपाइमा पनि समयअनुकूल फड्को मारेको छ। 'कल्पतरु'मा वर्षभरि प्रकाशित रचनाहरूमध्येबाट उत्कृष्ट रचना पुरस्कृत हुने घोषणा भइसकेको छ।

यसरी १०० अङ्कसम्म आइपुग्दा एकल प्रयासको 'कल्पतरु' आफैँमा एक जिम्मेवार संस्था भइसकेको छ। यस्तो पवित्र कर्ममा सारथि हुन पाउँदा खुशी लाग्छ।



# कल्पतरु

✍ झषनाथ दाहाल



कल्पतरु,
तिमी त सानो बिरुवाबाट हुर्किएर
ठूली तरु भइछौ
हेरिरहूँजस्ती तरुणी भइछौ
अस्तिभन्दा हिजो राम्री
हिजोभन्दा आज राम्री
बान्की परेकी
जति हेऱ्यो, उति राम्री !

एकबाट पाइला चालेर
सय अङ्कमा पुगिछौ
त्यसैले त तिमी सैयौँ साहित्यानुरागीहरूका
मनमा बस्न पुगिछौ
हरिली, भरिली गम्म परिछौ
अनि, फलेर फुलेर ढकमक्क भइछौ
विविध विधाहरूका हाँगाबिँगाहरू फैलाउँदै
तिनमा रसिला, कसिला र हँसिला
नवरसहरू भर्दै
जगतैभरि साहित्यको
गहक र महक फैलाउँदै
अनेकौँ साहित्यानुरागीहरूलाई
आफ्ना प्रतिभा र रूपराशिले मोहित पार्दै
आफ्ना अघिपछि लगाउन समर्थ भइछौ ।

साँच्ची, तिमी त
साहित्य, सङ्गीत र कलालाई
आफूमा लटरम्म फलाई
सबलाई आफ्ना रसिला, चखिला
फलहरू चखाउन सफल भइछौ
अहो ! तिमी त साह्रै मोहनी लगाउने
सुन्दरी तरुणी पो भइछौ !

■■

---

शताङ्क विशेष

# शताङ्क कल्पतरु

✍ प्रद्युम्न पुडासैनी



शताङ्क 'कल्पतरु' अविरल आयौ
सृजनाका सयौँ ज्ञान ममतामा पायौ
नवयुग प्रवेश गऱ्यौ कल्प अभियानी
मातृभूमि, तपोभूमि, ऋषिमुनि ज्ञानी ।

तन, मन, धन लगाई सृजनाका पूजा
जनजनले नगरे त संस्कृति नै धुजा
साहित्यमा समृद्ध भई हुन पायौ ज्ञानी
नेपाल आमा आशीर्वादले हरपल ध्यानी ।

संसारको नयाँ खोज साहित्यको पाटो
नयाँ पिँढी लाग्छन् कल्प अब तिम्रो बाटो
धर्म, संस्कृति, परम्परा साहित्यले बचाऊ
अविरल सेवा तिम्रो संसारलाई बताऊ ।

■■



# कल्पतरूको १०० औँ अङ्क र नवराज पुडासैनी 'ज्योत्स्ना'

✍ दिनेशविक्रम थापा

मैले नवराज पुडासैनी 'ज्योत्स्ना' लाई चिनेको ट्रेड युनियन आन्दोलनको सहयात्रीको रूपमा हो । नेपालको ट्रेड युनियन आन्दोलनमा उहाँको योगदान बिर्सिनसक्नुको छ । उहाँको सरल जीवनशैली, मित्रवत् व्यवहार र खट्न सक्ने खूबी मलाई औधी मनपर्छ । नेपाल वित्तीय संस्था कर्मचारी सङ्घ, राष्ट्रिय वाणिज्य बैङ्कभित्रको ट्रेड यूनियनको नेतृत्व तहमा बसेर उहाँले काम गर्नुभयो । उक्त ट्रेड युनियनको प्रकाशन 'मनोभाव'लाई साहित्यिक रूप दिनमा उहाँको सोचले काम गरेको हुनुपर्छ । मनोभावमा उहाँका कविता, गजल, गीत र कथाहरू छापिएपछि उहाँलाई साहित्यकारको रूपमा चिन्ने अवसर प्राप्त भयो । हामी एउटै डुङ्गाका यात्री थियौँ, छौँ र हुनेछौँ । किनकि, हामी उस्तै-उस्तै छौँ ।

'मनोभाव'को वर्ष ४, पूर्णाङ्क १४ देखि सम्पादकको रूपमा अङ्क ३० सम्म उहाँको निरन्तर योगदान अतुलनीय छ; स्तुत्य छ । 'मनोभाव'लाई नेपाली साहित्यको क्षेत्रमा अग्रणी प्रकाशनको रूपमा परिचित गराउन उहाँको हात छ । कथा विशेषाङ्क, कविता विशेषाङ्कका रूपमा 'मनोभाव' उहाँकै पालामा निस्केको हो ।

जिल्ला प्रशासन कार्यालय, काठमाडौँमा दर्ता नं. १३/०५४/०५५ बाट 'कल्पतरू' द्वैमासिक दर्ता भएको हो । साहित्यप्रतिको निष्ठा र समर्पण-भावका कारण उहाँले सुटुक्क पत्रिका दर्ता गरेको देखिन्छ । त्यसको केही वर्षपछि यसको प्रकाशन प्रारम्भ भयो र अहिले १०० औँ अङ्क निस्केको छ ।

'कल्पतरू' र नवराज पुडासैनी 'ज्योत्स्ना' एकअर्काका परिपूरक हुन् । 'कल्पतरु' अर्थात् नवराज पुडासैनी 'ज्योत्स्ना' र नवराज पुडासैनी 'ज्योत्स्ना' अर्थात् 'कल्पतरु' । नेपाली साहित्यका पाठकहरूले यसै गरी बुझ्ने गरेको समय हो अहिले । मलाई सम्झना छ– डिल्लीबजारमा 'कल्पतरु'को कार्यालय रहँदा हरेक वर्ष 'कल्पतरु साँझ'को ब्यानरमा भव्य साहित्यिक कार्यक्रमहरू सम्पन्न भएका थिए । यसले प्रस्ट पार्छ कि नवराज पुडासैनी 'ज्योत्स्ना' मा साहित्यसेवाको भूत चढेको धेरै वर्ष भइसकेको छ ।

नेपाली समाजमा साहित्यप्रतिको अनुराग अहिले पनि कमी छ । साहित्यलाई अनुत्पादक क्षेत्रका रूपमा हेर्ने सोच र दृष्टिकोण अहिले पनि कायम छ । सरकारी निकायहरू साहित्यमा सहयोग र योगदान गर्न सधैँ हिचकिचाएको देखिन्छ । तर, साहित्य समाजको दर्पण हो । साहित्य देशको सभ्यताको मानक हो । साहित्य देश चिनाउने क्षेत्र हो भने यो अनुत्पादक क्षेत्र कसरी हुन सक्छ ?

नेपालमा निजी क्षेत्रका साहित्यिक प्रकाशनहरूले नेपाली साहित्यलाई गतिशील बनाएका छन् । साहित्य उत्थानमा ठूलो गुन लगाएका छन् । त्यसै मेसोमा 'कल्पतरु' प्रकाशनको १०० औँ अङ्कसम्मको यात्रा एउटा ज्वलन्त उदाहरण हो । खर्च उठे पनि प्रकाशनको निरन्तरता अत्यन्तै कठीन कर्म हो । यो कठीन कर्म जो-कोहीले गर्न सक्दैन । जसले गर्छ, ऊ नै साहित्यको सच्चा सेवक हो । नेपालमा साहित्यिक पत्रिकाहरू धेरै नजन्मँदै मर्छन्, धेरै जन्मेपछि मर्छन् र केहीमात्र सङ्घर्ष गर्दै बाँच्छन् । 'कल्पतरु' सङ्घर्ष गर्दै बाँचेको प्रकाशन हो ।

राष्ट्रिय वाणिज्य बैङ्कबाट निवृत्त कर्मचारी नवराज पुडासैनी 'ज्योत्स्ना' निकै रसिला र फरासिला

हुनुहुन्छ । उहाँले साहित्यको कारखाना चलाइरहनुभएको छ । नयाँ पुस्तालाई अवसर र पुरानो पुस्तालाई सम्मान गर्दै 'कल्पतरु'बाट साहित्यकार जन्माइरहनुभएको छ । यो अत्यन्तै सुखद कुरा हो । हामी सबैले 'कल्पतरु'को अनन्त जीवनका लागि सक्ने सहयोग गर्नुपर्छ । यो नै साहित्यको एउटा अथक् सेवकलाई गरेको सम्मान हुनेछ ।

अनकन्टार पहाड, सुलुत्त परेको चट्टान र चट्टानमा चिप्लेटी खेल्दै बगेको पानीको झरनाले सबैको आँखा तान्छ, मन लोभ्याउँछ । तर त्यो पहाड, चट्टान र पानीका अन्तरपीडाहरू पनि त छन्, त्यो बुझ्ने सामर्थ्य हामीमा निकै कम छ । सग्लो रूपमात्र बुझ्न सजिलो हुन्छ । त्यस्तै हो, साहित्यिक प्रकाशनको जीवनयात्रा पनि । हरेक अङ्क हातमा थमाइदिनुहुन्छ- नवराजजी, पिडिएफ पठाइदिनुहुन्छ- नवराजजी । हामी 'कल्पतरु'को स्वरूप हेर्छौं, दङ्ग पर्छौं, रचना पढ्छौं, मक्ख पर्छौं तर हामी 'कल्पतरु'का हरेक अनुहारभित्र नवराज पुडासैनीको मेहनत कम देख्छौँ, दुःख देख्दैनौँ। दुई-चार थान विज्ञापनमात्र देख्छौँ, पीडा देख्दैनौँ।

प्रकाशन पनि नशा हो— राजनीतिजस्तै, जुवा-तासजस्तै, मद्यपान र धुम्रपानजस्तै । नवराज पुडासैनीलाई यस्तै नशा लागेको छ । यो नशा सकारात्मक नशा हो । बौद्धिक नशा हो । सार्थक नशा हो । काँडा कुल्चँदै हिँडिरहनू, आगो टेक्दै अघि बढिरहनू नवराज पुडासैनी ! 'कल्पतरु'लाई आखिर उसको गन्तव्यमा पुर्‍याउनु नै छ । काँडाले रक्ताम्य बनाइदिन्छ पाइताला, आगोले पोल्छ पाइताला, यो अनुभूति सबैले गर्न सक्दैनन् । तर, तपाईंमा त्यो क्षमता छ सहनशीलताको र त सफलताका शिखर नजिकै पुग्नुभएको छ ।

'कल्पतरु'को यो १०० औं अङ्कसम्मको निरन्तरताका लागि बधाई दिन्छु र यसको अनन्त यात्रा र सुन्दर भविष्यका लागि मनैदेखि शुभकामना ! प्रकाशक तथा प्रधान सम्पादक, कार्यकारी सम्पादक, सम्पादक, उप-सम्पादक, लेखक, शुभेच्छुक, विज्ञापनदाता र पाठक गणलाई पनि बधाई भन्छु । जय साहित्य ! जय 'कल्पतरु' !

■■



# गजल

## ✍ शकुन ज्ञवाली



उस्तै नै छन् रे डहर मूलबाटो, मैले गाम-बेसी गर्ने गरेको
उस्तै नै छन् रे कुवा-पँधेरा ती मैले पानी भर्ने गरेको

खन्युको रूख, काफलको बोट अहिले नि फल्छन् रे त्यस्तै
उस्तै नै छन् रे बारीका पाटा ती मैले कोदो छर्ने गरेको

खोलाको छेउमा धानैको फाँट, अलि मास्तिर बयर घारी
उस्तै छन् रे नदी र खोला, म हिउँद-बर्खा तर्ने गरेको

गणेशका थानमा लड्डु र दूबो देउरालीलाई ध्वजा-पाती
उस्तै नै छन् रे देवी र देउता, मैले शरण पर्ने गरेको

निष्ठुरी पक्कै भन्दा हुन् मलाई— बोकेर हिँडे झिटी र गुन्टा
हेर्दा हुन् फोटा, सुन्दा हुन् खबर, मैले बसाई सर्ने गरेको ।

■■ *अमेरिका*



# 'कल्पतरु'भित्र म

✍ रेहित सैँजु

मलाई 'म'पछि असाध्यै प्रिय लाग्ने शब्द हो 'कल्पतरु' । सायद म यसमा जोडिनुको कारण पनि हुन सक्छ । त्यसो त 'कल्पतरु'मा जोडिनुपूर्व मैले यो शब्द सुनेकै थिइनँ । जब सुनँ, मनमा नमेटिने गरी छाप लाग्यो । 'कल्पतरु' आफैँमा मीठो नाम, यसको शाब्दिक अर्थ झनै मीठो छ । प्रज्ञा नेपाली बृहत् शब्दकोशले 'कल्पतरु' शब्दलाई 'चिताएको कुरा पुऱ्याउने एक प्रकारको वृक्ष, कल्पवृक्ष' भनेर परिभाषित गरिदिएको छ । तसर्थ, यो शब्द मीठो नहुने कुरै भएन ।

किशोर वयमा डुलिरहेको एउटा केटो कसरी 'कल्पतरु' साहित्यिक पत्रिकामा जोडिन आइपुग्यो ? म आफैँलाई प्रश्न गर्छु कहिलेकाहीँ तर मैले उचित जवाफ म आफैँभित्र पनि भेट्न सकेको छैन । साहित्यमा रुचि भन्दा पनि आफ्नै घटना, परिघटना, परिवेशलाई साक्षी राखेर लेख्न मन लाग्थ्यो । अलिअलि भए पनि चेतनाको भाव जगाउन मन लाग्थ्यो । परिवर्तनको मुस्लो बोकेर विसङ्गत वर्तमानको विरुद्धमा केही कोर्न मन लाग्थ्यो र कोरिरहन्थेँ पनि । कतिलाई देखाइयो, कतिलाई सुनाइयो पनि । अनि, उनीहरूले भन्ने गर्थे, "तँ त साहित्य पो लेख्दो रै'छस् ।" म आफैँलाई थाहा थिएन, साहित्यको परिभाषा मैले जानेको थिइनँ । अनभिज्ञ थिएँ र अहिले पनि यो क्रम चलिरहेको छ ।

नवराज पुडासैनीसँगको चिनाजानीको स्रोत सामाजिक सञ्जाल बन्यो । तीलगङ्गा आँखा अस्पतालको आँखारोग विशेषज्ञ डा. रोहित सैँजु भनेर जोड्नुभएको रहेछ उहाँ । मैले भ्रम चिर्न स्पष्टीकरण व्यक्त गर्दा उहाँ खूब हाँस्नुभएको थियो । मलाई पनि कताकता रमाइलो लाग्यो । उहाँ साहित्यिक पत्रिका 'कल्पतरु'को प्रकाशक तथा सम्पादक हुनुहुन्थ्यो । यसै कुराले म उहाँप्रति आकर्षित भएको थिएँ । म उहाँसँग निकटमा रहन चाहन्थेँ र निरन्तर कुरा गरिरहन्थेँ । त्यतिखेर विश्वब्रह्माण्डलाई जैविक भाइरस कोरोनाले आक्रान्त बनाइरहेको थियो । मानव जाति बन्द कोठाभित्र थुनिनुपरेको थियो । उहाँसँग आत्मीय सम्बन्ध हुनु, सम्पर्क नवीकरण भइरहनु यसैको उपज पनि हो ।

मैले एक दिन कुरैकुरामा मलाई पनि पत्रिकाको सम्पादक बन्न मन लागेको कुरा व्यक्त गरेँ । उहाँले यथाशीघ्र स्वीकार पनि गर्नुभयो । ८७ औँ अङ्कमा म अतिथि सम्पादक रहेर मुक्तक विशेषाङ्क निकाल्ने कुरा हामीबीच भयो । मभित्रको युवा जोश, जाँगर र कुतूहलले समयमै निकाल्न सफल भयौँ । यसरी उहाँले 'कल्पतरु'मा मलाई उपसम्पादक पदमा राखिदिनुभयो र आजसम्म छु ।

अहिले हामीले बाँचिरहेको वर्तमान विज्ञान–प्रविधिले खाइसकेको छ । संसारलाई द्रूतगतिमा विद्युतीय सञ्जालले बेरिरहेको छ । छापा माध्यमबाट प्रवाह हुने धेरै सेवाहरू विद्युतीय माध्यममा रूपान्तरित भइसकेका छन् । अझ भनौँ छापा माध्यम बिस्तारै लोप हुने अवस्थामा छ । यसबाट साहित्यिक पत्रपत्रिकामात्रै अछूतो रहन सक्ने कुरा भएन । समयको मागलाई शिरोपर गर्दै 'कल्पतरु'को आफ्नै वेभसाइट र पिडिएफ विद्युतीय सञ्जाल पुगेको छ र जुनसुकै कुनाबाट प्राप्त गर्ने सुविधा उपलब्ध छ ।

मलाई लाग्छ– साहित्यसेवा सबैभन्दा ठूलो सेवा हो । तन, मन, वचन सबै स्वच्छ, पवित्र हुनेले मात्र साहित्यसेवा गर्न सक्छन् । विभिन्न समय, कालखण्ड, परिस्थितिलाई छिचोलेर 'कल्पतरु' पत्रिका एकोहोरो, दोहोरोहुँदै तेहरो अङ्क १०० मा प्रवेश गरेको छ । यो हाम्रो अमूल्य क्षण हो । व्यक्तिगत प्रयासले धान्दै आइरहेको एउटा साहित्यिक पत्रिका निरन्तर प्रकाशन भइरहनु,

१०० औँ अङ्क (शताङ्क) सम्म आइपुग्नु ख्यालख्यालको कुरा होइन । साहित्यिक पत्रिका यस्तो यात्री हो, जो एक्लै हिँड्छ । उसको यात्रा अविराम हुन्छ । विविध आरोह-अवरोह पार गरेर अनेक परिस्थितिका नाकाहरू छल्दै गन्तव्य तय गर्नुपर्छ ।

साहित्य समाजको दर्पण हो । म, हामी, तपाईं अनि समाज कुन अवस्थामा थियौँ, छौँ र जाँदै छौँ भन्ने कुरा सिर्जना र साहित्यिक गतिविधिले थाहा पाइँदो रहेछ । समाजमा सकारात्मक सन्देश प्रवाह गर्दै शान्तिपूर्ण वातावरण स्थापना गरेर विकासको खाका कोर्ने काम साहित्यले गर्दछ । इतिहास साक्षी छन्– सर्जकले कलमले लेखेरै कैयौँ युद्ध परास्त गर्न सफल भएका छन् ।

अन्त्यमा, 'कल्पतरु' म, तपाईं, हामी सबैसबैको हो । लेखकको सिर्जना, पाठकको सल्लाह-सुझाव र चाहनाले 'कल्पतरु' नामजस्तै सार्थक बन्न सक्छ । सम्पादक मण्डल, लेखक र पाठकसँग सहकार्य गर्दै आत्मीय सम्बन्ध स्थापित गर्न 'कल्पतरु' सदैव तत्पर छ । यसमा मेरो र तपाईंको, हामी सबैको लगाव, धैर्य, निरन्तरता हुनु जरुरी छ । हामी यही अपेक्षा राख्दछौँ ।

■■

*रामेछाप*





# हामी भिखारी भयौँ

✍ **दुर्गा थापामगर**



के नाप्यौ भन मिष्ठ भाषण दिँदै, यो राष्ट्र हाँक्नेहरू
हाल्यौ खाडलमा स्वदेश अब खै, के नै छ बाँकी अरू
नेपाली जन दिव्य यी प्रकृतिले, शौभाग्यशाली थियौँ
बेच्यौ ती बहुमूल्य स्रोत जगको, हामी भिखारी भयौँ ॥१॥

माग्यौ भोट विकास गर्दछु भनी, आशा-भरोसा दिँदै
देखायौ सपना ठूला कसम ती, खाएर धर्ती छुँदै
तिम्रो साथ दियौँ सबै मिलिजुली, खै के भयो आखिर
जे-जे गर्नु गऱ्यौ सकेर ढुकुटी, आफन्तकै खातिर ॥२॥

पुर्खाको सपना मिल्यो बगरमा, मान्यौ त केही पिर
नेपाली जतिको ल हेर कसरी, साह्रै झुकायौ शिर
थप्दै छौ अनुदान व्यर्थ ऋणमा, झन् भासिँदै पो गयौँ
तिम्रै कारण आज सङ्कट पऱ्यो, हामी भिखारी भयौँ ॥३॥

बित्था भाषण पो रहेछ सहजै, काट्यौ तिमीले भर
मानेनौ डर भोलि ती कसमले, पोल्नेछ हेक्का गर
हाम्रै काँध चढेर राज गरिँदै, भारी थमायौ ऋण
सोध्दै छौँ जनता कहाँ अधम भै, यत्रो लगायौ ऋण ॥४॥

गर्छौ मोज घुमेर छैन उपती, चर्को असुल्छौ कर
बेच्ने हौ कि त देश न्यून धनमा, लाग्दैन तिम्रो भर
राख्यौ जाल र झेलमा हरघडी, फिर्नै दिएनौ दिन
ए नेता, भन ! तिर्नुपर्छ कसरी, खाँदै नखाको ऋण ॥५॥

■■

*बुटवल-११*

hास्यव्यङ्ग्य

# साइनोपातिक मान्नेजु मैच्याङको मनोहर कहानी

✍ भोजराज रेग्मी मुखाले



जुनीभरिमा सबैको पालो आउँछ, आफ्नो पालोमा लाटोबुङ्गोले पनि जुँगामा ताउ लाउँछ । भैरव बाजेको आलु खाएर पिँडाली बाजेको पेडाको धाक लाउँछ । चुकुल बिग्रेको चर्पीमा सुसेलेर कन्सर्टमा गीत गाएर तहल्का मच्चाएको फूर्ति लाउँछ । मान्छेको स्वभाव न हो, मौका पाए धाक-धक्कुमात्र हैन, भ्वाँक चल्दा चक्कु पनि लाउँछ । सित्तैमा पाए अलकत्रा पनि खान्छ । जेठको गर्मीमा बख्खु पनि लाउँछ ।

अँ, साँच्ची ! पालोको प्रसङ्ग आउँदा-आउँदै कुरो पिलित्तै चिप्लेर बख्खुमा पो पुगेछ है ! लु, भैगो ! अब सोझिऊँ मूलबाटोतिरै ।

नेपाली राजनीतिमा चौरासी गर्ने बेलाका बूढा साँढेहरूले जुरे बहरहरूलाई पालो नदिएर बाच्छाबाच्छीहरूले पनि गालो फुलाएर बसेको बेलाँ नेपाली सहित्यमा भने तारानाथ बाजेको अकबरे अक्कलबाट 'नियात्रा' नाम पाएको यात्रासंस्मरणले भने आफ्ना बाउकाका– कविता, आख्यानबाट मनमाफिक आलोपालो पाएको छ र बेस्सरी रमाएको छ । तारानाथ बाजेको दौराको फेर समाएर 'बेलाइततिर बरालिँदा'देखि नै यात्रासंस्मरणले पालो पायो र मौकामा चौका हान्यो भन्दा कुनै मुसुमुन्द्रेको माथा खराब हुँदैन नै होला ।

यो नियात्रा उर्फ यात्रासंस्मरणको पालो यस्तरी उल्मुलिएर आयो कि अब त बूढ्यौली बेलासम्मै कवितामै रमाएका र कथाकुथुङ्ग्रीको खोरिया फाँडेर आसन जमाएका 'बा-आमा'हरूमात्रै हैनन्, दादा, दिदी, साली-सोल्टी अनि भेनाजु र ज्वाइँनारानहरू पनि पो आफ्नो चिनारीको कोट-पेटीकोट फुकालेर 'नियात्राकार'को कस्टम लाएर नियात्राको स्विमिङ पुलमा भ्यामभ्याम हाम फाल्न थालेका छन् । साहित्यको बजारमा ग्ल्यामरस देखिन थालेका छन् । बैँसको स्यालजस्तै नियात्रा पनि घोर्ले भएको छ अचेलभरि । म त यो नियात्रा भन्ने 'नायक' को फ्यान भएको छु भन्दा यस माम्लाका अनाडीहरूको पनि पक्कै ज्ञान बढ्दो हो भन्ने अन्धविश्वासमा छु ।

आफ्नो त पिण्ड खाने बेलासम्मै पालो नआउँदा पनि, सिँगाने सालोले समेत सिन्कोजति पनि नपत्याउँदा पनि रत्ति आत्तिएको छैन । आफ्नो खप्पराँ सुवर्णाक्षरमा लेखिएको जोइटिङ्ग्रे जुनीमा बिहेको बाईसौँ बर्खगाँठ आफ्नै मैच्याङको मेनेजमेन्टमा मनचिन्ते मनाइसक्दा पनि पालोमा सुधार बीसको उन्नाईस भएको छैन । बरु मेरै घरकी साख्खै स्वास्नीले पो छ महिनामै छलाङ मारेर छक्क पारिन् । चुनाउको बेलाँ लखन्तरे पार्टीको साइनोपातिक कोटामा परेकी मेरी मैच्याङले सर्खारिको भान्सामा आलो गन्हाएर पालो पाउँदा छ महिने मन्त्रीको जागिर पाइन् । भोकले हत्तु भएका बङ्गुरले ढिलो गरी चारो भेट्टाउँदाझैँ मन्त्री खानेको हानाथाप भएपछि लाउके ब्वाइफ्रेन्डको सिफारिसमा टाउके नेताको कृपाले सारसौँदो 'चिया मन्त्रालय'लाई तीन चिरा पारेर बल्लतल्ल 'चियापत्ती मन्त्रालय' पोल्ट्याउन सफल भइन् भनेर औँसीपूर्नेको जाँडपार्टीमा खोक्न पाउँदा पनि अझै मेरो नाकको पोरा फुलेर आउँछ ।

उनले चियापत्ती मन्त्रालय चलाउन थालेको चार दिनपछि नै आफ्नै नेताका आउरेबाउरे र चेपागाँडा च्यापेर वारिको चाक्सीबारीदेखि पारिको चेन्नईसम्म चहारिन् । मेरो घरको दारिद्र्य नामको दुम्सीलाई पनि शिकार गरिन् । उनको भलिभाँती भाग्य र भक्कुमार चतुऱ्याइँले ओतप्रोत भएर मेरो जोइटिङ्ग्रे जीवन पनि धनधान्य भएको छ ।

कविता

# त्रिवेणीको पानी

✍ केशव ज्ञवाली ‘आगत’



सहअस्तित्व देख्नै नसक्ने र
अरूलाई सिध्याउनमै आफ्नो शक्ति देख्ने
समयको साक्षी बसेर ल्याप्चे लगाउन
सधैँ अभिशप्त छैनौँ हामी
तर, दस्ताबेजहरू साक्षी छन्
विगतले हामीलाई
कतै बोल्न दियो तर
कतै चुलोमा आगो बल्नै दिएन
कतै भात पाक्न दियो तर
कतै स्वतन्त्र विचार राख्नै दिएन
बुद्ध जन्मिसकेका थिए तर कतै शान्ति थिएन ।

एउटा बुद्ध
जो अहिंसाका पुजारी जन्मिसकेका थिए
एउटा अब्राहम
जो प्रजातन्त्रका साधक जन्मिसकेका थिए
एउटा मार्क्स
जो समानताका उपासक जन्मिसकेका थिए
तैपनि
हामीले निसङ्कोच भन्न सकेनौँ–
उनीहरू
सात अर्ब मान्छेहरूका लागि हुन् ।

हामी कसैप्रति
अचाक्ली अनुबन्धित छैनौँ भने
अब म
एउटा यस्तो सुन्दर र समृद्ध समय बनाउँछु
जहाँ, अब जन्मिने
एउटा बुद्ध
एउटा अब्राहम
एउटा मार्क्स
एउटै मुस्कानमा एक हुन सक्छन्
त्रिवेणीको पानीझैँ
सात अर्ब प्रत्येक मान्छेहरूभित्र ।

■■

*रुरुक्षेत्र, गुल्मी , हाल : सूर्यविनायक, भक्तपुर*

---

मान्छे त अग्घोरै बाठी हुन्, मेरी आइमाई । मन्त्री भाको मौका छोपेर पालिकाको पोखरी उद्घाटन गर्न जाँदा पनि नौकाविहार गरिन् । शौचालयको कमोडमा बसेर आफैँले चिया पिएको होर्डिङ बोर्ड गाउँगाउँमा टाङ्न लाएर चियाको बजार प्रवर्द्धनमा चमत्कार देखाइन् । जिन्दगीमा पैलोचोटि पाएको मन्त्री पद, त्यो पनि चियापत्ती मन्त्रालय । भो ! नकुरा गरौँ ! मन्त्रालयमा परम्परादेखि चल्दै आएको चाचुचा अर्थात् चाकडी, चुक्ली, चापलुसी प्रथालाई चियाजत्तिकै स्वास्थ्यबर्द्धक ठान्दै यसको संस्थागत विकासको लागि आफूले जे पनि गर्ने भनेर ठाउँठाउँमा भाषण ठोकिन् र भेडाहरूबाट करतलध्वनिसहित वाहवाही बटुलिन् । अब उनको अर्को मास्टर योजना छ रे– टुँडिखेलको खाली ठाउँमा चिया रोपेर टिकटक गार्डेन बनाउने र टिकटके भैया र मैयाहरूको तीर्थस्थल बनाउने । यत्तिका कुरा चाल पाएपछि पक्कै पनि तपाईं मान्नेजु मैच्याङको हान्नेजु फ्यान भैवरी लखन्तरे पार्टीको फुमन्तरे सदस्यता लिन एउटो खुट्टो उचालिसक्नु भो होला ।

ए, ए पख्नुस्त ! पख्नुस्त ! हेत्तेरी ! कत्रो हतार भन्या ! हवाँ मन्त्रीज्यू त चियासँगै टिकटक बनाउँदा-बनाउँदै आजै एकापरातै कुर्सीबाट लड्नुभो ! टाउके नेताले कुर्सी नै खोस्देका रे ! चियाको केत्ली-सेत्ली फुटालेर रोको रोयै होइसिन्छ ।

■■



# छद्मभेष

✍ शार्दूल भट्टराई

*(कर्ण आफ्नो निवासबाहिर उभिइरहेका छन् । उनी एक्लै छन् र केही सोचिरहेझैँ देखिन्छन् । उनको एक्लो अवस्थालाई भङ्ग गर्दै एक ब्राह्मण प्रवेश गर्छन् ।)*

**कर्ण :** स्वागत छ तपाईंलाई । कहाँबाट आउनुभएको होला ब्राह्मण ?

**ब्राह्मण :** म निकै टाढादेखि आएको छु ।

**कर्ण :** काम के होला ?

**ब्राह्मण :** म तिमीसँग केही चिज माग्न आएको छु, वीरवर । दिन सक्छौ ?

**कर्ण :** मैले एउटा प्रतिज्ञा नै गरेको छु – म आफूसँग भएको चिज 'छैन' पनि भन्दिनँ र 'दिन्नँ' पनि भन्दिनँ । मसँग भएकै चिज तपाईं माग्न खोज्दै हुनुहुन्छ भने म त्यो चिज दिन तयार छु ।

**ब्राह्मण :** म तिमीसँग भएकै चिज माग्न चाहन्छु ।

**कर्ण :** त्यसो हो भने भन्नोस्, के चाहनुहुन्छ तपाईं ?

**ब्राह्मण :** म सामान्य ब्राह्मण हुँ । ब्राह्मणहरू अलि बढी नै लोभी हुन्छन् भन्छन् तर म लोभी छैन । म जग्गाजमीन चाहन्नँ । सुनचाँदी र स्वर्णमुद्रा पनि चाहन्नँ । अन्य अतिरिक्त लाभको कुरा पनि म गर्दिनँ । सुरासुन्दरीको चाहनामा म यहाँ आएको पनि होइन । त्यस्ता कुरा मलाई चाहिँदा पनि चाहिँदैन ।

**कर्ण :** तपाईंले चाहेको कुरा के हो, त्यो भन्नोस् ब्राह्मण ।

**ब्राह्मण :** तिमी सत्यवक्ता हौ भन्ने मलाई लाग्छ ।

**कर्ण :** हो, म सत्यवक्ता नै हो । म भूटो कहिल्यै बोल्दिनँ । म जे बोल्छु, त्यो पूरा गरेरै छोड्छु । म जे गर्दिनँ, त्यसबारेमा बोल्दै बोल्दिनँ । भन्नोस्, तपाईं के चाहनुहुन्छ ?

**ब्राह्मण :** म तिम्रो शरीरमा टाँसिएका कवच-कुण्डल चाहन्छु । तिमी तिनलाई काटेर मलाई दिन सक्छौ ?

**कर्ण :** ओहो ! कवच-कुण्डल त कसरी दिऊँ म ? म जन्मिँदा मेरो शरीरसँगै जन्मेका कुरा म कसरी दिऊँ ? जसले गर्दा म संसारमा अवध्य बनेको छु, तिनै कुरा कसरी तपाईंलाई दिऊँ ? कस्तो धर्मसङ्कटमा पार्नुभयो तपाईंले मलाई ! कवच-कुण्डलको सट्टा अरू कुनै चिज माग्नोस् न, हुन्न ?

**ब्राह्मण :** दानवीर कर्ण, म तिमीसँग अरू चिज माग्दिनँ ।

*(कर्ण सोच्न थाल्छन् । ब्राह्मण चुपचाप बसिरहन्छन् ।)*

**कर्ण :** हुन त मलाई पहिल्यै थाहा थियो यो कुरा ।

**ब्राह्मण :** हो र, कसरी ?

**कर्ण :** जसरी भए पनि मलाई थाहा थियो ।

**ब्राह्मण :** सूर्यले भने होलान् ।

**कर्ण :** सूर्यले भने पनि, चन्द्रले भने पनि मलाई पहिल्यै थाहा भैसकेको थियो ।

**ब्राह्मण :** त्यो त मलाई पनि थाहा भइसकेको कुरा हो ।

*(दुवै जना सोच्न थाल्छन्)*

**कर्ण :** हुन त केही दिनु त्याग हो तर केही दिएवापत केही लिनु त्याग होइन । त्यसमा त स्वार्थ जोडिएको हुन्छ । (***सोचेर***) यसो गरौँ, हामी धनसम्पत्ति र कुनै वस्तुको होइन अरू नै कुराको सट्टापट्टामा काम गरौँ, हुन्छ ?

**ब्राह्मण :** कस्तो सट्टापट्टा ?

**कर्ण :** यस्तो सट्टापट्टा कि जसबाट तपाईँ पनि कमजोर नहुनुहोस्, म पनि कमजोर नहोऊँ । तपाईँ पनि कसैबाट पराजित हुनुनपरोस् । म पनि कसैबाट पराजित नहोऊँ । हामीसँग जुन शक्ति छ, त्यो शक्तिमाथि प्रश्न उठाउने स्थिति नरहोस् । केवल शक्तिको सट्टापट्टा !

**ब्राह्मण :** कुरा राम्रो छ । तर, त्यस्तो सट्टापट्टाको कुरा के हुनसक्छ त ?

**कर्ण :** तपाईँले मागेको चिज मैले दिनुपर्ने हो भने तपाईँ पनि मलाई केही दिनोस् ।

**ब्राह्मण :** मसँग भएको बज्र म कसैलाई दिन सक्दिनँ । त्यसबाहेक म तिमीलाई जे पनि दिन सक्छु ।

**कर्ण :** त्यसो हो भने तपाईँ मलाई अमोघशक्ति दिनोस् । म तपाईँलाई कवच-कुण्डल दिन्छु ।

*(ब्राह्मण सोच्न थाल्छन् । कर्ण चुपचाप ब्राह्मणको अनुहारमा हेरिरहन्छन्)*

**ब्राह्मण :** मलाई लाग्छ– यसमा हामी दुवैलाई खासै घाटा हुनेछैन । कालान्तरमा बरु नाफा नै होला । म यो शक्तिको सट्टापट्टा प्रस्तावमा मञ्जुर छु, कर्ण । ल, तिमी मेरो अमोघशक्ति लिइहाल । तिमी पनि मलाई कवच-कुण्डल दिइहाल ।

**कर्ण :** हुन्छ, तपाईँलाई कवच-कुण्डल झिकेर दिइहाल्छु ।

*(ब्राह्मण पलेटी कसेर जपध्यानमा लाग्छन् । कर्ण आफ्नो कानका जोर कुण्डल र छातीको कवच लुछ्न थाल्छन् । बिस्तारै अँध्यारो हुन्छ । ब्राह्मणको अस्पष्ट आवाज आउने-जाने गर्छ । त्यसपछि कर्णले छातीको कवच लुछेको आवाज आउँछ । फेरि बिस्तारै उज्यालो हुन्छ । कर्णको छातीबाट तर्तरी रगत चुहिरहेको हुन्छ ।)*

**ब्राह्मण :** (*कर्णको शिरमा हात राखेर*) ल, मैले आफ्नो अमोघशक्ति तिमीलाई दिएँ ।

**कर्ण :** (*कवच-कुण्डल दिँदै*) ल, तपाईँ पनि मेरा कवच-कुण्डल लिनोस् ।

*(दुवै जना आआफ्नो शक्तिको सट्टापट्टा गर्छन् । ब्राह्मण निकै खुशी देखिन्छन् भने कर्ण निकै दुःखी देखिन्छन् ।)*

**ब्राह्मण :** तर, म तिमीसँग एउटा प्रश्न गर्न चाहन्छु । तिमीले आफ्नो जुन शत्रुलाई लक्ष्य गरेर यो अस्त्र मागेका छौ, त्यो अर्जुन हो । अर्जुन आफैँ कृष्णद्वारा संरक्षित छ । अनि, तिमी यो अस्त्रबाट केचाहिँ उपलब्धि हासिल गर्न चाहन्छौ ?

**कर्ण :** जे हुन्छ, त्यो होओस् तथापि मेरो उद्देश्य त सङ्कटमा पनि म आफ्नो प्राणको रक्षा गर्न सकूँ, मेरो शरीर कहीँकतै बीभत्स नबनोस् र म आफ्नो शत्रुलाई मार्न सकूँ भन्ने नै हो ।

**ब्राह्मण :** त्यतिमात्र हो ?

**कर्ण :** हो । यसबाहेक मेरो स्वार्थ केही पनि छैन ।

**ब्राह्मण :** तिमी पनि सत्तास्वार्थसँग त जोडिएकै छौ नि !

**कर्ण :** त्यस्तो छैन । मेरो स्वार्थ अर्कै हो; आफ्नो अस्तित्व, मान र स्वाभिमानको स्वार्थ । मेरो स्वार्थलाई कसैले सत्तासँग जोड्ने गरेका छन् । त्यो गलत हो ।

**ब्राह्मण :** त्यो आफूलाई निःस्वार्थी र त्यागी देखाउने तिम्रो प्रयत्नमात्र हो । मैले तिमीलाई सत्ता-स्वार्थभन्दा बाहिर कतै पनि देखेको छैन । तिम्रो भाषा एउटा छ, भेष अर्कै । तिमीजस्ता वीरले छद्म कुरा नगर्दा नै राम्रो होला ।

**कर्ण :** (*रिसाएर*) त्यो तपाईँको भ्रममात्र हो । म छद्म कुरा गर्दिनँ । म छल र षड्यन्त्रमा रमाउने अरूजस्ता छद्म भेषधारी पनि होइन । आफ्नो उद्देश्य र कर्मप्रति प्रतिबद्ध छु म ।

**ब्राह्मण :** हेर्दै जाऊँ, के-के देखिन्छ ।

(हिँड्न *थाल्छन्*)

**कर्ण :** आ-आफ्नो हेराइ र आ-आफ्नै बुझाइ हो । तपाईं मलाई जे-जसरी हेर्नुहुन्छ, हेर्नोस् । तपाईं जे-जसरी बुझ्नुहुन्छ, बुझ्नोस् तर पनि अन्तिममा तपाईंसँग एउटा कुरा भन्न मन लागेको छ– ब्राह्मणहरू छल र षड्यन्त्र गर्न अब्बल हुन्छन् भन्ने मैले सुनेको थिएँ । त्यस्तै, आफूभन्दा तलकालाई हेप्न, थिच्न, मिच्न र जालमा पार्न पनि ब्राह्मणहरू सिपालु हुन्छन् भन्ने कुरा मैले सुन्दै आएको थिएँ । त्यो कुरा ठीकै रहेछ । आज आफैँले देखैँ पनि र भोगैँ पनि । कोचाहिँ छ्दमभेषी र छली हो भन्ने कुरा भोलि सत्यतथ्य इतिहास लेख्ने कोही भयो भने लेख्लान् ।

**ब्राह्मण :** (*रिसाएर*) हँ, के भन्दै छौ तिमी ?

**कर्ण :** इन्द्र ब्राह्मण भेषमा ! के ब्राह्मणहरू यस्तै हुन्छन् ?

**ब्राह्मण :** मैले बुझिनँ तिम्रा कुरा ।

**कर्ण :** तपाईं यसरी भेष बदलेर, छद्म भेषमा ब्राह्मण बनेर आउनुपर्दैनथ्यो । आफ्नै भेषमा आउँदा पनि हुन्थ्यो । अर्को पटक तपाईंलाई हामी मानवबाट केही चाहियो भने यसरी छल गर्ने गरी भेष बदलेर नआउनुहोला, इन्द्रकै रूपमा आउनुहोला । छल गर्नु छ र भेदभावको भावना राख्नु छ भने आफ्नै भेषमा गर्दा राम्रो । तपाईंले मलाई हराएर आफ्ना पुत्र अर्जुनलाई जिताउन यति कुरूप छल गर्नुपर्ने थिएन । विनाछल माग्नुभएको भए पनि म दिने थिएँ । मलाई छलकपट मन पर्दैन । त्यसैले फेरि यस्तो छल नगरिदिनुहोला । तपाईंलाई मेरो प्रणाम छ ।

*(ब्राह्मण भेषका इन्द्र लज्जित बन्छन् । उनी प्रतिक्रियाहीन बनेर हिँड्छन् । कर्ण यथास्थानमा उभिइरहन्छन् । अँध्यारो हुन्छ ।)*

■■



# पानी

## ✍ सुशील आचार्य



आहा हामी नेपाली त कति भाग्यमानी
जलस्रोतमा धनी नै छौँ जताततै पानी
हिमालबाट पानी बग्ने, जमिन खने पानी
हामीलाई सफा स्वच्छ पानी पिउने बानी ।

पानी धेरै चिजलाई चाहिन्छ भन्ने थाहा पाई
अब फारो गर्न थालौँ लहै साथी-भाइ
थोपा-थोपा पानीको नि महत्त्व छ धेरै
पानी फारो गर्नलाई नगरौँ अबेरै ।

के-केलाई पानी चाहिन्छ, सोचविचार गरौँ
घरमा पानी पिउनलाई पहिले ट्याङ्की भरौँ
घरायसी पानी प्रयोग गर्ने जोहो गर्नु
पानी फारो हुने गरी काममा अघि सर्नू ।

फूलबारीमा, गमलामा, कौसी-खेतीतिर
पानी हालौँ है त हजुर, निहुराई शरीर
कताकता पानी चाहिन्छ, फारो गरी हालौँ
लौ, पानीको महत्त्वलाई छलफल गर्न थालौँ ।

■■



# आँसु

✍ राम आचार्य 'पुष्पप्रेमी'

आँसु पनि पानी नै त हो
तर, पानीले किन
आँसुको भाव बुझ्दैन ?
पानी पिउँदा हुन्छ
आँसु पिउनु किन हुँदैन ?
पानी वर्षेझरीसँग
जरुवा बनेर उम्रिन्छ
ऊ गतिशील भएर बग्छ
घोल र समिश्रणअनुसार
रङ र संवाद फेरिन्छ
प्रयोगअनुसार स्वभावमा
परिवर्तन हुन्छ
हिमाल पग्लेपछि
पानी बन्छ !
तर, आँसु आँखामा जमेर
कहिल्यै हिउँ बन्दैन ।

आँसु स्थिर छ
पीडासँगै जन्मिन्छ ऊ
न दुःखमा झर्दा होस्
न त सुखमा पोखिँदा होस्
एउटै रङ, उस्तै स्वभाव छ आँसुमा
आकाश रोए पानी झर्छ
मन रोए आँसु बग्छ
आँसु भाव-अभिव्यक्तिको प्रतिविम्ब हो
तर, पानी प्राकृतिक भावको विम्ब होइन
त्यसैले त पानी पिउँदा हुन्छ
तर, आँसु पिउनुहुँदैन !

आफ्नो पीडाको
गहिराइमा मात्र होइन
अरूको दुखाइमा पनि
पोखिनुपर्छ आँसु
अरूको सुखमा
सुक्नुपर्छ आँसु !

आँखामा कहिल्यै खडेरी पर्दैन
सञ्चित गरेर राख्नु पनि पर्दैन
पानी पर्न वर्षायाम पर्खेजस्तो
पर्खिनु पर्दैन
आफैँ झर्छ आँसु
कहिले दुःखको वेदना बनेर
कहिले खुशीको छाल भएर !

खुशीमा आँसु जम्नुहुँदैन
पीडामा आँसु सुक्नुहुँदैन
बरु बगाउनुपर्छ पीडालाई
अन्तर-मनको अदृश्य
घाउ पखाल्ने
त्यो अद्भुत झोल
तिम्रा आँखाभरि लुक्नुपर्छ
मेरो आँखाभित्र पनि बस्नुपर्छ
तर पनि
हरदम झर्नुहुन्न आँसु
पिउनुहुन्न आँसु !!!

■■



# दृष्टिकोण : समाज परिवर्तनको एक अस्त्र

✍ तीर्थराज अधिकारी

साहित्य जीवनको सुन्दरता प्रकट गर्ने विचार भावको सुन्दर अभिव्यक्ति हो । समाज नवनिर्माणमा साहित्यको ठूलो भूमिका रहन्छ । साहित्यलेनै सामाजिक प्रबोधन गराउँछ । असल साहित्य व्याक्ति र चरित्र निर्माणमा सहायक हुन्छ। साहित्यले समाजलाई संस्कारित गरेर जीवन मूल्यको शिक्षा प्रदान गर्दछ । साहित्यले नै अतीतबाट प्रेरणा लिन्छ, वर्तमानको चित्रण गर्दछ र भविष्यको मार्गदर्शन गर्दछ । साहित्य समाजको उन्नति र विकासको आधारशीला पनि हो । साहित्यले मानव समाजलाई श्रेष्ठ बनाउने सङ्कल्प लिएर हिँडेको हुन्छ । व्यापक मानवीय एवम् राष्ट्रिय हित यसैमा निहित देखिन्छ । यसकारण पनि भन्न सकिन्छ कि साहित्य समाजको मूल्य निर्धारक हो । साहित्यबाटै दृष्टिकोण निर्माण हुन्छ । भिजन एउटा अलौकिक सौन्दर्य हो, शक्ति हो । लक्षण, कारण र समाधानको सिंहावलोकन हो । मनमा एउटा अद्भूत तस्वीर बनाउन सक्ने क्षमता नै भिजन हो । तसर्थ, एउटा साहित्यकारले विशाल दृष्टिकोण बोकेर हिँडेको हुन्छ ।

'फ्रम थर्ड वर्ल्ड टु फस्ट' लि क्वान युले सन् २००० मा प्रकाशित गरेको एउटा ऐतिहासिक राष्ट्र निर्माणको रूपरेखा झल्काउने दस्ताबेज हो । युले सिङ्गापुरलाई कसरी आधुनिक सिङ्गापुर बनाए र परिवर्तनमा आफ्नो पनको खोजी गरे भन्ने कुरा प्रष्ट देखिन्छ । सञ्चार, वित्तीय व्यवस्था र पर्यटनको प्रवर्द्धन गरी सिङ्गापुरले विश्वलाई आफ्नो प्रभाव क्षेत्र बनायो । म यहाँ दृष्टिकोण (साहित्य) लाई यतिमात्र स्पर्श गरी समग्रमा बुझिने सामान्य दृष्टिकोणभित्र समेटिने चेष्टा गरेको छु ।

चिन्तनको प्राथमिकता नै दृष्टिकोण हो । ज्ञानको महत्त्व र जीवनको सार्थकता बुझेपछि दृष्टिकोण बन्छ । संस्कार दुई प्रकारका हुन्छन् ।

क- जन्मजात

ख- वातावरण, शिक्षादीक्षा

एउटै समाजमा बसे-हुर्किएको भएता पनि हरेक व्यक्तिको जीवनवृत्ति फरक हुन्छ । यो फरक उसको दृष्टिकोणले दर्शाउँछ । हामी विकेन्द्रवादी दर्शनको लोकतान्त्रिक विकल्प खोज्दै छौँ। नेतृत्व मनमनै युटोपिया (आदर्शलोक) रच्नमै व्यस्त छ । नैतिक समग्रता खण्डित हुँदै छ । सभ्यता यस्तो एउटा स्वचालित यन्त्रवत् गतिमा छ, जसमा जीवन संवेदना कुल्चिएका छन् । धर्म, कानून, व्यवस्था, प्रविधि राज्य र संस्कृति आआफ्नो स्तरमा शक्तिकेन्द्रको शिकार भएका छन् । यसतरह नेपाली समाज एक यस्तो ढाँचाको अधीन छ, जसको भित्री रूपमा अनेक उपकेन्द्रीय शक्तिको संयोजन रहेको छ ।

देश प्रकृतिले भरपुर सिँगारिएको छ । यत्रतत्र अनगिन्ती पानीका मुहानहरू छन् । कति अमूल्य खनिजपदार्थहरू छोपिएका होलान् । रोजगारको अभावमा होनहार जनशक्ति दिन-प्रतिदिन विदेशिएका छन् । हजारौँ अनाथ र अशक्तहरू औषधिमूलोको अभावमा जीवन गुमाइरहेका छन् । अवसरवादीको बिगबिगी बढिरहेछ । बदमासी, बेइमानी, होहल्ला, झैझगडा, रुवाबासी, धाकधक्कु, भाषा र जातीयताको राजनीतिले समाजमा दह्रो उपस्थिति जनाएको छ । मजदुरलाई एक दिनको कमाइले त्यसै दिनको छाक पनि टर्दैन । सफा पानी, नियमित बिजुली र व्यवस्थित बजारभाउ अनुभव गर्नै पाउँदैनन् जनताले । अस्थिर राजनीतिले गर्दा

राष्ट्रिय तथा अन्तर्राष्ट्रिय छवि बिग्रँदै गएको आभास हुन्छ । यसै परिप्रेक्ष्यमा हामीलाई दूरदृष्टि (भिजन) वाला नेताको उपस्थिति खट्किएको छ; प्रेरणा दिन सक्ने, भरोसा दिन सक्ने व्यक्तित्वको ।

हिजोआज सभा, कचहरी, सम्मेलन, गोष्ठी र साधारण छलफलमा पनि भिजन शब्दको व्यापक प्रयोग भएको सुनिन्छ । यस लेखमा पनि भिजन (दृष्टिकोण) सन्दर्भ अनुसार एकै प्रयोजनको लागि दुवै शब्दको प्रयोग भएको छ । यो शब्दको वस्तुगत तात्पर्य के हो किन हामीसँग भिजन भएन भन्ने कुराको छिनोफानो भने अझै भइसकेको छैन । सरसर्ती हेर्दा भिजन, सोच, विचार, दृष्टिकोण, चातुर्यपूर्ण (ट्याक्टिकल), सामरिक सोच आदि विषयलाई एउटै डालोमा राखेर आ-आफ्नो अनुकूलतामा भाषिक प्रयोग हुने गरेको पाइन्छ । वास्तवमा भन्नुपर्दा यहाँनेर हामी अलमल्लमा परेका छौँ ।

महत्त्वाकाङ्क्षा र भिजन देख्दा उस्ताउस्तै भए पनि फराकिलो मनले बुझ्दा यसमा आकाश-जमिनको फरक पाइन्छ । महत्त्वाकाङ्क्षा केवल देशले गरेको प्रगति प्राप्त गर्ने लक्ष्य हो भने भिजन दुनियाँ कसरी असल बन्न सक्दछ भन्ने सोचाइ हो । भिजन बौद्धिक प्रवाह हो, सोच अथवा चिन्तन, भने कुनै विषयमा मग्न हुने काम हो । भिजन-लक्षण, कारण र समाधानको सिंहावलोकन हो । विश्वमा के गर्न सकिन्छ भन्ने सोचाइ भिजन हो भने विश्वको सुख कसरी प्राप्त गर्न सकिन्छ भन्ने खोज महत्त्वाकाङ्क्षा (एम्बिसन) हो ।

आफ्नो अनुकूलताको जागरण र भिजन बिल्कुल फरक कुरा हो । एउटा महान् दृष्टिकोणका साथ सामाजिक भविष्यका लागि मनमा एउटा अद्भूत तस्वीर बनाउन सक्ने क्षमता नै भिजन हो । विश्वमा के गर्न सकिन्छ ? भिजन र विश्वको सुखद प्राप्ति कसरी गर्न सकिन्छ- एम्बिसन । हामी कहाँ जान चाहन्छौँ ? - भिजन, हामी भइरहेको सुखद संसारबाट के चाहन्छौँ ? - आकाङ्क्षा । छोटकरीमा भन्दा अपरिधीय दृष्टि, अन्तर्बुद्धि, मस्तिष्कमा एउटा उज्ज्वल आकृति पैदा गर्न सक्ने क्षमता नै भिजन हो, कुशल दृष्टिकोण । हामी कहाँ जान चाहन्छौँ ?— भिजन, हामी के गर्न चाहन्छौँ ? उद्देश्य अथवा मिशन । मिशनको मूल रूपबाट कस्तो भविष्य सिर्जना हुन्छ भन्ने आँकलन नै भिजन हो ।

भिजनको शास्त्रीय बुझाइमा मन, बुद्धि, चित्त र अहङ्कारको जोडलाई अन्तस्करण भन्ने गरिन्छ । अहिले यस विषयमा चर्चा नगरौँ । भेषज विज्ञानको बुझाइमा दृष्टि भन्ने आउँछ । यस विज्ञानमा केन्द्रीय दृष्टिकोणलाई महत्त्व दिएको हुन्छ । परिधीय दृष्टि त जीवित प्राणीमा फरकफरक हुन्छ । मानिसले एउटा आँखाको १५० डिग्री र दुवै आँखाको क्षमता १८० डिग्रीसम्म परिधीय दृष्टि क्षमता राखेको हुन्छ भने चमेराका आँखा ठूलाठूला भए पनि देख्दैन । कुन चिज हो भन्ने थाहा पाउन चमेराले आफ्नो आवाज प्रयोग गर्दछ । आवाज फर्किएर आफूकहाँ आएपछि त्यो चिज के रहेछ भनेर थाहा पाउँछ । यस्तो भिजन समाजका लागि पक्कै हितकर हुँदैन । त्यस्तै अस्ट्रेलियाको रातो कङ्गारुको एकैचोटी चारैतिर हेर्न मिल्ने ३६० डिग्री परिधीय दृष्टि हुन्छ । यो दृष्टि त उसलाई जीवनरक्षाका लागि प्रकृतिले दिएको वरदान हो, यो त्यही जनावरलाई मात्र काम लाग्छ ।

समाजलाई, देशलाई, विश्वलाई चाहिने त दृष्टि-तीक्ष्णता हो, भिजन हो । अगुवा वा नेताको दृष्टि क्षेत्र (भिज्युअल एक्युरिटी) त जनताले पहिचान गर्दछन् । नेताको दृष्टि क्षमताको पेरिमेट्री गर्नुपर्दछ, यो जनताले गर्दछन्, पेरिमिटर त नेताका क्रियाकलाप हुन्, कामका असरहरू हुन् । टनेल भिजन भएको नेता आवश्यक छैन ।

विश्वमा सूर्य सधैँ नियमित उदाउँछन्, पारखीले बिस्कुन सुकाउँछन् । कोही भने सधैँ त्यही अँध्यारो सुरुङमा हराउँछन् । एक जना अमेरिकी लेखक जोहन म्याक्सवेलले भनेका छन्- एउटा महान् नेतामा आफ्नो भिजन पूरा गर्ने साहस जोशबाट आउँछ, पदवीबाट होइन । यही भनाइलाई सार्थक रूप दिएको छ सिङ्गापुरको इतिहासले । सन् २०२२ को आँकडा अनुसार जम्मा ५६,३७,००० जनसङ्ख्या, २८४ वर्गमाइल क्षेत्रफल, ६३ टापुहरूको समूहलाई शहरै शहरको देश (सिटी स्टेट) भन्ने गरिन्छ । सन् १९६५ मा मलेसियासित फुटेर स्वतन्त्र रूपमा गठन भएको यो देशमा खास

उब्जनी हुने खालको जमिन पनि थिएन । धेरैजसो मुसलधारे वर्षा हुने, उब्जाउ नहुने एक प्रकारले फालिएको यो क्षेत्रले ली क्वान यु नाम गरेका एक जना नेताको नेतृत्व पायो । उनमा भिजन थियो, दृष्टिकोण थियो, लागिपरे, सिङ्गापुरलाई बनाइछाडे । यो देशलाई बनाउन लिले केमात्र गरेनन् ! भूमिसुधार गरे, जमिन चक्ला बनाए, हरियाली शहर बनाउन नमुना र बिरुवा खोज्दै आफैँ देशपरदेश चाहारे, शिक्षाको स्तरवृद्धि गरे, प्रतिव्यक्ति आय बढाए, अहिले विश्वमा आयको दृष्टिले तेस्रो स्थानमा छ । यस देशमा अङ्ग्रेजी, तामिल, मलय र चिनियाँ भाषा बोलिन्छ । विश्वका पाँच व्यस्त बन्दरगाहमध्ये एक यस देशमा छ । रबर निर्यातका लागि एक विश्वकेन्द्र जलसंयोगी भूभाग, एसियानको संस्थापक सदस्य पनि हो । चार एसियाली बाघ (हङकङ, दक्षिण कोरिया, ताइवान र सिङ्गापुर) मध्ये सिङ्गापुर एक हो । यी सबैको श्रेय लीलाई जान्छ । उनमा भिजन थियो, प्रयोग भयो । सन् २०११ मा उनले सक्रिय राजनीतिबाट अवकाश लिए । हाल ली यो लोकमा छैनन् तापनि सिङ्गापुरमा उनलाई ‘फादर अफ सिङ्गापुर’ भनेर पुकारिन्छ । कुनै पनि देशको उन्नतिका लागि लीजस्तो नेतृत्वको आवश्यकता पर्दोरहेछ ।

बिल गेटको माइक्रोसफ्ट सबैको घरघरको प्रिय वस्तु हुन्छ भन्ने विचार थिएन, यो संयोग र सोच हो । त्यस्तै सन् २००८ मा ओबामाले भनेको ‘होप एन्ड चेन्ज’ त प्रतिज्ञा मात्र हो, भिजन होइन । भिजन त एसियामै छ, चीनमा । केही वर्षअगाडि भएको ब्राजिल सम्मेलनमा एक जना वक्ताले रहस्योद्घाटन गरिदिए चिनियाँ भिजनको । पर्यावरण, सौर्यशक्तिको प्रयोग, हावाबाट चल्ने मेसिन, औद्योगिकी क्षेत्रमा अहिले विश्वनेता भएको छ चीन । स्थायी शहर निर्माण, पर्यावरणीय ध्वनिरहित परिवहन प्रणालीमा विकास बयाट्री-विज्ञान र स्वस्थ वातावरणीय यातायात सेवा आदिले गर्दा यो देश अहिले तीव्र प्रगतिको शिखरमा छ । यस्तै भिजन हाम्रो देशले खोजेको छ । यतिखेर भिजन रोज्ने मौका आएको छ, कोसँग छ त्यो भिजन ?

■■

*पोखरा १०, हाल : ओहायो, अमेरिका ।*



# पाँच मुक्तक

उपेन्द्र पौडेल



(१) छेउमै आई त्यसैत्यसै जिस्क्याउँछे मोरी
कहिलेकाहीँ त समाएरै घिस्याउँछे मोरी
बैँस पनि कति साह्रो चढ्दै गएको रै'छ
भो-भो भनी तर्केको त खिस्याउँछे मोरी ।

■■

(२) प्रिय तिमी साथमा हुँदा ढुक्क हुन्छु म त
भित्रभित्रै गद्गद हुँदै आसमान छुन्छु म त
तिम्रै साथले मेरो जीवन सार्थक भएको छ
सातौँ जनम जीवनसाथी तिमीलाई चुन्छु म त ।

■■

(३) मुस्कुराउँदै आँखा तरिछन् सान्नानीले
प्रीत लाउने विचार गरिछन् सान्नानीले
भन्दै थिइन्— घरजम गर्नुपर्‍यो रे अब
पिरतीको रसरङ छरिछन् सान्नानीले ।

■■

(४) चौबीसै प्रहर बसेछु कल्पी, नभेट्दा तिमीलाई
आनन्द आउँछ यो मनभित्र समेट्दा तिमीलाई
ओछ्याई नजर राखेछु, तिमी आउने त्यो बाटोमा
कल्पना गर्छु मन शान्त होला, लपेट्दा तिमीलाई ।

■■

(५) शिरमा लाउने ढाका टोपी, कम्मरमा खुकुरी छ
गौरवशाली देश नेपाल सगरमाथा धुरी छ
मेची, काली, तराई, हिमाल, विविधता धेरै नै छन्
संस्कृति र सम्पदाको खानी मुरी-मुरी छ ।

■■

*पोखरा-११, कास्की*



# अर्थको भेदभाव

✍ मञ्जु काँचुली

एउटा गाउँमा दुई थरी मानिस बस्दा रहेछन् । एक थरी हुनेखाने रहेछन् । अर्का थरी चाहिँ हुँदा खाने रहेछन् । हुनेखानेको चाहिँ प्रशस्त पुर्ख्यौली खेतबारी रहेछ । धान र तरकारी फलाएर खाँदो र बेच्दोरहेछ । हुँदाखानेले चाहिँ त्यहीँ नजिकै दुई रोपनी जमिन भाडामा लिएर त्यसैमा तरकारी फलाएर जीविका चलाउँदोरहेछ । ती दुवै थरीले यसपालि प्रशस्त तरकारी रोपेछन् । दुवै थरीको तरकारी राम्रो भएछ । बेच्न भनी डोकोभरि लिएर बस चढ्दै ती दुवै कालीमाटी पुगेछन् । गोलभेडाको भाउ ज्यादै न्यून हुन पुगेछ । हुनेखानेलाई झोँक चलेछ र गोलभेडाको भारी त्यहीँ घोप्ट्याएर फालिदिएछ र रित्तो डोको लिएर बसमा घर फर्केछ । हुँदाखानेले चाहिँ न्यून मूल्य तोकिएको आफ्नो मूलाको भारी फर्काएर घर लिएर गएछ र चानो पारेर सबै मूला घाममा सुकाएछ ।

गोलभैँडा फलाउने हुनेखानेको अहिले काठमाडौँमा गोलभैँडाको अचार (टोमाटो केचअप) को दुई वटा फ्याक्ट्री छन् । व्यापार राम्ररी उसको चलेको छ । अझ फैलँदै पनि छ । मूला फलाउनेले चाहिँ मूला बेचेरै जीविका चलाइरहेको छ किनकि बैङ्कसँग ऋण लिएर व्यापार गर्न धितो राख्ने सम्पत्ति छैन । सम्पत्ति नभई बैङ्कले विश्वास गर्दैन । दुवै एउटै शहरमा बस्छन् । छिमेकी पनि हुन् ।

एक दिन जब रेडियोले देशको बजेट भाषण बोल्न सुरु गर्‍यो, हुँदा खाने रिसायो र रेडियो बन्द गर्‍यो । हुनेखानेले चाहिँ टिभीमा आफ्नो उत्पादनको टोमाटो केचअप विज्ञापन भर्खरै हेरेर दङ्ग पर्‍यो । देशको अर्थतन्त्रदेखि खुशी हुँदै बजेट भाषण बडो ध्यानपूर्वक सुनिरहेथ्यो ऊ किनकि ऊजस्ता उद्योगीलाई बैङ्कले अरू बढी सुविधा दिने आधिकारिक हल्ला सुनेको थियो, हो रहेछ।

हुँदाखानेले डोकोको तरकारीको भारी कालिमाटीमा बिसाउँदै छ । भारी बिसाउँदा-बिसाउँदै उसका कपाल सेतै भएर फुलिसके । हुनेखानेको शहरमा ठूला-ठूला घरहरू, गाडी र कारखानाहरू छन् । ऊ देशको एउटा राम्रै उद्योगपति भइसकेको छ । श्रीमतीले रङ्गाइदिएको उसको कपाल जवानी उमेरको जस्तै छ । दुवै थरी आज मध्यावधि चुनावमा भोट खसाल्न जाँदै छन् । एउटा पजेरोमा र अर्कोचाहिँ पैदल । ■■



# राधाकिसुन

✍ डा. रूपक श्रेष्ठ

**सुन साइँली, साइँली, परदेशबाट म आउँला**
**सुन साइँली, साइँली, चालीस कटे'सी रमाउँला**

गीत घन्काउँदै ट्याक्सी त्रिभुवन अन्तरर्राष्ट्रिय विमानस्थलतिर गुड्दै थियो तर यतिखेर यात्रुको सिटमा साइँला नभएर साइँली थिई । गीतले साइँलीको मनमा झन् उच्चाट थप्यो । त्यसैले साइँलीले चालकलाई गीत अर्को लगाउन अनुरोध गरी । साइँलीको दिक्दारी बुझेझैँ चालकले रेडियो नै बन्द गऱ्यो अनि साइँलीले सन्तोषको लामो सास तानी । ट्याक्सीचालक घरीघरी ऐनामा उसलाई नाम थाहा नभएको अनाम यात्रु ऊर्फ साइँली ऊर्फ राधारानीलाई चियाउँथ्यो, मानौँ- ऊ तिनको मनोभावना पढ्न चाहन्थ्यो । निधारमा रातो टीका, दाहिने कञ्चटमा सगुन दही कुनै पनि ओभाइसकेका थिएनन् न त तिनका आँखाहरू । गहिरो समुद्रले भरिएका आँखाहरूले गम्भीर मुद्रामा झ्यालबाट परपर क्षितिजमा, मानौँ- शून्यतामा हराऊँझैँ गरी टोलाउँदै थिई राधारानी । ठीक त्यति नै खेर पूर्वआकाशमा लालिमा चढ्दै थियो एउटा नयाँ दिनको सन्देश लिएर तर राधारानीलाई त्यो दृश्यले जिस्काएझैँ लाग्यो, उसले अर्कोतिर मुन्टो बटारी र आँखा पुछी ।

कतार एयरवेज ००२ ले हतारिएझैँ गरी दौडेर धावनमार्ग छाड्यो र आकाशै-आकाश उकालो लाग्यो । साइँलीले झ्यालबाट तल गुचुमुचुक्क परेको काठमाडौँलाई हेरी । आँखा चिम्लेर लामो सास तानेर छोडी अनि सिटमा शिर अडेस लगाई । उनको दिमागभरि पछिल्लो डेढ दशकको आरोह-अवरोहहरू सम्झना बनेर अटेसमटेस गरी ओइरिरहेछन् मनभरि । त्यसरी नै ज्वारभाटा उठ्छन्, पछारिन्छन् अनि फेरि उठ्छन् र पछारिन्छन् मनैभित्र । बडो अशान्त मन-मस्तिष्कलाई थिचेर जबरदस्त शान्त देखिने प्रयत्नमा रहँदारहँदै बोइङ नेपालको सीमा पार गरी इन्डिया र पाकिस्तानलाई नाघेर इरानको आकाशमा आइपुगेको स्क्रिनमा देखी । आँखा चिम्लेर उद्वेलित मनलाई सम्हाल्ने कोशिश गरिरही राधारानी ।

दोहाको छोटो ट्रान्जिटपछि लन्डन हिथ्रोको लागि बोइङ क्यू ए ००७ समाती । बोइङ फेरि त्यसरी नै आकाशतिर उकालो लाग्यो, तिनको एकतमासले छचल्किरहेको मन बोकेर । मन भुलाउन ह्यान्ड-ब्यागबाट एउटा किताब निकाली । उनको प्यारो किसुनले उपहार दिएको किताब 'बुधनको घोडी' उनलाई नचिनेकै लेखकको नामले जस्तै नपढेकै पुस्तकको नामले मन छोयो । किसुनको अन्तिम उपहार सायद, मनमनै सोची अनि किताबलाई माया गरेर मुसारिरही पटक-पटक । पन्ना पल्टाई र पढ्न थाली त्यही शीर्ष कथा 'बुधनको घोडी' । कथाका अनेक रोमाञ्चक र दुखानुभूतिहरूले पटक-पटक दर्फ्याए उसको मनलाई पनि । अन्ततः कथा सक्दा-नसक्दै धररर आँसु चुहाई । उनले आफ्नो किसुनलाई सलमान र आफूलाई करिश्माको ठाउँमा राखेर जीवनको एक आशातीत रौनक खोज्दै थिई तर कथाले लिएको मोडले ऊ उद्वेलित भई । आफ्नो सलमानले आफूलाई त्यो तुयाक्रोसम्म भए पनि फाल्न सक्ने भाग्य दिन नसकेकोमा आफूलाई करिश्माको जत्तिको पनि भाग्यमानी पाउन सकिन र फेरि एकचोटि बेचैन भई ।

यो पटकको जस्तो पट्यारिलो यात्रा उसले कहिल्यै गरेकी थिइन । चार महिना अघिमात्र हिथ्रो एयरपोर्टबाट कति मीठो-मीठो सपना आँखाभरि सजाएर घर फर्केकी थिई । घरपरिवार अनि उनको मनको प्यारो किसुनलाई भेट्ने खातमाथि खात रहरहरू मनभरि खेलाउँदै आँखै झिमिक्क नगरी एघार वर्षपछि नेपाल फर्केकी थिई । बिहे गरेको दुई महिनामै किसुनलाई घरमै छोडी विद्यार्थी भिसामा लन्डन पुगेकी थिई

राधारानी । छिट्टै किसुनलाई पनि झिकाउन मिल्छ भनेर एजेन्टहरूले दिएको सल्लाहजस्तो सजिलो भएन राधारानीलाई लन्डन पुगेपछि । बेलायती होमअफिसले विदेशी विद्यार्थीहरू र प्राइभेट कलेजहरूमाथि निक्कै अप्ठ्यारो नीतिहरू ल्यायो, जसको मार उनलाई पनि पऱ्यो । अतिरिक्त समयमा गर्न पाइने काममा व्यवधान आएपछि राधारानीलाई पनि दैनिकी गुजार्न निक्कै गाह्रो पऱ्यो । कुनै उपाय नलागेपछि भगवान् भरोसा भन्नेमा पुगी । तर पनि घरमा पीर पर्ला भनी सबै कुरा ठीकठाक हुँदै गएको र किसुनको भिसाको लागि डकुमेन्ट तयार गर्दै गरेको बताउँथी । भगवान्को लीला, एक जना नेपालीमार्फत एक भारतीय मूलका व्यापारीको घरमा हेल्परको पदमा लिभ इनसहितको काम पाई । काम अलि धेरै नै गर्न परे पनि उसको लन्डनको जीवनले अलिकति कोल्टे फेऱ्यो । घरमा सहयोगीको काम गरेता पनि सबै सदस्यहरू उसलाई सम्मानका साथ नै बोलाउँथे । काम नै लगाउँदा पनि 'प्लिज' र 'सरी' दोहोऱ्याइरहन्थे, जसले गर्दा उसलाई कहिल्यै पनि त्यस काममा हीनताबोध भएन बरु बिस्तारै हिमचिम बढ्दै गएपछि विदेशमा पनि एउटा परिवार पाएको अनुभूति गर्न थाली ।

एक दिन कुरैकुरामा आफ्नो परिवारको बारेमा मिसेस रोजमेरीलाई बताई । रोजमेरी प्रेममा परेर हरप्रित सिंसँग बिहे गरेकी त्यस घरकी ल्यान्डलेडी अर्थात् घरपट्टि आमा । प्रेमको प्रतिमूर्ति रोजमेरीले राधारानी र किसुनको प्रेम र अलग्गिनुपरेको पीडालाई आत्मसात् गरी किसुनलाई झिकाउन सम्पूर्ण कागजात तयार गर्न सहयोग गर्ने वचन दिई । रोजमेरीको सहयोग गर्ने वचनले राधारानी कृतज्ञ भई । त्यस रात किसुनसँग लामै कुरा गरी फोनमा, भविष्यको मीठा योजनाहरूसहित । भोलिपल्ट राधारानी खुशी हुँदै रेफरेन्स लेटर लिन आफू पढ्ने इस्ट लन्डन कलेजमा पुगी । सधैँ भीडभाड हुने कलेज गेट बन्द गरेर सुनसान देखिएपछि मनमा चिसो पस्यो । धेरै बेर बाहिर उभिरइही तर कलेज खुलेन । सहपाठीबाट कलेज होम अफिसले छापा मारेर बन्द गराएको थाहा पाएपछि राधारानीलाई पाइतालामुनिको धर्ती भासिएझैँ भयो । बल्लतल्ल मिल्न लागेको काममा बज्रपात भएपछि अचानक चारैतिर अँध्यारो देखी र चक्कर लागेर ढलौँला झैँ भएर त्यहीँ थचक्क बसी । बोतलको चिसो पानी टाउकोमा खन्याई । बाँकी रहेको अलिकति पानीले घाँटी भिजाई अनि बिस्तारै उठी र मर्माहत मन लिएर ट्युब स्टेशनतिर लागी ।

अबको विकल्प रह्यो– अर्को कलेजमा भर्ना हुने र त्यही कलेजको कागजातसहित किसुनको भिसाको लागि आवेदन दिने । अर्को दुई महिना लगाएर राधारानी लन्डनका अधिकांश कलेजमा पुगी तर पछिल्लो कलेजबाट पढाइ गरेको प्रमाणपत्रहरू नपाएसम्म आवेदन लिन नमिल्ने सबैको एउटै जवाफ सुन्दासुन्दै उनको भिसा सिद्धियो र एकाएक इलेगल इमिग्र्यान्ट बन्न पुगी । कलेजको कमजोरी देखाएर कलेज बन्द गरे पनि वर्षभरिकै शुल्क बुझाएर पढिरहेका निर्दोष विद्यार्थीलाई कतै पनि पढ्न नपाउने स्थिति बनाउनु सरासर अन्याय हो भन्ने बुझ्न उनलाई गाह्रो भएन । यो अन्यायको विरुद्ध अदालतमा मुद्दा हाली तर आफ्नै देश फर्किएर नयाँ भिसा लिएर आउनुपर्ने भनेर मुद्दा किनारा लागेपछि ऊ बाध्य भएर मानव-अधिकारवादी मुद्दा दायर गर्न पुगी ।

मुद्दाको सुनुवाइ, हेराइ, पुनरावेदन गर्दागर्दै दश वर्ष लगाएर मुद्दा जित्दा उसलाई संसारै जितेजस्तो भयो । त्यसको लगत्तै लामो सकसपूर्ण बन्दीजस्तो जिन्दगीको पर्खाल तोडेर मनभरि उमङ्ग बोकेर सोह्र घन्टाको यात्रामा आँखा झिमिक्क नगरी घर पुगेकी थिई चार महिना अघिमात्र । किसुन एयरपोर्टमै लिन आइपुग्यो । लामो वियोग पार गरेकी प्यासी राधारानी र किसुन अङ्गालोमै बिलाए । विदेशबाट यति लामो समयपछि बुहारी आउँदा घर धपक्कै बल्यो । सासू, ससुरा, देवर, जेठानी, जेठाजू सबैको अनुहारमा कान्ति थपियो ।

भित्रबाट ढोकाको छेस्किनी लगाएपछि किसुनको छातीमा टाँसिन पुगी राधारानी । घर छाडेर जाँदादेखिको कथाव्यथा पोखी उसले । दुवै हाँसे, दुवै रोए अनि फेरि हाँसे । बत्ती निभ्यो तर तिनीहरू ब्युँझिरहे । पछिल्लो समयमा किसुन फोनमा बोल्न नमानेको अनि घरका सदस्यहरूले पनि अनेक बहानामा बोल्न नदिने गरेकोमा चित्त दुखाई राधारानीले ।

"त्यसो होइन रानी, म तिमीलाई कति माया गर्छु भन्ने कुरा तिमी अन्दाजसम्म गर्न सक्दैनौ, परिस्थिति नै त्यस्तै परेर हो, मलाई माफ गर !" सम्झायो किसुनले । राधारानी अधीर भई किसुनसँगै टाँसिइरही अनि मायाले सुमसुमाइरही, चल्मलाइरही । किसुनले उसलाई अँगालोमा बेरेर छातीमा टाँसिरह्यो धेरैबेरसम्म अनि एकाएक भक्कानिएर रुन थाल्यो ।

"के भयो ? के भयो ?" राधारानीले सोधिरही । किसुन दुवै हातले मुख छोपी घुँक्कघुँक्क गरी रोइ नै रहे । राधारानीले फकाइरही, सोधिरही, तर किसुन रोइ नै रहे धेरै बेरसम्म अनि राधारानी पनि सँगसँगै रोइरही अन्जानमै ।

"रानी !" धेरैबेरपछि किसुन धिमा स्वरमा बोल्यो ।

"हजुर, मेरो राजा !" राधारानी बोली, "हजुरको मनमा जे पीर भए पनि मलाई भन्नुस्, म सब सहन तयार छु, केही अप्ठ्यारो मान्न पर्दैन ।"

"रानी ! मेरो मनमा एउटा ठूलो पीडा छ र त्यो पीडा तिमीलाई नभनी पनि सक्दिनँ र भन्न पनि सक्दिनँ । मलाई थाहा छ, त्यसपछि तिमी मलाई माया गर्ने छैनौ । मलाई माफ गर है रानी !"

किसुन मुख छोपेर रोयो फेरि । राधारानीले कुरोको केही भेउ पाइन, तै पनि भनी, "हजुरले जे नै गरेको भए पनि, अर्कीसँग बिहे नै गर्नुभएको भए पनि मैले माफ गरेँ । अब त भन्नुस्, के भयो त्यस्तो ?"

किसुनले भन्यो, "रानी, त्यस्तो पाप मबाट हुनै सक्दैन, त्यस्तो नचिताऊ ! म अरूको त के कुरा, तिम्रो पनि चित्त बुझाउन नसक्ने भएको छु । म बर्बाद भएको छु रानी !"

त्यसपछि उसले साउन २९ गतेको झरी परेको साँझको मुटु चिसो हुने घटना सुनायो । उसले भन्यो– ऊ घर फर्कंदै गर्दा चुँडिएर बाटोमा बगिरहेको भलमा लत्रिएको बिजुलीको तारबाट करेन्ट लागेर ३४ दिनसम्म मरणासन्न अवस्थामा पुगेको र पछि शरीर निको भए पनि करेन्ट लागेर ढल्दा मेरुदण्डमा लागेको गहिरो चोटका कारण जनेन्द्रिय सदाको लागि शिथिल भएको दर्दनाक घटनाको बेलिबिस्तार लगायो । त्यो सुनेर राधारानी आफैँलाई हजार भोल्टको झट्का लागेझैँ भएर अचेत भई । किसुनले पानी छम्केर बिउँझायो । राधारानी किसुनको छातीमा घोप्टिएर धेरै बेर रोई र रुँदै आफूले पाप सोचेकोमा माफी मागी । त्यस्तो कठीन घडीमा आफूले साथ दिन नपाएकोमा पश्चात्ताप गरी अनि आफूले गर्ने मायामा कत्ति पनि कमि हुन नदिने प्रण गरी । दुवैले रोएरै बिताए त्यो पहिलो रात ।

दुवैले जीवनलाई सामान्य रूपमा लाने प्रयासमा रहे । दुवै खुशी नै देखिने प्रयास गर्दै थिए तर छरछिमेकमा सबैले राधारानीलाई दयाभावले हेर्ने र कुरा गर्ने गरेको उनलाई पटक्कै मन परेन । के युवा, के प्रौढ, के पुरुष, के स्त्री ! प्रायः छिमेकीहरू छेडखानी गर्न मौका पर्खिरहन्थे । कतिले प्रेम प्रस्ताव तेर्स्याए, कतिले आवश्यक परेको सहयोग गर्न तत्पर रहेको बताए, कतिले 'अब पोइल जान्छे' भने । अँध्यारो भएर बसेकी भनेर सासूले गुनासो गर्न थाली । यी सबै दुत्कारहरूलाई आँसुको घुट्कोसँगै पिई राधारानीले ।

एक साँझ अविवाहित देवरले नशाको सुरमा दुष्प्रयास गरेपछि उसको धैर्य बाँध फुट्यो । बाध्य भएर रुँदै दुःख पोखी किसुनलाई । किसुनले आफ्नो कमजोरीमाथि धिक्कार्दै राधारानीसँगै रोयो । किसुनले आफ्नो आँसु पुछ्यो र राधारानीको पनि । अनि, राधारानीलाई अँगालोमा बेरेर निधारमा गहिरो चुम्बन गऱ्यो । राधारानीको हात तानेर आफ्नो कपालमा राखी कसम खान लगायो । राधारानीले किसुनको हरेक कुरा विनाप्रश्न मान्छु भनी कसम खाई ।

"रानी !", किसुनले भने, "म तिमीलाई असाध्यै माया गर्छु । त्यसैले तिमी मलाई र यो दुष्ट समाजलाई छोडी फर्केर जाऊ । तिमी स्वतन्त्र भई आफ्नो जिन्दगी जिऊ !"

राधारानीको स्मृतिभङ्ग गर्दै ककपिटबाट विमानले हिथ्रोमा पाइला टेकिसकेको बतायो । राधारानीले आँसु पुछी । मन नलागी-नलागी जिउ तन्काई, हातैले कपाल मिलाई अनि बाहिर हेरी । चिसो मुटु लिएर कठ्याङ्ग्रिएको लन्डनको बाक्लो हुस्सुभित्र धमिला प्रकाशपुञ्जहरू झल्याकझुलुक पार्दै विमान बिस्तारै टर्मिनलतिर गुडिरह्यो ।



# पत्थरहरूको देश

✍ मञ्जुल मितेरी



यसपालिको जनगणनामा
स्वात्तै घट्यो मानिसहरूको जनसङ्ख्या
बढ्यो ह्वात्तै पत्थरहरूको आवादी ।

हरेक रात बसेर जाग्राम
ढुकिरहन्छन् बाटोभरि पत्थरहरू
झिसमिसेमै घाम टिप्न हिँडेका पाइतालाहरूलाई
उप्काइदिन्छन् नङहरू
र, अट्टहास गर्छन् रगतको अभिषेक लिएर ।

पत्थरहरू सल्बलाइरहेछन्
धानका बोटहरूमा, आँपका बोटहरूमा
गुराँसका बोटहरूमा
फल्ने, फुल्ने अभीष्ट दूराशय लिएर ।

चक्रव्यूहको कहालीलाग्दो भुमरी छेकेर
शिरमा भयानक पत्थरको धराप थापेर
एउटा बाटो बोकेर उभिएको छ अक्कर
छोपेर मृत्युसम्म पुग्ने बाटोको साइनबोर्ड ।

आमने-सामने छन् पत्थरहरू
लुकामारी खेलाउँदै पिठ्युँमा बन्दुकहरू
लेखाएर छातीमा मान्छेहरूको जन्म-मृत्यु ।

पत्थरहरू सल्बाइरहेछन् चुलाहरूमा
मन्दिरहरूमा, देवीथानहरूमा
खण्ड-खण्डहर धरातलमाथि, धरातलमुनि
अर्तिउपदेशमा तल्लीन छन् बूढा पत्थरहरू
आफ्ना सन्तानहरूलाई
आफूभन्दा कठोर बनाउन
उन्मत्त छन् किशोर-किशोरी पत्थरहरू
भविष्यभरि प्रजननको एकमात्र उद्देश्य बोकेर
ध्यानमग्न छन् केटाकेटी पत्थरहरू
मान्छेलाई पत्थर बनाउने मन्त्रहरू जपेर ।

म एक अजङ्गको गर्भिणी पत्थरलाई
मायादेवी ब्युँताउन खोजिरहेछु ।

■■

*कुमामोतो, जापान*



# पातालको कथा

✍ मौन आवाज

यो समय
स्खलनको झण्डा गाडिएको छ पातालमा !

गोडिरहेछ लिङ्गहीन हातहरू
कोप्रामा उम्रेको मगज फूल !

चौपाया चिन्तनको भीडबाट कोही चिच्याइरहेछ
- उज्यालो बचाऊ !
- उज्यालो बचाउ !!

मानसिक रोगको अन्तिम फेजबाट
फुत्त निस्किएको छ
एउटा विरक्त साँझ
आदिम उपत्यकाको गल्लीमा
र, हिँडेको छ नामूद नगरवधूसँग डेटिङमा !

एउटा हातमा कण्डम
र, अर्को हातमा गीता बोकेर
दिग्भ्रमित आधुनिक मान्छे
दोबाटोमा उभिएको छ- ठिङ्ग !

सभ्यताको नदीमा बगिरहेछ
बीर्य, रगत
खकार
र, एक युगीन मूर्च्छना !

यो शहरको झ्यालमा झुन्डिएको छ
हाकुपटासी
सँगै झुन्डिएको छ एउटा पुरानो संस्कृति !

यो शहरको कान्लामुनि
अहिले पोखरी छ भ्यागुतो खेल्ने
जहाँ
पहिले/पहिले देखिन्थ्यो यो शहरको अनुहार !

लाखे नाच्दै हिँड्थ्यो जहाँ
अहिले त्यहाँ
त्यो डबलीमा डान्सबार खुलेको छ !

जहाँ खर्पन बिसाएर हर्क चाः
थकान मेट्थ्यो
अहिले त्यहाँ बसपार्क बनेको छ !

हरिया फाँटहरूमा
स्मृतिको पहाडबाट पहिरो खसिरहेछ ।

कलात्मक टुँडाल
प्राचीन मन्दिर
र, मौलिक बस्तीहरूमा
बुलडोजरले खनिरहेछ
स्वर्ग पुग्ने नयाँ राजमार्ग !

दिवङ्गत सम्पदाहरूको आँखीझ्यालबाट
कहिले इतिहास चुहिन्छ
कहिले संस्कृति चुहिन्छ
कहिले चुहिन्छ—
कला-साहित्य र दर्शन !

अहिले पातालमा
पोर्नस्टारहरूको गुप्ताङ्गबाट घाम उदाउँछ
कर्पोरेट कार्यालयहरूबाट समय हिँड्छ
दूतावासहरूको निर्देशनमा हावा चल्छ !

अहिले पाताल
मेलम्ची कचौरामा बोकेर उत्तानो परिरहेको छ
र, काकाकुल प्रेतात्माहरू
जीवनको सुख्खा मरुभूमिमा
क्याक्टस रोपिरहेका छन् !

अहिले पाताल
निद्राको ट्याब्लेट चपाएर
दिनभर सुत्छ-मुत्छ-सुत्छ-मुत्छ-सुत्छ !

अहिले पाताल
फूलहीन-सपनाहीन-सम्भावनाहीन
र, उज्यालोहीन
लगभग मृत
लगभग ध्वस्त
लगभग नष्ट
बाँचिरहेको छ !

यतिखेर पातालका मान्छेहरू
मस्तिष्क हराएको कोमाग्रस्त पृथ्वी बोकेर
सर्वाङ्ग नग्न कुदिरहेका छन् !

यतिखेर
स्खलनको झण्डा गाडिएको छ पातालमा
र, शोकधुन बजिरहेको छ नेपथ्यमा ।

र, यति नै खेर
सभ्यताको लास काँधमा बोकेर
मलामी जुलुस निस्केको छ शहरमा !
■■

गजल

# दुई गजल



✍ रामकृष्ण काफ्ले

लट्ठी भुल्ने गर्छन् यहाँ मान्छे, खोला तरेपछि
जीवनभर खुट्टा तान्छन् मान गर्छन् मरेपछि

बसेसम्म चुपचाप लोलोपोतो सह्राहना
घरपट्टी खराब लाग्छ मात्र डेरा सरेपछि

भागी, लुकी हिँड्दासम्म त्यही बत्तीस लक्षणकी
उही अब बेठीक हुन्छे घरजम गरेपछि

हिजोसम्म सबै थिए ज्यानै मागे दिन तयार
सबैलाई चिनेँ मैले अप्ठेरोमा परेपछि

भाँडो मानी काम लिन्छन् नाता-गोता जोडीजोडी
ठाँडो ठानी फालिदिन्छन् काम आफ्नो टरेपछि ।
■■

वाचा तोडी अर्कै वाचा गरिन् भनिदिउँला
मेरा नजरबाट उनी झरिन् भनिदिउँला

परिचितले भेटी सोधे हालखबर उनको
अर्कैतिर घरडेरा सरिन् भनिदिउँला

भैगो नि त एक पटक त भन्ने ठाउँ छैन
मेरो मनको खोला उहिल्यै तरिन् भनिदिउँला

किन, कसो भने भन्छु हिजो-अस्तिसम्म
हुँदा भरी खल्ती मेरो चरिन् भनिदिउँला

सपनीले रातमा सोधे दिनमा बिपनीले
मेरा नाममा उनले बुर्की छरिन् भनिदिउँला

इतिहासको नाता लगाई भविष्यको लागि
मनले सोधे मेरा लागि मरिन् भनिदिउँला ।
■■

# भूगोल एकः परिदृश्य अनेक

✍ राजेन्द्र कार्की



समुद्रको किनारमा फिरफिर चलेको बतासले जुल्फी बिगारेको बेला सेल्फी खिच्न पनि खासै जाँगर चलेको थिएन । मान्छे आफू जेजस्तो भए पनि फोटामा राम्रो देखिन चाहान्छ । फोटो मान्छे होइन तर मान्छेलाई त्यही फोटो राम्रो किन चाहिन्छ ?

जिन्दगीमा पहिलो पटक पुगेको सुन्दर ठाउँमा तस्वीर खिच्न कसलाई रहर नलाग्ला र ! तर, लागेर मात्र के गर्नु, सेल्फी लिन सकस परिरहेको थियो । हात तन्काउँदै आफूलगायत भाउजू टङ्कमाया, सखी शान्ता, भान्जा अर्जुन र भतिज शेखर (कृष्ण) लाई एउटै तस्वीरमा कैद गर्न कोशिश गर्दै थिए । त्यही बेला एउटा गोरे बूढो आएर सोध्यो- "डु अल अफ यु बान्ट टु बि इन्क्लुडेड इन अ सिङ्गल पिक्चर ?"

"यस प्लिज" भनैं ।

उसले हामी सबैलाई एउटै तस्वीरमा अटायो । "थ्याङ्क यू" भन्दै कृतज्ञता ज्ञापन गरे । "नो वरिज" भन्यो ।

हामी छुट्टिन खोज्दै थियौं । ऊ त्यत्तिकै रोकिएन, फेरि बोल्न थाल्यो ।

उसको नाम भर्नन रहेछ । उमेरले पाको देखिन्थ्यो । पाको हुँदै गएपछि मान्छे अस्ताउन लागेको घामजस्तै हुँदो रहेछ । ऊ बिस्तारै एक्लिँदै जाने रहेछ । जति एक्लिँदै गयो, उति बोलौँबोलौँ लाग्ने रहेछ । उति नै मनको बह पोख्न मन लाग्ने रहेछ । त्यो बह पोखेन भने भरिँदो हो । पोख्न नपाउँदा मान्छे उकुसमुकुस हुने रहेछ । आखिर भरिएको तलाउ पनि पोखिन पाएन भने फुट्छ ।

भर्ननको लामो जिन्दगी आफैँमा एउटा ठूलो सँगालो थियो । ऊ त्यो सँगालो पल्टाएर सुनाउन चाहन्थ्यो । सबै पानाहरू पल्टाउन्जेल त बस्न नसकिएला, तर पाना पल्टाउन सुरु नगर्दै हिँड्न पनि भएन । त्यसैले उठिसकेका पाइलाहरू अगाडि बढ्न सकेनन् ।

भर्नन जर्मन मूलको मान्छे रहेछ । उसका हजुरबा र हजुरआमा प्रथम विश्वयुद्धपछि जर्मनीबाट क्यानडा आएका रहेछन् । आमाबुबा क्यानडामा जन्मे पनि ऊ अमेरिकाको न्युयोर्कमा जन्मेको रहेछ ।

श्रीमतीको नाम लाना रहेछ । लाना नाम सुन्ने-बित्तिकै उनी युक्रेनियन मूलकी होलिन् जस्तो लागेको थियो । मेरो अनुमान फेल खाएन, हो रहेछ । युक्रेन र पूर्वी युरोपका महिलाहरूको नाम प्रायः लाना हुने गर्छ । हजुरबा र हजुरआमा युक्रेनबाट आएका लानाको कथा पनि भर्ननकै जस्तो रहेछ ।

भर्नन र लाना दुवैले न्युयोर्क सरकारको सेवामा लामो समय सेवा गरेका रहेछन् । भर्नन न्युयोर्क शिक्षा विभागको सुपरिटेन्डेन्डबाट अवकाश लिएको रहेछ । त्यो भन्दा अगाडि अमेरिकी सेनाको तर्फबाट भियतनाममा घाइतेहरूको सेवा र उद्दार कार्यमा करीब चार वर्ष खटेको रहेछ । ऊ आफूलाई भेटानर्स भनेर चिनाउनमा गर्व गर्दोरहेछ ।

"अनि भियतनामी घाइतेको पनि उद्धार गऱ्यौं ?" जिस्क्याएँ । "गरे, तर पहिले त आफ्नैलाई गर्न पऱ्यो नि !" उसले पनि आँखा झिम्क्याउँदै भन्यो ।

लाना पेशाले नर्स रहिछिन् । उनले नर्सिङ पेशा न्युयोर्क अस्पतालबाटै सुरु गरेर त्यहीबाट अवकाश लिएकी रहिछिन् । अवकाश जीवन बिताउन उनीहरू टेक्सासको साउद पाद्रे आएका रहेछन् । न्युयोर्क उनीहरूका लागि जाडोमात्र थिएन, ज्यादै महँगो पनि थियो । त्यहाँ अवकाश जीवन बिताउन कठिन भएको

रहेछ । सस्तो र न्यानो ठाउँमा उनीहरूको जीवन धेरै सहज बनेको रहेछ । झन् नजिकैको समुन्द्रको किनारले मोहनी लगाएछ ।

उनीहरूको कथा सुनिसकेपछि सोचेँ- मान्छे जति बूढो हुँदै गयो, जीवन उति सजिलो हुनुपर्ने रहेछ । सँगसँगै मनको बह पोख्ने ठाउँ पनि चाहिने रहेछ ।

समुन्द्रको किनार आउजाउ गर्नु दुवैको दैनिकी बनेको रहेछ । सँगै अरू दुई जोडी बूढाबूढी पनि आउँदा रहेछन् । उनीहरू पनि मुस्कुराउंदै हामीसँगै भर्ननको गफ सुनिरहेका थिए ।

भर्नन थप्न थाल्यो- "साउद पाद्रेमा नब्बे प्रतिशत मान्छेहरू स्पेनिस मूलका छन् । तिमी-हामीजस्ता अन्य मूलका मान्छेहरू मुश्किलले आठ-दश प्रतिशत होलान् । उनीहरू परिवार उन्मुख छन् र संयुक्त परिवारमा बस्न रुचाउँछन् । साह्रै मिजासिला र मेहनती छन् । यो देश बनाउन उनीहरूको ठूलो योगदान छ ।"

टेक्सासलगायत अमेरिकाका दक्षिण-पश्चिम राज्यमा बसोबास गर्ने अधिकांश मान्छे मेक्सिकन मूलका हुन्छन् तर उसले मेक्सिकन नभनेर स्पेनिस भन्यो । किन भन्यो भनेर कुतूहलता जागिरहेको थियो ।

मेक्सिकन भन्दा हेपिएको ठानिएला भनेर उसले स्पेनिस भनेको रहेछ । हेपेर अझ कतिपयले 'मेक्सा' पनि भन्दारहेछन् । तर तिनै मेक्सिकन नभई अमेरिकाका कतिपय ठाउँमा ढल सफा नहुने रहेछन् । ग्रोसरी र मासु पसल नचल्ने रहेछन् । डर्टी, डेन्जर र डिफिकल्ट अर्थात् थ्री डि काममा उनीहरूकै रगतपसिना बग्दारहेछन् ।

अमेरिकाको अर्थतन्त्रमा मेक्सिकन मूलका मान्छेको योगदानको प्रशंसा भर्ननले गऱ्यो । विनाकन्जुस्याइँ गऱ्यो । मलाई मनमनै लाग्यो, भर्नन असल मान्छे रहेछ । जातिवादी (रेसिस्ट) रहेनछ ।

भर्ननजस्ता मान्छेले नै अमेरिकालाई संयुक्त राज्य अमेरिका बनाउनका हुन् । उनीजस्ता असल मान्छे नहुँदा हुन् त कति मान्छे जर्ज फ्लोयड भइसक्ने थिए होलान् । जातिवादको डढेलोले अमेरिका जलिसक्ने थियो होला । अमेरिकामा मात्र नभएर जुनसुकै देश र समाजमा पनि असल मान्छे हुन्छन् । तिनै असल मान्छेले मानव सभ्यताको विकासलाई विनाश हुनबाट जोगाएका छन् । दुष्ट मान्छेले आफ्नो स्वार्थको रोटी सेक्न द्वन्द्वको आगो बाल्छन् । त्यही आगोले समाज र सभ्यता दुवैलाई खरानी बनाउँछ । आखिर एउटा कुहिएको आलुले नै पूरै आलुलाई कुहाउने हो । विष पनि कहाँ धेरै चाहिन्छ र ! अलिकति विषले पूरै पानीलाई विषाक्त बनाउँछ ।

साउद पाद्रेमा भान्जा र भतिजका तीन वटा स्टोर (पसल) रहेछन् । ती स्टोरमा मेक्सिकोबाट आएका मान्छे कामदार (कर्मचारी) रहेछन् । उनीहरूकै भरमा चलेको रहेछ । चोरीचकारीको समस्या पनि भोग्नुपरेको रहेनछ । केली नाम गरेकी केटीले चलाएको स्टोर राम्रोसँग चलेको रहेछ । सफासुग्घर र व्यवस्थित देखिन्थ्यो । भान्जा महिनामा एक दुई पटक निरीक्षणको लागि जाँदार हेछन् । भान्जा भन्दै थिए - "केली मेक्सिकोबाट आएकी हो । साह्रै इमानदार छे । यसलाई सानो हिस्सा शेयर दिएको छु । यो ठाउँ शान्त छ । झैझगडा हुँदैन र गोली काण्ड पनि हुँदैन ।"

साउद पाद्रेमा मेक्सिकोबाट अनधिकृत रूपमा आएका मान्छेको सङ्ख्या ठूलै रहेछ । मेक्सिकन पासपोर्ट भएपछि त्यहाँ बैङ्क खाता खोल्न र ड्राइभर लाइसेन्स लिन पाइने कुरा भान्जा बताउँदै थिए ।

साउद पाद्रे टापु जाँदा झमझम पानी परिरहेको थियो । लगभग चार किलोमिटर लामो पुल तरेर त्यहाँ पुग्दा पानी अलि कम भयो । समुन्द्र (गल्फ अफ मेक्सिको) को किनारमा त्यति धेरै मान्छे थिएनन् ।

हामी पुग्दानपुग्दै पानी रोकियो । घाममा लागेको थियो र सिरसिर हावा पनि चलिरहेको थियो । त्यो हावासँगै समुद्रको छाल तरङ्गित हुँदै किनारासम्म आउँदै जाँदै गरेर हामीसँग जिस्किरहेको थियो । त्यो छालसँग केही समय बिताएपछि हामी पनि नजिककै रहेको काठको पुलमाथि चढ्यौँ ।

पुलमाथिबाट सेतो र नरम बालुवाको बिच धेरै परसम्म देखिन्थ्यो । कति लामो होला भनेर कुतूहल पनि लाग्यो । अमेरिकाको मात्र नभएर संसारकै लामा बिचमध्ये त्यो पनि पर्दोरहेछ । पूरै यात्रा गर्न नसके पनि केही किलोमिटर परसम्म जाऊँ जस्तो लाग्यो । गाडीबाट

समुन्द्रको किनारैकिनार लगभग बीस-पच्चीस किलो-मिटरको यात्रा गऱ्यौँ । निरन्तर एउटै दृश्यमात्र दृश्यालोकन गरेपछि दिक्क लाग्दोरहेछ । त्यसपछि हामी मेक्सिकोतिर मोडियौँ ।

म र मेरी सखी पहिलो पटक मेक्सिकोमा पाइला राख्दै थियौँ । तर, कुन ठाउँ जाने ? थाहा थिएन । भान्जाले भने- “अरू ठाउँभन्दा प्रोग्रेसो (निउभो प्रोग्रेसो) सुरक्षित मानिन्छ, त्यही जाऔँ, त्यही लन्च गरौँ । समय भयो भने दाँत सफा गर्दा पनि हुन्छ । अमेरिकाभन्दा धेरै सस्तो छ ।”

अमेरिका र मेक्सिकोको सिमानामा रियो ब्राभा नामले पनि चिनिने रियो ग्रान्डे नदी रहेछ । नदीवारि अमेरिकाको पाटोमा अग्ला फलामे बार थिए । मेक्सिकोबाट गैरकानूनी आप्रवासीहरू प्रवेश गर्न नसकून् भनेर ती बार चौबीसै घण्टा खडा थिए । बारमा मात्र भर नपरेर सेना र प्रहरीको थप निगरानी पनि हुने रहेछ ।

पारि मेक्सिको पाटोमा बार थिएन, खुला थियो । अमेरिकाबाट अनधिकृत रूपमा लुकिछिपी कोही छिर्ला भन्ने चिन्ता मेक्सिकोलाई थिएन । सीमाजाँचमा एक जना सुरक्षाकर्मी थिए । उनले कसैको पनि पासपोर्ट हेरेनन् र भिसा पनि जाँच गरेनन् । मेरी सखीले हातमा बोकेको ब्यागचाहिँ स्क्यानरमा राख्न लगाए ।

टाकोस र बुरिटो दुवै मेक्सिकोका मुख्य र प्रसिद्ध खाना रहेछन् । तर, हामीले बुरिनो खाएनौ । टेक्सासदेखिनै टाकोस खाने हाम्रो लक्ष्य थियो । मेनु हेरिसकेपछि टाकोस मगायौँ । सँगसँगै लेमोनेट, टकिला र टेम्पुरा पनि थप्यौँ । तर, ढिलो पुगेकोले त्यो लन्च नभएर डिनरजस्तो भएको थियो ।

हामी प्रोगेसो जाँदा ठूलो पानी परेको थियो तर पुग्ने बेलामा पानी रोक्किएको थियो । प्रोग्रेसोका सडकका बीचबीचमा हिलाम्य खाल्डाखुल्डीहरू थिए । हिलो उछिट्याउँदै खाल्डे सडकमा प्वाँप्वाँ हर्न बजाउँदै गाडीहरू घाचाक्कघुचुक्क गर्दै दौडिरहेका थिए । कुनै कुनै गाडी शहर थर्काउने गरी गीत बजाउँदै थिए ।

फलाम र जस्तापाताले बनाएका सानासाना टहराहरू सडक-किनारमा देखिन्थे । पसलमा हातले बनाएका कपडा, स्वीटर, काठ र माटाका भाँडाकुँडा जतातत्तै देखिन्थे । कतकता नेपाल तथा भारतका बजार पुगेजस्तो अनुभूति हुन्थ्यो ।

प्रोग्रेसोमा मङ्गोल अनुहारका आदिवासीजस्ता मान्छे धेरै देखिन्थे । घर, टहरा, सडक र थरीथरी अनुहार देख्दा आफ्नै ठाउँको शहरबजार पुगेको हो कि जस्तो अनुभूति हुन्थ्यो ।

छ बज्दानबज्दै पसल बन्द हुँदा रहेछन् । हामीले टाकोस खाँदै गरेको रेस्टुरेन्ट पनि बन्द हुने सुरसारमा थियो । हामीबाहेक अरू ग्राहक हिँडिसकेका थिए । लगभग दुई सय जना अट्ने रेस्टुरेन्टको ठूलो हल मूर्दाघाट जस्तो सुनसान थियो । त्यो देख्दा त कताकता डर पनि लाग्दो रहेछ ।

“मेक्सिको घुम्न जाँदा हातमा मोबाइल फोन नबोक्नू, घडी, गरगहना नलगाउनू ।” मेरो मेक्सिकन ग्राहकले भनेको कुरा याद आएपछि झन् पो डर लाग्यो । मेरी सखीले ब्याग बोकेकी थिइन् । हातमा घडी र सुनको चुरा थियो । उनलाई नछोडी म पछिपछि लागेँ ।

अमेरिकाको सिमानातिर आउने बेलामा पुलको मुनि मान्छेहरू चिच्याउँदै थिए । हेरेँ, पैसा माग्न चिच्याएका रहेछन् । उनीहरू चिच्याउँदा के भन्दै थिए ? त्यो बुझिएन । स्पेनिस भाषा बुझ्ने मान्छे हामीमध्ये कोही थिएन । पुलमाथिबाट पैसा खसाइदिएँ । त्यो लिन दौडादौड चल्यो ।

अमेरिकी सिमानामा चेकजाँच एउटा ठाउँमा मात्र थिएन । जाँच पनि कडा थियो । पासपोर्ट, भिसा सबै स्क्यानिङ मेसिनमा राखेर जाँच गरे । सेक्युरिटी जाँच गर्ने कर्मचारी पनि प्रायः सबै मेक्सिकन मूलकै देखिन्थे ।

सीमानाको जाँचले मात्र अमेरिकालाई पुग्दो रहेनछ । लगभग ढेड सय किलोमिटर भित्र आएपछि फालफुरियज भन्ने ठाउँमा पनि चेकजाँच हुंदो रहेछ । जाँचको क्रममा कुकुरेले गाडी सुँघ्यो भने पूरै गाडी खोलेर जाँच गरिँदो रहेछ । तर हाम्रो गाडी सुँघेन । नसुघेकोले सुरक्षाकर्मीले सामान्य प्रश्न सोधेर जाने अनुमति दिए ।

मेक्सिको हुँदै अनधिकृत रूपमा आउने मान्छे त्यही फालफुरियजको जङ्गल हुँदै आउने रहेछन्। त्यस्ता मान्छेको पहिचान गर्न त्यहाँ थप सुरक्षा जाँच हुने गरेको जानकारी भान्जा भतिजाले दिए ।

सोचेँ- दुई देशको समुन्द्र एउटै हो। सीमानाको बीचमा बग्ने नदी एउटै हो। भूगोल एउटै हो। आकाश एउटै हो। बहने हावा एउटै हो। शासन व्यवस्था पनि फरक छैन तर वारिपारिको अवस्था आकाश-पाताल फरक छ। अमेरिकापट्टि अग्ला र सुन्दर घर छन्। आठ लेनका सडकमा चिल्ला गाडीहरू तारिख नै छुट्ला कि जस्तो गरेर हुइँकिरहेका छन् । हुन त मेचीपारि सिलगुडीमा पनि अमेरिकाका जस्तै ठूलाठूला सडक बनिसके । तर, मेचीवारि काकडभित्तादेखि सुरु भएका सडकको हाल पनि मेक्सिकोको भन्दा कति नै फरक छ र!

साँझ परेपछि अमेरिकामा पसल र ग्याँस स्टोर बन्द गर्न कसैलाई हतार छैन । स्टोर र रेस्टुरेन्टहरू रातभरि चलेका छन् । मान्छेहरू बेफुर्सद देखिन्छन् । कसैले ब्याग खोसिदेला वा हातको घडी, गलाको गहना लुछिदेला भन्ने त्रास पनि थिएन । छुट्टै आत्मविश्वास । छुट्टै सुरक्षाको अनुभूति ।

अमेरिकामा गोलीकाण्ड हुन्छन् । सर्वसाधारण मारिएका समाचार मिडियामा आउँछन् तर गोली काण्डमा परिएला र मरिएला भनेर कोही पर्वाह गर्दैनन् । त्यही अमेरिका जान संसारका मान्छे मरिहत्ते गर्छन् । किन ? किनकि अमेरिकाको सम्पन्नता र वैभवमा मान्छेलाई मृत्य पनि स्वीकार छ ।

मेक्सिकोको प्रोग्रेसोबाट फिर्दै गर्दा सन् २०१२ मा प्रकाशित ड्यारोन एसेमोग्लु र जेम्स रोबिन्सनको पुस्तक 'ह्वाइ नेसन्स फेल' को याद आयो । त्यो पुस्तकले संस्थाको विकासलाई देशविकासको आधारको रूपमा औँल्याएको छ। राजनीतिक, आर्थिक र सामाजिक संस्थाको विकास हुँदा र नहुँदा कति फरक पर्छ भनेर मेक्सिको र अमेरिकाको उदाहरण दिँदै संसारभरिका शासक र शासन प्रणालीको तुलना गरेको छ । तथापि, किताबमा अमेरिकी चश्माको छायाँ देखिन्छ ।

एउटै माटो, एउटै हावापानी, एउटै वन जंगल, एउटै खोलानाला र एउटै समुन्द्र भएरमात्र देश कहाँ उत्तिकै समुन्नत बन्दोरहेछ ! नबन्दो रहेछ । साँध जोडिएको एउटा छिमेकी बन्दैमा अर्को छिमेकी नबन्ने रहेछ। एउटै भूगोल र आकाश हुँदैमा दुई देश उस्तै हुने रहेनछन् । एउटै भूगोल र आकाशमा परिदृश्य अनेक देख्दा धेरै प्रश्न मनमा उब्जिने रहेछन् ।

तर, ती प्रश्नका उत्तर खै ? कहिले मिल्ला उत्तर ?

■■

गीत

# गीत

## ✍ सागर फुयाँल



फूलजस्तो मनलाई छल गर्ने खाल बनायौ
अनमोल जीवनलाई पत्थरको हाल बनायौ ।

तिम्रो खुशी, तिम्रो हाँसो, सबै तिम्रो भन्दाभन्दै
मायालुको जोवन गयो, तिम्रो रहर गन्दागन्दै
जित तिम्रो, हार उनको हुनुपर्ने जाल बनायौ
फूलजस्तो मनलाई छल गर्ने खाल बनायौ ।

पर पुग्नुपर्छ भन्थ्यौ, कहाँ पुग्यौ तिमी आज
प्रेयसीको साथ छोडी के पायौ पराईमाझ ?
उनको विश्वासलाई खोला तर्ने चाल बनायौ
फूलजस्तो मनलाई छल गर्ने खाल बनायौ ।

■■

*हाल बर्लिन, जर्मनी*

# छिटपुट सम्झनामा स्रष्टा धुस्वाँ सायमी



✍ रासा

एक दिन धुस्वाँ सरले मलाई घरमा बोलाएर एउटा पुरानो फाइल दिँदै भन्नुभयो, "राजु, यो लगेर पढ्नू र के-कस्तो छ भन्नू !" मैले त्यो फाइल आफ्नो घरमा लिएर आएँ । धेरै समय लगाएर त्यो सामग्री पढेँ । पछि उहाँलाई फोनमा भनेँ, "सर, मैले पूरा पढिसकेँ । धेरै ठाउँमा भाषा मिलाउनुपर्छ, बनाउनुपर्छ । के गर्ने ?"

उहाँले तत्क्षण खुशी हुँदै बोल्नुभयो, "हो, त्यसकै लागि त तिमीलाई दिइपठाएको ! त्यसको फोटोकपी मैले एउटी कवयित्रीलाई दिएको थिएँ, भाषा-सम्पादन र टाइप गर्नका लागि । मोरीले फिर्तै गरिनन् । यसो हेरिदिनू, पछि किताब छाप्नुपर्छ है !"

मैले हस् भनेँ । त्यो 'भत्केको मान्छे' शीर्षकीय नेपाली उपन्यासको हस्तलिखित पाण्डुलिपि थियो, जुन अद्यापि मसित सुरक्षित छ ।

०००

धुस्वाँ सरले एउटा जिम्मेवारी दिनुभएको थियो, उहाँका प्रकाशित लघु एवम् दीर्घ कविताहरूका एक-एक वटा सङ्ग्रहको सम्पादन/प्रकाशन गर्ने । मैले सहर्ष स्वीकार गरेको थिएँ । त्यसका लागि उहाँले आफूसँग रहेका फुटकर रचनाहरूको एकमुष्ठ फोटोकपी मलाई दिनुभएको थियो । ती कविताहरू तीन भाषा (नेपाली, नेपालभाषा र हिन्दी) मा थिए । नेपालभाषा र हिन्दी भाषामा लेखिएका कविताहरूलाई नेपालीमा उल्था गरेँ । छोटा कविताहरूको सङ्कलन (भातको सपना) तथा लामा कविताहरूको सङ्कलन (सालिक होइन मानिस) तयार पारेँ र टाइप पनि गराएँ ।

दुई पाण्डुलिपि तयार भएपछि उहाँलाई बुझाइदिएँ । उहाँले खुशी हुँदै भन्नुभयो, "ल, धेरै-धेरै धन्यवाद छ ! किताब छाप्नका लागि एउटा मान्छेलाई भनेको छु, उसले वचन दिएको छ । म उसलाई फोन गर्छु । तिमीलाई पछि सूचना गरूँला । हुन्न ?"

जवाफमा मैले टाउकोमात्र हल्लाएँ र फर्किएँ ।

केही दिनपश्चात् उहाँले मलाई त्यो मान्छेको सम्पर्क नम्बर दिएर भेट्न जानू भन्नुभयो । मैले मानेँ ।

पुसको ठिही । बिहानै सात नबज्दै म त्यस मान्छेकहाँ गएँ । फोन गरेँ । त्यसको मान्छे मलाई लिन आयो । सँगै गएँ । घरमा पुगेँ । आलिशान महलको प्रवेशद्वारनेरको कक्षको सोफामा बसायो । बसेँ । चिनारी भयो । कुराकानी गरियो । पाण्डुलिपि बुझाएँ । त्यसले मेरो फोन नं. लियो र भन्यो, "म पछि सम्पर्क गर्छु ।"

"हवस् त !" भनेर म त्यहाँबाट फर्किएँ । दिउँसो धुस्वाँ सरलाई सबै कुरा बताएँ । उहाँले "म पहल गर्छु" भन्नुभयो । निकै समय बित्यो । त्यसको फोन आएन । सरले पनि केही भन्नुभएन । म पनि चुपचाप बसेँ ।

सर बित्नुभयो । काम-कुरा लथालिङ्ग भयो ।

ठमेलतिरको त्यो सुन व्यापारी कुरियागाउँ, थापाथलीमा बस्छ । व्यापार त गर्छ, समाज-सेवाको नाममा अनेकन् कार्य गरिदेखाउँछ अझै पनि ।

०००

धुस्वाँ सरले मलाई एउटा डायरी पनि दिनुभएको थियो । उक्त डायरीमा हिन्दी भाषामा लेखिएका विनाशीर्षकीय प्रेम कविताहरू थिए । त्यसको अग्रभागमा 'राजी के नाम' उल्लिखित थियो । मैले उहाँलाई त्यति बेला सोधेको पनि थिएँ– "को हुन् राजी ?"

जवाफमा उहाँले यसो भन्नुभएको थियो, "एकेडेमीका कर्मचारी हुन्, अहिले बितिसकिन् । राजी काल्पनिक नाममात्र हो ।" अरू कुरा कोट्याइनँ मैले ।

डायरीका केही कविताहरू शीर्षकसहित नेपाली भाषामा अनुवाद गरेर केही पत्रिकामा छपाएको पनि थिएँ । डायरी अझै सुरक्षित छ मसित ।

०००

एक अपराह्न । श्रद्धेय स्रष्टा धुस्वां सायमीको घर वसुन्धरा, ताहाचलमा खाजा खाँदै गफिइरहेका थियौँ । बीचमा फोनको घण्टी बज्यो । उहाँले उठाउनुभयो । केही कुराकानी भए । छिनमै फोन राख्नुभयो । पछि, उहाँले मलाई एक कविको नाम लिएर सोध्नुभयो, "यी राम्रा कवि हुन् र ?" मैले आफ्नो राय दिएँ । उहाँले पुनः भन्नुभयो, "यिनले मेरो

बारे लेख लेख्ने रे ! अरू त होइन, पुरस्कारका लागि खुसामद गरेका हुन्, मलाई थाहा छ ।"

ती कविले उहाँबारे एउटा लेख लेखेर छपाए पनि । त्यही साल तिनले युवावर्ष मोती पुरस्कार पनि पड्काए । यद्यपि, तिनी राम्रा छन्दवादी कवि हुन् । हाल  तिनी पाताल प्रवासमा छन् ।

०००

यस्तै गर्मीयाम । म धुस्वाँ सरकोमा थिएँ । गफ गरिरहेको थिएँ । खाजा पनि खाइरहेको थिएँ । बीचमा उहाँले भन्नुभयो, "राजु, थाहा छ एउटा कुरा- आज सूर्य (उहाँको नाति, धर्मपुत्रीको छोरा) ले के भन्यो ? उसले चि.....सो भात खान्छु पो भन्यो ! यो चिसो भातले मलाई एकदम छोयो र मैले कविता लेखेँ ।"

■■





# गजल

✍ कमल सापकोटा



अर्कैतिर पाइला मोडी सार्न पनि सकिएन
मनको छायाँ अर्कैतिर पार्न पनि सकिएन ।

जति चोट देउ बरू सहिदिन्छु सधैँभरि
तिम्रो माया छैन भन्दै टार्न पनि सकिएन

साँचो माया साचे पनि छातीभित्र सधैँभरि
आकाशका जुन तारा झार्न पनि सकिएन

भन्ने गर्छन् मान्छेहरू– भुलिदिन सजिलो छ
निष्ठुरीझैँ मनले माया मार्न पनि सकिएन

मलाई देखी दोबाटोमा तर्की-तर्की हिँडे पनि
आफैँ हिड्ने गोरेटोलाई बार्न पनि सकिएन

कमल भन्छ कुनैबेला जीवनदेखि थाके पनि
निराश भई आफैँदेखि हार्न पनि सकिएन ।

■■

*नाम्ची, इन्डिया*

# हरिता

टीकाराम रेग्मी



हरितामा छटपटी बढेको थियो । 'मैले के सुनेँ यस्तो आज ! के यो हुने कुरा होला र ?' उनले कोल्टो फेरिन् । दिउँसो एक वयस्क दासीले बोलेका शब्दहरू आएर कानमा ठोक्किए । पानीको घैँटो खोकिलामा अड्याएकी दासीले अहिल्यै भनेझैँ मानिन्, "जल्ले भने'नि किन चाइयो ? तँलाई गुरुमा हुन पाए भइहालो ! झूटो किन बोल्तैँ र ? ललाटाँ लेख्यो रैच तेरो भाग्गे । उस्तै आइमाई, हाम्ले दासी जिन्नकी खेप्दै जाँको त्यईँ, तँ भनी दुनियायी गुरुआँ भइस् ।" आफ्नो अनुहार हँसिलो भएको अनुभव गर्दै कोल्टो फेरिन् ।

अर्को भनाइ पनि सम्झिन्, "यौटाआ दुर्भाग्गे अर्काआ भाग्गे हुँदोरैच । बेचारी कृपीलाई छोराआ मुख हेर्न मात्त लेख्योरैच । तँलाई पो जन्माइदिएइ रैचन् । दासीपुत्री हस्तिनापुर राजायी गुरुआँ हुन पाउने, राजाओ मान-भोग अर्न पाउने, यतिले भक्न, आफूले नजन्माइकिन पुत्रवती हुन पाउने । ओहो, तेरो भाग्गे !" उनले कोल्टो फेरिन् ।

'के यो साँच्चै होला ? कसरी पत्याऊँ ? के यो पितामहकै आदेश होला ?' अकल्पनीय कुराले झस्काइमात्र रहेथ्यो । 'हैन पो कसरी भनूँ, हावा नचली पात हल्लँदैन भन्छन् ।' हरिताको मनमा आँधीबेहरी बढारिएको थियो । 'हुन पनि त सक्छ । धराले भएर मैलै काम गरिरैछु ।' उनले लामो सास तानिन् । 'यो कुरा साँच्चै रै'छ भने यति ठूलो मान कसरी बोक्न सकूँली ? मैले नै शिर निहुँर्‍याउन पर्नेहर्ले मलाई कसरी सोस्ती गर्लान् । मैले के भनेर बोलाउँला तिनीहर्लाई ?' मुटु ढुकढुक गरिरहेको थियो । उनीसँग आफ्नै प्रश्नका जबाफ थिएनन् ।

०००

"पितामह, पुत्र त हरिताको रेखदेखमा राम्रैसँग हुर्कँदै छ । उसको शारीरिक वृद्धि पनि राम्रै होला तर मातृस्नेहको अभावमा मानसिक स्वास्थ कमजोर हुने हो कि भन्ने चिन्ताले व्यग्र छु । के आज्ञा हुन्छ ?" प्रसङ्गवश द्रोणाचार्य धर्मराउँदो स्वरमा बोले । भीष्म पितामहले सधैँझैँ द्रोणको गम्भीर बोली ध्यान दिएर सुनेका थिए । केही समय सोचमग्न रहेर उनले आँखा खोल्दै भने, "आचार्य, विषय गम्भीर छ !"...केही समय फेरि चुप रहे । "कुमार हरितासँग रमाएकै छ । ऊबाहेक अरूबाट यत्तिको वात्सल्य प्राप्त हुने सम्भावना देखिँदैनँ । बरु, उसैलाई विवाह गर्दा बालकले स्वाभाविक आमा पाउनेछ । मेरो दृष्टिमा, हरितामा इमानदारिता पनि झल्कन्छ । सर्वोत्तम समाधान यही होला !" भीष्म पितामहले द्रोणको अनुहार नियाल्दै बिस्तारै बोले ।

भीष्मको कुराले अकमक्क पर्दै थिए द्रोण तर कुरा गर्दागर्दै प्रसङ्ग अन्तै मोडियो । दुई दिनपछि पितामहसँगको भेटमा द्रोणले भने, "पितामह, हजुरको आज्ञा शिरोपर गरेँ ।"

०००

वैवाहिक सम्बन्धको औपचारिकतापछि द्रोणले भने, "हरिता, तिमी मेरी धर्मपत्नी भयौ । हिजोसम्म जे भए पनि आजदेखि राजकुमारहरूले गुरुमा भनी पुकार्नेछन् । राजा-महाराजासमेतले गुरुपत्नीको सम्मान दिनेछन् । आफूलाई सोहीअनुरूपको बोली, वचन र व्यवहार गर्न सिक ।"

हिजोसम्म तँ भनेर सम्बोधित आफूलाई तिमी भनेको सुन्दा अप्ठ्यारो मान्दै भनिन्, "आज्ञा होस्, पाउकी दासीले जे गर्नुपर्छ । हजुरको इच्छा पूरा गर्नु मेरो धर्म हो ।" उनको लज्जापूर्ण स्वर थियो ।

"अबदेखि अस्वत्थामा तिम्रो आफ्नै पुत्र हो । अहिले बालक छ । काँचो माटो हो । तिमीले जस्तो बनाउँछ्यौ, त्यस्तै हुनेछ । सच्चा आमाको रूपमा तिमीले जस्तो भूमिका निभाउनुपर्छ, स्वविवेकले निभाऊ । उसले जीवनभर तिमीलाई आमा भन्न पाओस् । यसबाहेक मेरो अरू कुनै आग्रह छैन ।"

"यो पाउकी दासीले जानिन भने आज्ञा होला । यहाँ आएदेखि पूरै ध्यान कुमारमा दिएकी छु, अब पनि दिनेछु ।" उनले शिर निहुर्‍याउँदै भनिन् ।

"हरिता, अब कुमार होइन, पुत्र भन ।" द्रोण बोले ।

उनले चुपचाप शिर नुगाइन् । अस्वत्थामासँग निकटको सम्बन्ध भइसकेकाले उनका पतिदेवको इच्छाले गौरवान्वित महसूस गरिन् ।

... ... ...

हरिता कल्कलाउँदो उमेरकी, राम्रो लाऊँ, मीठो खाऊँ, दौँतरीहरूबीच कसरी राम्री देखिऊँ भन्ने उमेरकी थिइन् । गरीब परिवारकी छोरी भएकीले अभावको भोग नै जीवनको अर्थ थियो उनका लागि । अब भने जन्मघरमा जस्तो अभाव भोग्नुपर्ने अवस्था रहेन । न राजदरबारमा भइरहँदा राजकुमार, राजकुमारी, महारानीहरूको बकस वा दयाकी पात्र भई जीवन नै चाकरीमा बिताउनुपर्ने थियो, न कसैले हेप्ने वातावरण । अब त उनको सामाजिक मर्यादा उच्च भएको थियो र सबैकी पूज्य हुँदै थिइन् ।

धेरै पहिलेदेखि देखिआएका र विगत केही समयदेखि दासी भनिएता पनि धाईका रूपमा एउटै कुटीमा रहेकीले हरितालाई द्रोणको रूप, आनीबानी र व्यक्तित्वबारे जानकारी थियो । बास उही थियो, काम लगभग उही थियो, मात्र एउटा सम्बन्ध फेरिएको थियो र फेरिएको थियो पहिचान अनि थपिएको थियो— अलिकति दायित्व । तथापि, पतिदेवलाई नजिकैबाट नियालेर हेर्न मन लाग्यो आज । ऋषिले उनीहरूबीचको सम्बन्ध र उनको अपेक्षा सुनाइरहँदा भावविह्वल भएकी उनले आफ्ना पतिको अनुहारलाई नियालेर हेर्नेसम्म आँट गरेकी थिइनन् । जब पतिका कुरा सुनेर लजाउँदै भान्साभित्र पसेकी थिइन्, पतिलाई कतिखेर देखूँ हुन लाग्यो । पछाडि फर्केर जुल्क्याइन् । ऋषि आँगनमा ओछ्याइरहेको मृगचर्ममा पुत्रलाई खेलाइरहेका थिए । उनको तृष्णा झन्झन् बढेर आयो । उनको यो हेराइ पानीले भरिएको गाग्री आफ्नै हातले समातेर घटघटी पिउन आतुर प्यासीका मुखमा थोपाथोपा चुहाएझैँ लाग्यो । देखेर मात्र चित्त बुझेन, राम्ररी हेर्नैं मन लाग्यो । ढोकाको पल्ला आधा खोलेर साडीको आँचलले आँखाबाहेक अनुहार छोपेर हेरिन् । उत्तर किशोरावस्था, दुब्लो-पातलो खिरिलो शरीर, चिल्लो कालो रङको कपालले ढाकेको शिर, दाह्रीजुँगाले ढपक्कै ढाके पनि कताकति झुल्किने कल्कलाउँलो पालुवाजस्तो गहुँगोरो अनुहार र चम्किला आँखाले धपक्कै बलेको देखिन् । वात्सल्य छोरोलाई खेलाउँदा देखेकै थिइन्, अहिले त झन् दयाका सागर हुन् भन्ने निष्कर्षमा पुगिन् । हेर्दाहेर्दै ऋषिको चुम्बकीय शक्तिले आफैँलाई तानेर उनको सान्निध्यमा पुगेको महसूस गरिन् । यस चरम आनन्दको अनुभूतिले उनका दुवै आँखा चिम्लिए । शरीर सिरिङ्ग भयो । कताकता काउकुति लागेर आयो— ‘अरू साथीजस्तो आज कसकी भोग्या हुँदै छु भन्ने थाहै नपाई जोसुकैका लागि तयार रहनुपर्नेछैन । उहाँ त मेरोमात्र र म उहाँकी मात्र ! मलाई कुन तपस्याको फल मिलेको होला ! यो संसारमा मजति भाग्यमानी नारी अरू को होला र !’ मनमनै सोच्दै पुनः आँखा चिम्लिन् । बन्द आँखाअघि नजिकैको जलकुण्डमा तैरिरहेका हाँसका युगलजोडी झलक्क आए । र, मनमनै भनिन्, ‘आहा, यो स्वर्गीय आनन्द !’ ढोका नै ऋषि हुन् कि भैँ गरी उनको शरीर ढोकामै लहसियो ।

अश्वत्थामाको रेखदेख नियमित नै थियो । आज पनि सोही तरिकाले बालकलाई खुवाई-पियाई चिल्लो लगाई छातीमा टाँसेर सुताइन् । यसअघि कहिलेकाहीँ ऊभन्दा पहिले आफैँ निदाउने उनी त्यस रात यिनै कल्पनाहरूले अबेलासम्म पनि निद्रादेवीबाट टाढै थिइन् ।

अर्धतन्द्रामा केही आवाज आएझैँ लाग्यो । कान स्वाभाविक किसिमले टाठा भए । सतर्कता बढाइन् । स्वागतमा रहँदा अपनाउनुपर्ने शृङ्गारतिर ध्यान दिइन् । ‘उहाँ आउनुभएको पो हो कि ? वा, मेरै बाटो हेरिरहनुभएकोले इशारा गर्नुभएको पो हो कि ? आउनुभयो भने कसरी सेवा गर्नुपर्ला ? के होला उहाँको चाहना ? मलाई कसैले सिकाएको पनि छैन, गल्ती पो हुन्छ कि !’ उनको चिन्ता र उमङ्ग समानान्तर थियो । एकाएक उनको विचार फेरियो, ‘हँ, कतै उहाँ पनि राजकुमारहरूजस्तै शिकारी त हुनुहुन्न ?’

उनले तुरुन्तै आफैँलाई दुत्कारिन्, ‘एउटा परिपक्व ऋषि पनि दरबारिया छाडा साँढेजस्तो कसरी हुनुहोला र ? के सोच्न पुगैँ मैले ? उहाँ त ऋषि पो त !’ लामो सास फेरिन् । ‘त्यस्तै हुनुभएछ भने पनि उहाँ त एउटामात्र हुनुहुन्छ । मेरा साथीहरू कतिबाट सताइन्छन् ।’ उनले झलक्क सम्झिन्, ‘राजकुमारी द्रौपदीले पाँच पतिलाई खुशी दिएकै छन्, मैले त एउटा पतिको सेवा गर्ने त हो, केको चिन्ता !’ ढुक्क हुँदै सन्तुष्टिको सास फेरिन् ।

०००

ऋषि द्रोणाचार्यले शयनकक्षमा प्रवेश गर्नुअघि सधैँझैँ स्तुतिवाचन गरेर बिस्तरामा गए तर निदाउन सकेनन् । कुटी उही, शयनकक्ष उही, बिछ्यौना उही, छोरो जहाँको त्यहीँ तथापि निद्रादेवीको आलिङ्गन टाढै रह्यो । कोल्टो फेरे । हिजोसम्म छोरालाई हुर्काउने एउटै

चिन्ता थियो । आज भने अनेकन तरङ्गहरू छरपस्ट पोखिन थाले । 'को थिई ऊ हिजोसम्म ? आज को भई ? आजबाट उसको परिचय फेरिएको छ र यो मसँग जोडिएकी छ । के म पूर्ववत् स्वतन्त्र छु ? हिजोसम्म मलाई हेर्ने लोकदृष्टि आज पनि उस्तै होला ? भोलि पनि उस्तै रहला ? अहँ ! यो सबै हरिताको परिवर्तित भूमिकाको कारणले भएको हो ।' सोच्दै थिए, सोच फेरियो, 'उसको भूमिका फेरियो । अनि मेरो ? ममात्र कसरी यथास्थितिमा रहन सक्छु ?'

उनले कोल्टो फेर्दै लामो सास फेरे ।

'जेसुकै होस्, चाहे संसार मेरो बिरुद्धमा रहोस्, मेरो अभीष्ट भनेको अश्वत्थामालाई स्वस्थ र वीर बनाउन सकँ भने मूर्ख द्रुपद नरेशको अपमानको बदला लिएरै छाड्छु ।' सोचिरहेका थिए, उनको अगाडि द्रुपदले गुरुकुलको सहपाठी हुँदा भनेका शब्द कानमा ताजै हुनेगरी ठोक्किन पुगे, "द्रोण, कुनै दिन दुःख परेछ भने सम्झनू ।" यो सुखद वाक्य सम्झनासाथ उनलाई अर्को घटना आएर झस्कायो, "के रे ? साथी ? को साथी ? त्यो त छात्रावस्थाको कुरा थियो । अहिले त म द्रुपद नरेश, तँ कङ्गाल, केको साथी ? छोरो जन्माउन सक्नेले दुधका लागि गाई माग्न मसँग आउने हो ? आर्जन गर्न नसक्नेले सन्तान किन जन्माउनु ?" यो सम्झनाले उनको रगत अहिले पनि उम्लिन थाल्यो ।

'हो, मैले जे गरेँ, ठीक गरेँ । भीष्म पितामह ठीक हुनुहुन्छ । मेरो अश्वत्थामा अब वीर योद्धा हुनेछ । द्रुपद नरेशलाई पाठ सिकाउन मेरो शक्ति पर्याप्त हुनेछ ।' उनी ढुक्क भए । सोच्दै थिए, उनको भावनाले अर्कै पोयो समात्यो।

'हिजोअस्ति पनि हरितालाई बोलाउँथेँ । ऊ बोल्थी । स्वाभाविक प्रतिक्रिया दिन्थी । आज पनि बोलाएँ । प्रतिक्रिया पनि दिई । तर आजको बोलीचाली र व्यवहार किन होला यति भिन्न ?'

उनले आँखा चिम्ले । आँखा त चिम्लिएका मात्र थिए तर उनको अन्तर्दृष्टिले हरितालाई झन्झन् नजिक पायो । हिजोअस्तिकी हरिताभन्दा आजकी हरिताको अनुहारमा निकै ठूलो भिन्नता आएको पाए । 'हिजोकी चञ्चल हरिता आज किन यति सौम्य छे ? आज उसको सौन्दर्य किन यति धेरै जादुमय ? किन यति मोहक, फक्रेको सयपत्री फूलजस्ती ? कि मेरो दृष्टिदोष होला ? किन झुक्यो उसको नजर झन्झन् बढी ? उसलाई पनि यो भिन्नताको असर परेको होला कि ? ऊ पनि मजस्तै सोचमग्न होली कि ? के सोच्दै होली ?' उनले पुनः कोल्टो फेरे । 'के मैले मेरो भूमिका फेर्नु आवश्यक छ ?' उनले आफैँलाई प्रश्न गरे । 'अन्यथा, विवाहको अर्थ के हुन्छ ?' अर्को मनले प्रश्नमै जवाफ दियो । 'के हुनसक्छ यसको अर्थ ?' उनको पहिलो मन बोल्यो ।

'अहँ, मेरो अश्वत्थामालाई सौतेनी आमा दिनुहुँदैन । उसलाई एउटी सिङ्गै, अविभक्त आमाको ममत्वले सिञ्चित गर्नुपर्छ ।' उनी दृढ भए ।

'तँ के उसको जवानीलाई अग्निकुण्डमा आहुति दिन चाहन्छस् ?' एक मनले सोध्यो ।

'होइन, उनलाई मातृत्वले पूर्ण बनाउन मेरो पुत्र नै समर्पित गरेको छु । कसरी भयो आहुति ?' अर्को मनले प्रतिप्रश्न थियो ।

'जसरी तैँले पुत्रको वृद्धिमा शारीरिक तथा मानसिक सन्तुलनको आवश्यकतालाई जोड दिइस्, के कसैको जैविक आवश्यकताविना सन्तुलित जीवनको गाडा चल्छ ?' अर्को मनले तीखो प्रश्न गऱ्यो । तर यसपटक द्रोण नाजवाफ भए, टोलाएमात्र ।

०००

हरिताको वैवाहिक जीवनका एक दिन, दुई दिन हुँदै महिना दिन बिते । पति द्रोणाचार्यको प्रतीक्षामा कति रात बिताइन् तर न उनले कुनै सङ्केत गरे, न त उनले आफैँ केही प्रयत्न गर्ने आँट गरिन् । प्रातःकालदेखि साँझसम्म ऋषि आफ्नो नित्य अध्ययन, राजकुमारहरूलाई दिने शिक्षादीक्षामै व्यस्त रहन्थे ।

खानका लागि केही समय तथा पुत्रका बारेमा केही सोधपुछ र उसलाई खेलाउने समयमा हरितासँग भेट हुने गर्दथ्यो । त्यस समयमा पनि हरिताको अनुहारमा उनको दृष्टि त पर्थ्यो तथापि एउटी बैँसालु पत्नीलाई हेर्ने पतिदृष्टि कहिल्यै परेन ।

समयसँगै हरितामा केही प्रश्नहरू आफैँ जन्मन थाले । 'उहाँ पौरुषहीन हुनुहोला ? तर कसरी ? त्यसो भए, छोराको जन्म ? त्यसो भए मेरै कारणले उहाँमा यो उदासीनता आएको हुन सक्छ ? त्यसो भएको भए मैले महसूस गर्नेगरी रिस उठ्न सक्थ्यो वा अरू कुनै प्रतिक्रिया त अवश्य पाउँदी हुँ । मलाई हेर्ने दृष्टि पनि फरक हुन सक्थ्यो । त्यो पनि कहिल्यै महसूस भएन । उहाँ पहिलेजस्तै निस्पृह देखिनुहुन्छ । अध्ययन, अध्यापन र पुत्रबाहेक उहाँमा अरू कुनै चेष्टा देखिँदैन । उहाँलाई म युवती हुँ भन्ने कुरा त पक्कै थाहा छ र एक युवतीका चाहना पनि थाहा हुनैपर्छ तर पनि किन भइरहेछ यस्तो ?' उनी

छट्पटाइरहिन् जसरी अरू रात छट्पटाउँथिन् । सोचिन्, 'मैले केही त पत्ता लगाउनै पर्छ ।'

एक रात अश्वत्थामा निदाइसकेपछि उनी उठिन् र पति द्रोणको शयनकक्षतिर लागिन् । उनको शयनकक्षको झ्यालबाट मधुरो प्रकाश बाहिरिएको देखिन् । उनलाई लाग्यो– उहाँ त अहिलेसम्म अध्ययनमै हुनुपर्छ । उनले बिस्तारै पाइला चालिन् । झ्यालको आडैमा पुगेपछि उनी द्विविधामा परिन्- 'फर्कौं कि देखिऊँ ?' उनले तत्काल निर्णय गर्न सकिनन् । केही क्षण भित्रबाट नदेखिनेगरी झ्यालको नजिकै उभिइरहिन् । कुनै आवाज वा पति ब्युँझै रहेको सङ्केत पाउन सकिनन् ।

'होइन, ढोका खोली हेर्नु नै बेस होला ।' एक पाइला बढाइन् तर पाइला अघि बढ्न मानेनन् । अर्को मन बोल्यो, 'किन आयौ भनी सोधनी भएछ भने के जबाफ दिउँली ?' मन डरायो । फनक्क फर्किन् । पुनः सोचिन्- 'केही त गर्नैपर्छ आज ।' पाकशालाबाट माटोको सुराहीमा पानी भरिन्, पातले राम्ररी ढाकिन् र पतिको कोठातर्फ बढिन् । उनी सरासर गई पतिदेव बाहिरिँदा नछोइने तर देखिनेगरी राख्दै सोचिन्, 'हेरौँ, यसको प्रतिक्रिया के हुन्छ !'

भोलिपल्ट बिहान द्रोण ब्युँझनासाथ आफ्ना हात हेर्दै मन्त्र जपे र तत्कालै अर्को मन्त्र जप्दै भुइँमा ढोगे । त्यसलगत्तै कोठाबाट बाहिरिएका मात्र थिए, पानीले भरिएको सुराहीले स्वागत गरिरहेको पाए । यो सामान्य थिएन । यस स्वागतले उनको मस्तिष्कलाई उथलपुथल पार्‍यो। मन उद्वेलित भयो। उनको मनमा पुनः ज्वारभाटा चले।

खानाको समय थियो । द्रोणले बिहानैदेखि आफ्नो उद्वेलित मनमा लगाम लगाउँदै भने, "हरिता, राति तिमी ढोकासम्म गएपछि भित्रै पसेको भए पनि त हुन्थ्यो !"

हरिताको अनुहार यति सुन्दै लज्जावती भइसके तापनि मन भने रमाइरहेको थियो । एकछिनको मौनतापछि बोलिन्, "आज बाबूको बोलीले म पनि छक्क परेँ ।" हरिताले विषयान्तर गरिन् भन्ने बुझ्न ऋषिलाई कठिन थिएन । उनी मुस्काउँदै थपे, "यो तिम्रै देन हो ।" छोराको प्रसङ्ग चलेपछि उनका लागि अरू विषय गौण हुन्थे, भए । हरिताले चलाएको यही हतियारले उनको इच्छाविपरीतको प्रसङ्ग रोकियो ।

साँझ पर्‍यो । सबैका नियमितता सकिए । बाबू निदाइसकेको थियो । बिहान ऋषिको "भित्रै आएको भए पनि हुन्थ्यो"ले हरिताले सुखद ऊर्जा प्राप्त गरेकी थिइन्। उनको हृदयमा गुलाब फक्रन थालेका थिए। मुल्तानी माटोले अनुहार सफा गरिन् । शिरमा पारिजातको पगरी लगाइन् । मुसुक्क मुस्काउँदै पानीको छायाँमा आफूलाई हेरिन् । आफैँलाई मख्ख पार्ने अनुहार सुन्दर लाग्यो । हिजो बेलुकाझैँ नै पतिको कक्षभित्रै प्रवेश गरिन् । ओढिरहेको पछ्यौरा लत्रिरहेको रहेछ । मिलाएर ओढाइदिइन् । यसको स्पर्शले हो वा हरिता आउन सक्ने आभास पाएकाले हो, द्रोणले झस्याङ्ग भएझैँ शिर उठाए ।

उनी शिर निहुर्‍याएर पतिको अगाडि उभिइन् ।

दियालोको मधुर प्रकाशमा उनले हरितालाई तलदेखि माथिसम्म हेरे । यौवनले पूर्णरूपमा फर्केको कमलजस्तो धपक्क बलेको लज्जालु मुहार । उनका आँखा हरिताका आँखासँग जुधे । यौवनको प्यासले व्याकुल हरिताका ठूलाठूला चम्किला आँखा एकाएक भुइँतिर ओर्ले । लाजले रातीपिरी भइन् । ऋषिले उनका हात समातेर खाटमा बसाले । उनले सोचिन्, 'मैले कति धेरै अन्याय गरेकी रहेछु ? पतिदेव मेरो सामीप्यका लागि यति विघ्न अधैर्य हुनुहुँदोरहेछ तर म के भएकी हुँली ? यतिका दिनसम्म पनि म उहाँको शयनकक्षसम्म आउने साहस गरिनँ ।' उनी ऋषितर्फ लस्कँदै छोइने गरी बसिन् ।

हरिताको यो गतिले ऋषिलाई किंकर्तव्यविमूढको अवस्थामा पुर्‍यायो । शिर निहुर्‍यो । 'वास्तवमा मैले ठूलै अपराध गरेछु । मेरो स्वार्थका लागि, मेरो पुत्रको लागि एक नारीको बली चढाउँदै छु । यो पापका निम्ति सजाय त पाउनैपर्छ मैले । कहिले पाउँछु ? स्वर्गका अप्सराहरूले श्राप दिन सक्छन् भने यिनले नसक्ने कुरा त हुँदैन ! सजाय त पक्कै पाउँला, तथापि त्यस सजायले यिनले पाएको धोका मेटाएर ओइलाउन गइरहेको उनको यौवन पुनः प्राप्त गर्न सक्लिन् ? के मैले भोगेको सजाय यति गम्भीररूपले पीडित हरितालाई न्याय हुन सक्ला ?' उनले हरिताले थाहा नपाउने गरी लामो सास फेरे ।

हरिता पतिको प्रतिक्रिया पर्खेर बसिरहेकी थिइन् । तर उनी धेरै बेरसम्म मैनबत्तीझैँ अचल, अवाक भएको देखिन्। एक पटक पुलुक्क पतितिर जुल्क्याइन्। तर पनि अहँ, शरीरका कुनै अङ्ग चलायमान भएनन् । बरु उनका दुवै आँखा बन्द र मुहार गम्भीर देखिन् । उठेर हिँड्न ठिक्क परेकी थिइन्, ऋषिले बोलाए, "प्रिय हरिता !"

"हजुर" उनले पुलुक्क हेरिन् । उनले झुलुक्क हेरे । दुवैका आँखा जुधे । दुवै शिर आफैँ झुके भुइँतिर ।

"प्रिय हरिता ! मलाई थाहा छ, मैले मेरो पुत्रका लागि... ।" उनको आवाज बन्द भयो तर मन भने बोल्दै

थियो, 'एक फक्रँदो फूललाई सुकाइरहेको छु ।' पतिको भाषाको आसय हरिताले प्रस्ट बुझिनन् । उनी पुनः चुप लागे । उनी चुपै थिइन्, चुपै रहिन् । पतिको मुर्झाएको अनुहार र धर्मराउँदो स्वर सुनेपछि पनि मौन प्रतीक्षा गरिन् । गरिरहिन् । लामै समयसम्म पनि पतिको दृष्टि बदलिएन । उनी उठिन् तर 'बोलाउनु हुन्छ कि !' भन्ने आशाको त्यान्द्रो समात्दै बिस्तारै पाइला चालिन् । तर अहँ, केही भएन । उनी बाहिरिइन् ।

हिजोसम्म उनमा रहेको भ्रम जहाँको त्यहीँ रहे पनि उनको 'पुत्रका लागि' भन्ने वाक्यांशले भने केही सङ्केत गरेको महसूस गरिन् तर त्यो सङ्केत कुन विषयतर्फ थियो, खुल्न सकेन । उनका रातहरू जसरी बित्ने गरेका थिए, तीभन्दा फरक यही वाक्यांशले थपेको आशङ्काबाहेक केही भएन । बरु त्यति निकट हुँदा पनि पतिको मन नपग्लेको पाएपछि झन्झन् खिन्न हुँदै थिइन् ।

'के साच्चै पतिदेव पौरुषहीन हुनुहुन्छ ? अश्वत्थामा नै साक्षी भएपछि कसरी भनौँ पौरुषहीन् !' उनी द्विविधामा थिइन् । उनको मस्तिष्क भुँवरीमय थियो । पुनः अर्को विचार आयो, 'के पौरुषहीनहरू पिता भएका छैनन् र ? हस्तिनापुरका राजखलक आफ्नै बाबुका सन्तान हुन् ?' यो विचार लामो समय टिकेन । उनले आफैँलाई धिक्कार्दै मनमनै भनिन्, 'ती दरबारिया राक्षसहरूसँग एक ऋषिलाई कसरी तुलना गर्न पुगेँ ? धिक्कार छ मलाई !'

ooo

राजदरबारका अन्य नारीहरूसँग देखादेखसम्म भए तापनि बोलचाल भने कमैसँग मात्र हुन्थ्यो । आफू गुरूपत्नीको स्थानमा रहेकीले भेट भइहाले पनि सबैसँग मनका कुरा गर्न मिल्दैनथ्यो । यदाकदा आफ्ना अत्यन्त निकटवर्तीहरूले सुटुक्क भन्ने गर्थे, "तिमी त वरदानप्राप्त रहिछौ । हाम्रो स्तरका नारीहरूमा वरदान प्राप्त नगरीकन तिम्रोजस्तो स्वर्गीय जीवन जिउन पाउनु सम्भव थिएन ।" उनले वनावटी मुस्कान छर्दै छोटो वाक्य बोल्थिन्, "भाग्यको खेल त होला !" र, विदा लिन्थिन् । लामो समय बस्दा आफूले भोगिरहेको पीडाको झल्को देखिएला भन्ने कुरामा सचेत थिइन् उनी ।

"गुरुमा, तपाईंको त्याग मेरा लागि ऊर्जा भएको छ ।" द्रौपदीले एकदिन हरितालाई भनिन् । लाक्षगृह-दहन घटनापछि गुप्तबास रहेका पाण्डवहरू द्रौपदीसँगको विवाहपश्चात् हस्तिनापुर दरबारमा स्वागत गरिएका थिए । मुखले कुलवधूको रूपमा स्वागत गरिए तापनि कौरवलगायत कर्णसमेतको स्वार्थ दिवास्वप्न खण्डित हुन पुगेको थियो । 'पाँच पतिवाली'जस्ता विशेषण जोडी पुकार्नेहरूको कमी थिएन । यसैले पनि उनको दरबार 'घर'जस्तो थिएन । आफूसँग मन मिल्ने सङ्गतको खोजीमा रहेकी द्रौपदीलाई हरिता मिलेकी थिइन् । द्रौपदी राजकन्या तथा त्यस समयकी विद्वान् युवराज्ञी भएकीले दासीबाट गुरूपत्नीको हैसियतमा आएकी हरिता सुरुसुरुमा त द्रौपदीसँग खुल्न दकस मान्थिन् । द्रौपदी भने हरिताले गर्नुपरेको त्याग बुझेकीले अनेक पीडामा डुबेर बस्नु परे तापनि हरिताको तुलनामा आफ्नो पीडालाई हल्का महसूस गरेर सोच्थिन्, 'मानसिक तनावले ग्रस्त हुनुपरे पनि जैविक सन्तुष्टिको अभाव त भोग्नुपरेको छैन, मलाई !'

हरिताको सङ्गतमा रहन थालेपछि द्रोणले अर्जुनलाई आफ्नो सर्वश्रेष्ठ चेलो मानेको, कौरवहरूको व्यवहार न्यायसङ्गत नभएका कुरासमेत थाहा पाउँदा उनको मन आफैँ बोल्ने गर्दथ्यो, 'पतिदेव आचार्यले पनि नुनको सोझो गर्नुपरेका हुनाले मात्र कौरवहरूको पक्षमा देखिनुभएको रहेछ ।'

बाटिकाको शीतलमा टहलिरहेको समयमा एकदिन द्रौपदीले भनिन्, "मैले एउटा कुरा सुनेकी छु, साँचो हो/होइन, थाहा भएन । आचार्य द्रोण पुत्रलाई नै सबै कुरा ठान्ने हुँदा छोराका लागि सबै कुरा गुमाउन तयार हुनुहुन्छ रे !"

द्रौपदीले यो कुरा कोट्याएपछि उनलाई द्रोणले एकदिन भनेको 'पुत्रको कारण' सम्झनामा आयो ।

"मसँग त्यति धेरै कुरा त हुँदैन । पुत्रप्रेम भने सत्य नै होजस्तो लाग्छ ।" हरिता बोलिन् ।

"यही कारणले तपाईंले झन् बढी पीडा भोग्नुपरेको छ भन्ने लाग्छ ।" द्रौपदीले एक कदम अघि बढेर कोट्याइन् ।

"त्यस्तो त महसूस गरेकी छैन," भन्दै हरिताले शिर निहुर्‍याइन् । उनको अनुहार अचानक मुर्झायो । मन भने अर्कै संसारमा पुगेर बोल्दै थियो, 'युवराज्ञी भएर पनि आफैँले स्वयम्वर गरेको, आफ्नै विजेता पति अर्जुनसहित पाँचै दाजुभाइकी साझा पत्नी भई बाँच्न विवश तपाईं मभन्दा कता हो कता पीडित हुनुहुन्छ ।"

"गुरुमा ! मैले सुनेको, देखेको, बुझेको र महसूस गरेका कुरा सबै सत्य हुन् भन्ने प्रस्ट छ । हो, उहाँले आफ्नो पुत्रलाई असर पर्छ कि भन्ने चिन्ताले आफूले पनि धेरै त्याग गर्नुभएको छ भने त्यसैको असरले तपाईं आफ्नै सन्तानकी आमा हुनबाट वञ्चित हुनुभएको छ ।"

द्रौपदीका कुराले हरितालाई 'पुत्रका कारणले' भन्ने द्रोणको भनाइको रहस्यका नजिक पुऱ्याएजस्तो लाग्यो। प्रस्ट हुन भने अझै सकेकी थिइनन्। उनले आँटै गरेर सोधिन्, "युवराज्ञी, के रहेछ त्यो कारण ? मलाई भन्न मिल्छ ?"

"हो, तपाईँबाट सन्तानको जन्म भयो भने आफ्नो छोरोले पाउने गरेको मातृत्व बाँडिने भयो । त्यसको प्रभावले अश्वत्थामाबाट उहाँले सोच्नुभएको इच्छा पूरा हुन सक्दैन कि भन्ने चिन्ता ।" द्रौपदीले लागेको कुरा खुलस्त पारिन् ।

'यो संसारमा हामीजस्ता आइमाई अर्कैको उद्देश्यप्राप्तिका साधनमात्र हुने गरेका पाउँछु ।' मनमनै सोच्दै बोलिन्, "ए, त्यसो होला र ?" उनले निकै ठूलो रहस्योद्‌घाटन भएको महसूस गर्दै भनिन्, "युवराज्ञी, आज मैले एउटा वचन माग्छु। कृपा हुन्छ ?" "भन्नोस् न, के होला ?"

"आज मेरो मन अलिक रूखो भएको छ, वचन पाऊँ न ।"

यस्तो कुरा कहिल्यै नगर्ने हरितालाई आश्चर्यका आँखाले हेरिन् । उनका पिलपिलाउँदा आँखा देखेपछि हृदय भरिएर आयो । द्रौपदीका आफ्नै आँखा रसाउन थालेपछि भनिन्, "हस् वचन भयो ।"

"युवराज्ञी, हरेक मान्छेको जीवनमा केही न केही रहस्यहरू हुँदारहेछन् । यो कुरा मलाई त भन्नुभयो । अब अरू कसैलाई नभनिदिनोस् । यो कुरा मेरा पति आचार्य द्रोणको इज्जतसँग त जोडिएकै छ, उहाँकी पत्नी भएकीले मसँग पनि । यी सबैभन्दा बढी त हस्तिनापुर राज्यकै इज्जतसँग जोडिएको छ । यही बचाइदिने वचन माग्छु ।"

हरिताले आफ्नो भनाइमा पूर्णबिराम लगाउन पाएकी थिइनन्, द्रौपदीले अचानक गर्ल्याम्म अङ्कमाल गर्दै रुन थालिन् । त्यस समयसम्म थामिएकी हरिता झन् ठूलो डाँको छाडेर रोइन् । केही समयको रुवाइपछि घुक्कघुक्क गर्दै द्रौपदीले भनिन्, "गुरुमा, तपाईं साँच्चैकी गुरुमा हुनुहुन्छ । यस्तै गुणकारी सखी पाएकैले त हो नि म यहाँ बाँच्न सकेकी। कति महान् हुनुहुन्छ तपाईं ! एउटा बालकका निम्ति आफ्नै कोख सुकाउन बाध्य भएर पनि गुरुकुल र हस्तिनापुरकै इज्जतको निम्ति यति धेरै चिन्ता लिन सक्ने तपाईंजस्ती अर्की कुनै सखी भेट्न सकूँली र मैले यस योनीमा ?" उनी अझै घुक्कघुक्क गर्दै आँसु पुछ्दै थिइन् ।

"युवराज्ञी, पीडाको कुरा गर्दा तपाईंको तुलनामा मेरै कम छ ।" हरिताले आँखा पुछ्दै भनिन् । साँझ पर्न लागेको थियो । उनीहरू दुवैले आफ्ना अनुहारलाई सामान्य पार्ने कोसिस गर्दै विदा भए ।

निवास पुगेको केही क्षणमा नै आचार्य द्रोण आइपुग्नासाथ हरिताले पानीले भरिएको सुराही लगी अगाडि राखिदिँदै मुस्कानले स्वागत गरिन् । पत्नीले यतिका वर्षमा पहिलो पटक गरेको यो सत्कार देखी आचार्य आश्चर्यमा पर्दै हातखुट्टा धोई भित्र पसे र छोरालाई भन्दा पहिले हरितालाई बोलाए । अनि मात्र छोरालाई । हरिताको अनुहार अन्य दिनभन्दा उज्यालियो । आफ्ना पतिप्रति अगाध प्रेम तथा श्रद्धाभाव बढेजस्तो लाग्यो। द्रौपदीसँग भएको वार्तालापपछि उनले एउटा सङ्कल्प गरेकी थिइन् । त्यो थियो- अब आइन्दा कुनै पनि दिन मैले मेरा पतिप्रति नकारात्मक भावना आउन दिनेछैन । त्यो साँझ पति पत्नीबीच केही कुराकानी पनि भयो । यसले एउटा सुखी तथा परिवारको झलक दिएको थियो । केही छिनपछि आचार्य आफ्नो शयनकक्षतर्फ लागे उनी, बाँकी रहेका काम सक्न ।

छोरो त सुतिसकेको थियो। हरिता पनि बिस्तरामा गई छोरालाई काखमा लिई पल्टिइन् । उनले कुनै कुरा नसोची सुत्ने प्रयत्न गर्दै थिइन् तर आज पनि निद्रादेवी उनीबाट टाढै रहन रुचाइन्। उनले नचाहँदा-नचाहँदै पनि द्रौपदी आएर अगाडि उभिइन्। उनीसँगको वार्ता स्वचालित रील भएर मस्तिष्कमा घुम्न थाल्यो । द्रौपदीले भनेको एउटा वाक्य "छोराको निम्ति जेसुकै त्याग्न तयार"ले भने घचघचाइरह्यो, चिमोटिरह्यो ।

उनको काबुमा नरहेको सोचाइ क्यामेराको रीलझैँ फनफनी घुमिरह्यो- 'कस्तो हो यो जीवन ? राजदरबारमा दासीकै रूपमा रहेकाहरू उनीहरूको इच्छा विपरीत पनि नाईं भन्न नपाइकनै कतिका अघोषित भोग्या भइरहेका छन् । म नै त्यहाँ भइरहेकी भए उस्तै हविगत भोग्नै थियो । कठै, कति निरीह छन् उनीहरू ! के छ उनीहरूसँग ? तर म ? सबैकी गुरुआमा, हस्तिनापुरका राजगुरुकी धर्मपत्नीको हैसियतमा छु । कसैले गलत नजर लगाउन सक्दैन मलाई । सबैकी पूज्य छु । कुनै वस्तुको खाँचो छैन मलाई । कसैले अड्कलिदिएको खानु छैन मलाई । केही मन लागे कसैसँग नसोधी धित मार्न सक्छु आफैं । कसैको दयामा बाँच्नुछैन मलाई । कुनै चिजको आशाले कसैको चाकरीमा जानुछैन मलाई, बरु धेरैको उपहार भोग गर्छु मैले ।' उनको मनमा ती अबोध तथा निरीह नारीहरूको टीठलाग्दो जीवनप्रति दया जागेर आयो । ती सबैलाई आफैँसँग तुलना गर्दै, जोख्दै मनमनै भनिन्, 'कठै तिनको जुनी !'

कविता

# नेपाल जप्दै मरूँ

✍ रुद्र ज्ञवाली



शोभा हुन् हिमशैल ताज शिरका छानो छ त्यो बादल
कालो मेघ कि त्यो घटा गगनको हो नेत्रको गाजल
छर्दा पर्वतमाथि बाल रविले नौला सुनौला रङ
बन्छिन् लाल धरा उषा किरणमा रङ्गीन पारी तन ।

हावा चल्दछ मन्द-मन्द गतिमा हम्केसरी चामर
ओढ्छन् पर्वतले सफेद धवला त्यो हुस्सुको च्यादर
झर्छन् झर्झर स्वेत स्वच्छ झरना गुञ्जाउँदै कन्दरा
इन्द्रेणीसङ साज सापट लिई श्रृङ्गार गर्छिन् धरा ।

लेख्छन् गीत चराहरू प्रणयका आला मुना-पातमा
भर्छन् नाद-निनाद कोकिलहरू सङ्गीतका तालमा
नाच्छन् छम्छम छम्म-छम्म झरना खोलाहरू गाउँछन्
यस्तै दिव्य छटा मनोहर कला संसार बिर्साउँछन् ।

चोरी सौर्य वसन्तको प्रकृतिले पोतेर पाखाभरि
झुल्छन् इन्द्रधनुषतुल्य वनमा नौला तरू वल्लरी
सम्मा फाँट मधेशमा शिखरले आकाश चुम्छन् जहाँ
मेरै देश छ स्वर्गतुल्य म ढुढौं भूस्वर्ग अर्को कहाँ ?

देखिन्छन् वरझैं हिमाल वधुझैं शृङ्गारमा मेदिनी
खोजे यत्न गरेर निश्चय यतै भेटिन्छ सञ्जीवनी
सानो मानिस छैन स्थूल सपना सानै छ बस्ने कुटी
लाग्यो रोग भने निदान म गरूँ खाएर आफ्नै बुटी ।

जस्तो जे छ ठिकै छ, छैन मनमा ऐश्वर्यको चाहना
नेपाली हुँ म बाँचु पौरख गरी छैनन् ठूला कल्पना
मेरो मोक्ष र धर्म-कर्म मनको नेपाल हो केवल
आफ्नै यो मनमा उठाउन सकौं विश्वासको देवल ।

इच्छा यत्ति छ यो गरौं मुलुकको अभ्यर्थना अर्चना
त्यागौं देह यसै पवित्र स्थलमा यै मात्र हो तिर्सना
जे-जे गर्न म सक्छु त्यो सब कुरा नेपालभित्रै गरूँ
मेरो ईश्वर भन्नु यै मुलुक हो नेपाल जप्दै मरूँ ।
■■

---

उनको मानसिक तरङ्ग प्रकाशभन्दा तीव्र गतिका घडीका सुइजस्तै निरन्तर चलिरहेकै थियो । उस्तै गतिमा घुमिरहेको रीलले आफ्नै जीवनको अर्को लय समात्यो– 'तर, तर म कहाँ छु ? मसँग जे छ, यो सबैले के हुँदोरहेछ ? मेरो जिन्दगीको वसन्त कता गयो ? मेरो रूप र यौवनको के अर्थ रह्यो ? न पतिले कुनै बेला गरेको छ यो सौन्दर्य पान, न अन्य युवाले नजर लगाएर हेरेको छ कहिल्यै, स्पर्श त कल्पनातीत नै भयो । न मलाई नै अन्य उडान भर्न सिक्दै गरेका वा सिकिसकेका भमराहरूतिर नजर लगाउने परिस्थिति बाँकी छ । न मलाई आफ्नै सन्तानकी आमा हुने अधिकार । तिनैका लागि बनाइएको मेरो कोख सुक्दै छ । तिनैका लागि बनाइएका मेरा यी वक्ष आफैँ मुर्झाउँदै छन् । समवयीसँग जैविक तृप्ति विनिमयका लागि प्रकृतिप्रदत्त वरको अर्थ के रह्यो ? कोपिलामै चुँड्न उद्धत बाजहरूको धावाबाट जोगाउँदै यही वासन्तिक वयका लागि साँचेको यो पुष्पकालको के अर्थ रह्यो ?' उनी केही बेर टोलाइन् तर पनि मनको बह बगिरह्यो, 'के जीवन भनेको यस्तै, ढुङ्गाजस्तै हुन्छ स्वचेतहीन, जसलाई पूजामात्र गरिन्छ ! आफैँलाई चिन्दैन, आफैँलाई बुझ्दैन !' उनको मन बोल्दै थियो, 'मेरा तिनै साथी-सङ्गातीहरूका जीवनको खिल्ली उडाउँदै भन्छु, 'त्यस्तो पनि जीवन ? तिनले के पाए ? के गुमाए ? मलाई आफैँप्रति गर्व लाग्छ, तर किन मैले आफ्नै हृदय राम्ररी छाम्न सकिनँ ? आफैँलाई कसरी हेरेँ ? तीभन्दा फरक त भएँ तर यो सबै भएर आखिर मैले नै के पाएँ ? के गुमाएँ ? धिक्कार छ मेरो जुनीलाई !'

उनी झस्याङ्ग भइन् । अचानक आफूलाई सम्हाल्दै सोचिन्, 'धत्, अनिष्ट भयो, मैले के सोचेँ ? अनर्थ भयो ।' उनले कोल्टो फेरिन्, ... ... ... । ■■

# आफैँ मास्टरजी भन

✍ डिल्लीराज अर्याल



के पढायौ ? सिकायौ के-कति ? मास्टरजी ! भन
शुल्कमै खोज्दछौ विद्या, आधार, अनुशासन ?
कमाइमै छ सम्पूर्ण तिम्रो ध्यान र चिन्तन
चल्छन् समाजमा चर्चा, गुनासा, गफ, गन्थन ।

हिजो त्याग, तपस्याले बनेथ्यौ देवतै तिमी
थिएन आजको लोभ, अविश्वास कतै, कहीँ
यदाकदा भए गल्ती सबै क्षम्य थिए तिनी
'गुरुर्ब्रह्मा गुरुर्विष्णु' त्यसैले भनियो पनि ।

ज्ञान-विज्ञानको सार गुरुकै भरमा रह्यो
शिक्षादीक्षा दिँदै जाने राम्रो परम्परा थियो
फेरिए साथ-सम्बन्ध, शिक्षा, आवाज फेरियो
सोच साँघुरियो, आफ्नै घेरामा आफु घेरियो ।

चल्यो प्रयोगको मेलो पढे, जाने, बुझे पनि
भयो माग सबै सिक्ने, खोज्ने प्रयोगमै भनी
चिरेर भ्यागुता, सर्पा, मूसा हेर्दै छ तै पनि
सिकेको सीप, शिक्षाले बन्यो विशिष्ट जीवनी ।

तिनै ज्ञान र शिक्षाले बन्यो मानिस डाक्टर
चिर्न सक्ने भयो आज मान्छेकै मुटु चर्चर
ज्ञानको, सीपको राम्रो प्रयोग नहुँदा तर
मान्छे रुँदै छ, झन् आज बगाई आँसु धर्धर !

के सिकायौ र यो मान्छे यस्तो क्रूर बन्यो भन ?
किन चिर्दै छ मान्छेले मान्छेकै यसरी मन ?
यो तिम्रै देन हो, हैन ? शिक्षा यो हो कि होइन ?
किन यस्तो भयो मान्छे ? आफैँ मास्टरजी भन !

■■



# केही मुक्तक

✍ दिङ्लाली कान्छो



१) कठिन मोडमा छ जीवन, भेट्नु नपरोस्
भयावह पीडा छ चौतर्फी, रेट्नु नपरोस्
आफैँले आफ्नै अचानोमा, नदिनू संवेदना
कसैको नाम सधैँका लागि मेट्नु नपरोस् !

■■

२) कुनै यादहरू बाहिर बस्ने गर्छन्
कुनै यादहरू सधैँ नै डस्ने गर्छन्
सकिनसकी ठेल्दै-ठेल्दै कुनैचाहिँ
अटिनअटी मुटुमा नै पस्ने गर्छन् ।

■■

३) नफ्याँक्नू जिन्दगी, नबोक्नू यो सधैँभरि
बिके पो बेच्नु यो, उतार्नु हौ कसोगरी ?
जतातत‌ै जाल-झेल, कपटकै खेती लौ
मरिमरी बाँच्नु भन्या खडेरी नै खडेरी !

■■

४) तिम्रो बैँस हेर्दाहेर्दै दिनदिनै ह्रास भयो
लाग्छ मेरो प्रकृतिको सम्पत्ति नै नाश भयो
भन्थेँ सधैँ झुलिरहोस्, यसरी नै फुलिरहोस्
ओइलिएर जान्छ होला भित्रभित्रै त्रास भयो !

■■

५. पर्दाअगाडि मान्छे थोरै खुलेको देख्छु
सारा संसार सानो, भन्दै डुलेको देख्छु
मान-सम्मान सबै कुल्ची हिँडेको किन ?
पर्दापछाडि मान्छे आफैँ भुलेको देख्छु ।

■■ *विराटनगर*



# वान डलर प्लिज !

✍ विजय खनाल

सदाझैँ आज पनि त्यो बूढो मानिस चाइनिज पार्कको ब्रेन्चमा वाकर समातेर बसेको भेटियो । उसलाई नदेखेझैँ गरेर तर्कन लाग्दै थिएँ, "हेल्लो फ्रेन्ड, वन डलर प्लिज !" भनेर कराइहाल्यो । मैले नसुनेझैँ पन्छन खोज्दै थिए, वाकरमा पाइला सार्दै मेरै नजिक आइपुगिहाल्यो । सदाझैँ स्वचालित खल्तीबाट एक डलर निकालेर दिएँ । मुसुक्क मुस्कुराउँदै "गड ब्लेस यु, गड सेभ यु..." के-के जाति भन्दै वाकर समातेर उभिइरह्यो । म केही नबोलीकन आफ्नो गन्तव्यतिर लागेँ । प्रायः दैनिकजस्तै यस्तै क्रम चलिरहन्थ्यो ।

म यो स्ट्रिटमा बस्न लागेको करीब एक/डेढ वर्ष भयो । मेरो एपार्टमेन्टभन्दा पारिपट्टिको ठूलो बिल्डिङको बाहिर लेखिएको छ- 'Old Care Center' (वल्ड केयर सेन्टर) । त्यहाँ एक सयभन्दा धेरै वृद्ध/वृद्धाहरू राखिएको छ । धेरैजसो वाकरमा र कोहीकोही स्ट्रलरमा हिँड्ने गर्छन् । केयर सेन्टरको बाहिर रूखको छहारीमुनि लामालामा ब्रेन्चहरू राखिएका छन् । वृद्ध/वृद्धाहरू दिनभरि नै बाहिरै टहलिइरहेका हुन्छन् । कोही क्यारेमबोर्ड, तास र चेसमा रमाइरहेका हुन्छन् भने कोही ठूलो स्वरमा रेडियो/एफ.एम.मा गीत लगाएर चुरोट तानिरहेका हुन्छन् । मैले बिहान-बेलुका यही बाटो हिँड्नुपर्ने भएकाले अधिकांशले मलाई देखेपछि मुस्कुराउँछन् । त्यसमध्येकै एक हुन्– मसँग सधैँ एक डलर मागिरहने ती वृद्ध ।

अग्लो ज्यान भएका ती वृद्ध व्यक्ति निकै मोटो तर रोगी र कमजोर देखिन्थे । पटक-पटक वृद्धाश्रम भवन पछाडितिर चुरोट तान्न गइरहन्थे । मेरो कोठाको झ्यालबाट त्यो भवन पूरै देखिने भएकोले फुर्सद हुनासाथ म झ्यालमा बसेर तिनीहरूका कृयाकलाप हेर्ने गर्थें । वृद्धाश्रमका बिरामी लिन ठूलो स्वरमा साइरन बजाउँदै एम्बुलेन्सहरू आइरहन्थे । एम्बुलेन्सको चर्को साइरनले आधा रातमा मलाई धेरै पटक झस्काएर ब्युँझाइदिएको पनि छ । सुरुसुरुमा त साइरनको एकोहोरो कर्कस आवाजले मेरो मुटु जोडले ढुकढुक गर्थ्यो । वृद्धहरू कसलाई, के भयो होला ? भनेर डरले पसिना नै आउँथ्यो । एक प्रकारले तिनीहरू मेरा दाजुभाइ वा साथीहरूजस्तै लाग्न थालेका थिए । अनि, झ्यालमा गएर नहेरीकन चित्तै बुझ्दैनथ्यो । वास्तवमा भन्ने हो भने मलाई ती वृद्धहरूसँग दैनिक भेटघाट भएन भने नरमाइलो शून्यताले जकडेको भान हुन्थ्यो ।

सदाजस्तै आज पनि प्रातः भ्रमणमा निस्किएको थिएँ । वल्ड केयर सेन्टरको दायाँपट्टिको कुनामा उनी वाकरमा बसेर झोक्राइरहेका रहेछन् । अनुहार झुकेको थियो, आँखा रसिला थिए । उनी निकै बिरामीजस्ता देखिन्थे । शून्य भावमा उनका आँखाले मलाई नियालिरहेको थियो । तर, आज उनले मलाई एक डलरको याचना गरेनन् । आँखा नझिम्क्याईकन मलाई हेरिमात्र रहे । शायद केही भन्न खोजिरहेका थिए । उनको अवस्थाको बारेमा मलाई सोध्ने औधि मन थियो । तर, केयर होमको नियम के हाे ? मिल्ने हो कि होइन आदि दोधारमा मेरा पाइला पार्कतिर मोडिए । बिहानभरि उनकै बारेमा सोचिरहेँ । उनको घर कता होला ? परिवार कता होलान् ? अथवा छैनन् कि ? भएमा बेलाबेला भेट्न त आउनुपर्थ्यो ! जसरी अरूहरूका छोरा, छोरी, नाति-नातिनाहरू आइरहेका देखिन्छन् । मनमनमा सोचेँ- उनको स्वास्थ्य अवस्था निकै जटिल देखिन्छ । मैले आजैचाहिँ एक डलर उनको हातमा किन राखिदिन सकिनँ ? अनि, एउटा अठोट गरेँ- 'घर फर्कने बेलामा

उनको हातमा पाँच डलर राखिदिन्छु ।' तर, घर फर्कने बेलामा उनी त्यहाँ थिएनन् । वाकर पनि थिएन । मैले चारैतिर उनलाई खोजी गरेँ तर फेला पार्न सकिनँ ।

एम्बुलेन्सको एकनासको चर्को आवाजले निद्रा खुल्यो । घडी हेरेको रातको दुई बज्दै रहेछ । मन थाम्न सकिनँ र झ्यालमा गएर केयर होमतर्फ हेर्न लागेँ । एक जना बिरामीलाई भित्रबाट स्ट्रेचरमा ल्याएर एम्बुलेन्समा राखी अस्पताल लैजान लागेका रहेछन् । अँध्यारोले गर्दा राम्ररी ठम्याउन सकिनँ ।

भोलिपल्ट बिहानको खाना खाने समय हुँदै थ्यो । केयर होमबाट ठूलो स्वरमा एम्बुलेन्सको साइरन बजेको आवाज आयो । मैले झ्यालमा गएर हेरेँ- तिनै वृद्धलाई सेतो कपडामा पोको पारेर ल्याइएको रहेछ । अवस्था देखेपछि अनुमान लगाउन गाह्रो भएन- सधैँ मेरा आँखाले पछ्याइरहने उनै वृद्धले यो संसारबाट सुटुक्क सदाका लागि विदा लिएछन् !

न छोराछोरी, न कुनै आफन्त, न कसैको रुवाबासी, केयर होमका केही वृद्ध साथीहरू मलिन अनुहार लगाएर उनको वरिपरि उभिइरहेका थिए । मैले मेरो हाफ पाइन्टको खल्तीभित्र हात घुसारेँ- पाँच डलरले मानौँ मलाई नै गिज्याइरहेजस्तो लाग्यो ।

■■

कविता

# राहदानीको रङ

## ✍ महेश्वर रूपाखेती



पहिले  
मनै चिसो पार्दै  
बाँसको घोचोसँग दाँजिने  
राहदानीको हरियो रङ  
अहिले  
आङै सिरिङ्ग पार्ने  
कफिनको बाकसको  
चक्लेटी रङसँग साटिएछ ।  
...  
बदनाम रातो र नीलो उही राखेपछि  
चक्लेटी रङसँगै साटिएनछ  
विदेशिने 'साधारण'हरूको निर्मम कथाव्यथा ।  
...  
बरु चक्लेटीलाई साटिदिऊँ न सुनौलो रङसँग  
हातमा सुनौलो राहदानी  
र, मनमा सुनौलो सपना बोकेर  
विदेशिनेहरूका लागि ।  
...  
जुन दिन  
विमानस्थलमा सुनौलो राहदानी बोकेर  
विदेशमा सुनौलो भविष्य खोज्दै जाने  
साधारण नेपालीहरूको लावालस्कर  
शून्यमा झर्नेछ  
त्यो दिन  
विदेशिएका नेपालीहरूले देखेको  
स्वदेशमा नेपालीहरूले देखेको  
राष्ट्र निर्माणको सपना  
बिपना हुनेछ ।  
...  
अब रङ  
राहदानीको होइन  
राहको  
बदलौँ न सरकार !  
■■  
*बर्लिन*

लेख

# नेपाली साहित्य र संस्कृतिको अन्तर्सम्बन्ध

✍ योगेन्द्र तिमिल्सिना



मानिस आफू जन्मेको भौगोलिक क्षेत्रबाट आफ्नो पार्थिव अस्तित्वमात्र लिएर आउँदैन । उसले त्यस परिवेशबाट प्राकृतिक, धार्मिक, बौद्धिक, सांस्कारिक तथा अनेक विशेषताहरू ग्रहण गर्दछ । ती सम्पूर्ण विशेषताहरूलाई हामी संस्कृति भन्छौँ । साहित्यमा त्यसै भूखण्डमा बसोबास गर्ने मानिसहरूको समस्या, मनोविज्ञान, स्वभाव, रुचि, प्रवृत्ति, रहनसहन आदि प्रस्तुत गरिन्छ । त्यस्ता विषयवस्तुको काव्यात्मक, आख्यात्मक वा निजात्मक कलात्मक प्रस्तुतिलाई हामी साहित्य भन्छौँ । कुनै स्थानविशेषको संस्कृतिसँग साहित्य आबद्ध हुन्छ । भिन्नभिन्न भौगोलिक क्षेत्रमा बसोबास गर्ने मानिसको संस्कृतिमा भिन्नता पाइने हुँदा साहित्यिक परिवेशमा पनि भिन्नता आउने गर्छ, जस्तो ग्रामीण परिवेश, शहरी परिवेश, क्षेत्रीय, आञ्चलिक आदि ।

हिन्दूहरूको पवित्र ग्रन्थ वेद मानव-संस्कृति, सभ्यता र साहित्यको पहिलो सिर्जना हो । पराशर ऋषिका पुत्र वेदव्यासले वेदलाई क्रमबद्ध गरी ऋग्वेद, सामवेद, यजुर्वेद र अथर्ववेद चार भागमा वर्गीकरण गरेको आहान छ । वेदलाई प्राचीन हिन्दू सभ्यता, साहित्य एवम् संस्कृतिको मानकको रूपमा लिइन्छ । यसलाई विश्वको आदिग्रन्थ मानिन्छ । महाभारतका रचयिता वेदव्यास र रामायणका रचयिता वाल्मीकिलगायत अनेक ऋषि-मुनिहरूको निवास प्राचीन भारत खण्ड वा भारतवर्ष हो ।

प्राचीन समयमा हिमालय पर्वत, नेपाल, भारत आदि भूखण्डलाई समष्टिगत रूपमा भारतवर्ष भनिन्थ्यो । यही आधारमा पवित्र धार्मिक स्थल पशुपतिनाथ, काशी विश्वनाथ, केदारनाथ, बदरीनाथ, मुक्तिनाथ, गया, मथुरा, वृन्दावन, जनकपुर, बराहक्षेत्र आदि हाम्रा साझा तीर्थस्थल, देवस्थल हुन गएका हुन्, जहाँ नेपाली र भारतीयहरू धार्मिक भ्रमणमा आउने-जाने गर्छन् । यसको सन्देश के पनि हो भने आर्यहरूको धर्म, साहित्य र संस्कृतिको उद्‌गमस्थल एउटै हो । हाम्रो सुख, दुःख, परस्पर मित्रताका भावना, आपसी प्रेम र सद्‌भाव, मनोविज्ञान र ईश्वरप्रतिको आस्था समान छ । नेपाली र भारतीय साहित्यकारद्वारा लेखिएका साहित्यमा पनि यही भावना प्रतिविम्बित भएको पाइन्छ ।

वाल्मीकिले संस्कृतमा रचना गरेको रामायण भारतमा तुलसीदासले 'रामचरितमानस' नाउँबाट अवधि भाषामा र नेपालमा भानुभक्तले 'रामायण' नाउँबाट नेपाली भाषामा प्रस्तुत गरे । नेपालीभाषी जगत्मा भानुभक्तीय रामायण जति लोकप्रिय छ, हिन्दीभाषी जगत्मा रामचरितमानस त्यति नै लोकप्रिय छ । रामायण नेपालका गाउँगाउँमा श्रद्धाभक्तिपूर्वक पढिन्छ । त्यसरी नै भारतमा पनि रामचरितमानस देशका कुनाकुनामा भक्तिभावले पढिन्छ । दुवै कृतिले रामको अनुपम आदर्शको वर्णन गरी युवा वा वृद्ध, गृहस्थी वा सन्न्यासी सबैलाई एक उच्च आदर्शका साथ बाँच्ने प्रेरणा दिएका छन् ।

यसै आदर्शको जगमा हाम्रो संस्कृतिको निर्माण भएको छ । पुर्खाले सिकाएको संस्कार मान्ने, आफूभन्दा ठूलाको सम्मान गर्ने, उनको आदेश पालन गर्ने र उनीबाट आशिर्वाद लिने प्रचलन हाम्रो संस्कृतिको एक अङ्ग बनेको छ । नेपालमा रामायणलाई एक उत्कृष्ट साहित्यिक कृति र यसका रचयिता भानुभक्तलाई एक मानवतावादी, कारुणिक र मार्मिक कवि मानिन्छ । प्रश्नोत्तर, बधुशिक्षा, भक्तमाला र रामगीता उनका अन्य कृतिहरू हुन् । उनका फुटकर कविताहरू पनि प्रकाशित भएका छन् । ती रचनाहरूमा समकालीन

सामाजिक विसङ्गतिप्रति तीक्ष्ण व्यङ्ग्य, देशप्रेम र मानवीय संवेदनशीलताका अनुभूतिको अभिव्यक्ति पाइन्छ । भानुभक्तको समयमा नेपालमा जहानियाँ राणा परिवारको निरङ्कुश, तानाशाही, स्वेच्छाचारी शासन-प्रणाली थियो । भानुभक्तले कवितामार्फत निरङ्कुश शासनव्यवस्थाप्रति व्यङ्ग्य प्रहार गरेका थिए । यस अर्थमा उनी प्रगतिशील कवि थिए ।

भानुभक्तपछि नेपालमा मोतीरामले आधुनिक नेपाली साहित्यको अभियान सुरु गरेका थिए । मोतीरामले साहित्यमा शृङ्गार रसलाई उच्चतहमा पुऱ्याए । उनले भानुभक्तका कृति प्रकाशित गरी तिनको मूल्याङ्कनसमेत गरे । उनले नेपाली साहित्यमा गद्यसाहित्य र आलोचनाको परम्परा स्थापित गरे ।

राजनीतिक संस्कारमा हुने परिवर्तनबाट समकालीन साहित्य पनि प्रभावित हुन्छ । २००७ सालमा नेपाली काङ्ग्रेसको नेतृत्वमा नेपालमा भएको प्रजातान्त्रिक आन्दोलनले नेपालका प्रजातान्त्रिक शक्तिहरूलाई एकताबद्ध गरी तानाशाही राणाशासनको अन्त्य गरी प्रजातान्त्रिक राजनीतिक व्यवस्था स्थापित भयो । नेपालमा राजनीतिक संस्कारमा परिवर्तन आएको हुँदा यसले समकालीन साहित्य पनि प्रभावित भयो । मानिसहरू प्रजातान्त्रिक वातावरणमा खुला रूपमा समाजमा बोल्न र लेख्न थाले । स्कूल र कलेजहरूमा आधुनिक शिक्षाको पठनपाठन सुरु भयो । त्यसपछि साहित्य पनि भक्तियुगबाट खुला प्रजातान्त्रिक युगमा प्रवेश भयो अर्थात् लेखन-संस्कृतिमा पनि परिवर्तन आयो । नेपाली साहित्यकारहरूले विश्वका अनेक दर्शन र विदेशी साहित्यको अध्ययन पनि सुरु गरे । उनीहरूले मनोविज्ञान, अस्तित्ववाद, प्रतीकवाद, विम्बवाद, समाजवाद आदि विषयमा आधारित कृतिहरूको अध्ययन गर्न थाले ।

लेखनाथ पौड्याल, सिद्धिचरण श्रेष्ठ, माधव प्रसाद घिमिरे आदि कविहरूले शास्त्रीय र आधुनिक स्वच्छन्दवादी धाराको विकास गरे । बालकृष्ण सम, लक्ष्मीप्रसाद देवकोटा, पुष्करशमशेर, भवानी भिक्षु र भीमनिधि तिवारीले साहित्यमा यथार्थवादी, सामाजिक तथा स्वच्छन्दतावादी धाराको विकास गरे । राजनीतिक व्यवस्थामा आएको परिवर्तनको परिणामस्वरूप लेखन संस्कृतिमा पनि परिवर्तन आयो ।

नेपाली साहित्यकारले आफ्ना सिर्जनाहरूमा तत्कालीन शासन व्यवस्थाको क्रूरता, प्रजातन्त्र प्राप्तिपछि आर्थिक विकास र सामाजिक परिवर्तनप्रतिको आशावादिता, वैयक्तिक स्वतन्त्रताको मनोविज्ञान आदि विषयमा लेखेका छन् । यसरी साहित्य र संस्कृतिका बीचमा हामी गहिरो अन्तर्सम्बन्ध रहेको पाउँछौँ ।

मोहन कोइराला, भूपी शेरचन, ईश्वरवल्लभ, वैरागी काइँलाप्रभृत्ति कविहरूका साथै बी.पी. कोइराला, भवानी भिक्षु, विजय मल्ल, रुद्रराज पाण्डे, भीमनिधि तिवारी, हृदयचन्द्रसिंह प्रधान, धुस्वाँ सायमी, रमेश विकल आदिले आधुनिक मनोवैज्ञानिक, सामाजिक यथार्थवादी र प्रगतिशील धाराका आख्यान लेखन प्रारम्भ गरेका थिए ।

आज नेपालमा लोकतान्त्रिक राजनीतिक संस्कृति छ । अब नेपाली साहित्यकारहरू पूर्ण स्वतन्त्र वातावरणमा साहित्य सिर्जनामा लागेका छन् । पारिजात, बुद्धिसागर, अमर नेउपाने, नयनराज पाण्डे, कृष्ण धरावासी, नारायण वाग्ले, नारायण ढकालजस्ता जनप्रिय उपन्यासकारको नाउँ चर्चामा छ । आजका लेखकले सामाजिक विकृति तथा कुसंस्कारप्रति विद्रोह, समकालीन समाजको कुव्यवस्थाप्रति व्यङ्ग्य, सामाजिक परिवर्तनको माग गर्दै प्रगतिशील साहित्यलाई अगाडि बढाएका छन् । आजको साहित्य आधुनिक संस्कृतिको उपज हो ।

विश्वव्यापी खुला डिजिटल प्रणाली र सार्वजनिक मिडियाको माध्यमबाट आज हाम्रो संस्कृति अतिक्रमित भैरहेको छ । हाम्रो संस्कृतिको प्रतिकूल हुने गरी समाजमा यौन स्वतन्त्रताको माग र लिभिङ टुगेदरजस्तो विकृत संस्कृतिको विकास पनि भैरहेको पाइन्छ । हाम्रो सामाजिक मान्यता र संस्कारलाई पश्चिमा संस्कृतिले गाँज्दै लगेको छ । आधुनिक पश्चिमा मान्यता, खानपान, जीवनशैली र रहनसहनले हाम्रो सामाजिक जीवन बिटुलिँदै गएको देखिन्छ । हाम्रो धर्मसंस्कृतिले यौन स्वतन्त्रतालाई दुष्कर्म मानेको छ तथा गर्भ तुहाउने, पतिको हत्या गर्ने र परपुरुषसँग सहबास गर्ने महिलालाई पातकी मानेको छ । त्यस्तै व्यापारमा ठग्ने, परस्त्रीगमन

गर्ने, रजस्वला भएकी स्त्री वा गर्भिणी महिलाको बध गर्ने, झूटो साक्षी बक्ने पुरुषलाई पनि पापी वा पातकी मानेको छ । पुत्रीगमन गर्ने पुरुषलाई अतिपापी भनिएको छ ।

नेपाली साहित्यको अघिल्लो पुस्तासम्म यी र यस्तै अरू कर्मलाई दण्डनीय स्वीकार गरी यस्ता कर्म गर्ने पात्रलाई दण्ड, सामाजिक बहिस्कार वा तिरस्कृत गरी चित्रण गरेको पाइन्छ ।

समकालीन नेपाली साहित्य एकातिर अनेक सिद्धान्त र विचारले सम्पन्न हुँदै छ भने अर्कातिर आजको विकृत अवस्थाले पनि साहित्यमा स्थान पाउन थालेको छ । उदाहरणको निम्ति अमर न्यौपानेको उपन्यास 'गुलाबी उमेर'मा अविवाहित प्रेमी र प्रेमिका यौन क्रियाकलापमा संलग्न भएको देखाइएको छ भने सोही उपन्यासमा एक विवाहित महिला नाइट गाउनमा परपुरुषसँग यौनजनित क्रियाकलापमा संलग्न भैरहेको दृश्य छ । गोविन्द गिरि प्रेरणाको उपन्यास 'लिभिङ टुगेदर'मा अविवाहित जोडी भाडाको कोठा लिएर लिभिङ टुगेदरमा बसी निरन्तर यौन क्रियाकलापमा संलग्न भएका दृश्यहरू प्रस्तुत गरिएको छ ।

यी र यस्ता संस्कारगत विकृतिहरूलाई नेपाली साहित्यले स्वीकार गर्नु भनेको हाम्रो संस्कारगत मान्यतालाई तिरस्कार गर्नु हो । हाम्रो संस्कृति बिटुल्याई विचलन ल्याउने यस्ता गतिविधिलाई व्यङ्ग्यात्मक प्रहार गरी तिरस्कार गर्नुपर्ने आवश्यकता छ । विचार, बहस र मनोविज्ञानमा खुलापन आवश्यक भएता पनि हाम्रो धर्म-संस्कृतिमाथि नै प्रहार हुने पश्चिमा संस्कार अबलम्वन गर्नाले कहिल्यै हाम्रो कल्याण हुन सक्तैन । आफ्नै मौलिक परम्परा र धर्म-संस्कृतिको रक्षाबाट मात्र हामी, संयमित र अनुशासित भई शुद्ध विचारले अघि बढ्न सक्नेछौँ ।

■■



# तीन मुक्तक

✍ **नेत्र खड्का**



**(एक)**

यस पटक म नझुक्किए नि मेरा सोझाहरूलाई झुक्याइदिए
कनिकामा बिकेका लठैतहरूले यी बूढाहरूलाई फर्काइदिए
देश सानो, कमाइ पनि सानो हुँदाहुँदै पनि सयौँ फटाहाहरूलाई
देशले कसरी धान्ने हो भन्ने त्यो पुरानो घाउ फेरि बल्झाइदिए ।

■■

**(दुई)**

अबदेखि मैले आल्तुफाल्तु नेपाली टि.भि. हेर्न छाडिदिएँ
राष्ट्रप्रेमभन्दा राजनीति बढी गर्नेलाई पनि सुन्न छाडिदिएँ
ठूलाठूला स्वरले चिच्याउने, परिआउँदा पुच्छर लुकाउने
डाक्टर बा ट्याक्टर हुन्, यिन्का बकबास पनि सुन्न छाडिदिएँ ।

■■

**(तीन)**

धर्म र जनजातिको नाममा चौका मार्नेहरूलाई के भन्नु !
आफ्नो अनुहार आफ्नै ऐनामा नदेख्नेहरूलाई के भन्नु !
तन र मन विदेश र विदेशी मुद्रामा टिकाइएको छ भने
शान र मान खोज्नचैँ नेपाल नै रोज्नेहरूलाई के भन्नु !

■■

*अस्ट्रेलिया*



# मनस्नान

✍ युवराज भण्डारी

"सञ्चै छस् बाबू ?
एक्कासि देखा पर्नुभयो आमा !
"सञ्चै छु आमा
बिरामी त मेरा विचार छन्
शरीर नित्य नुहाउँछु
तर, मेरो मन सड्दै छ आमा
म अनुभूत गर्दै छु नमीठो दुर्गन्ध !"

"औषधी खाइस् राजा ?"
"बट्टा खोलेछु अनि कतै घोत्लिएछु
अक्षर खोज्न अक्षरबाटै च्यातिएछु
जब फर्केर आएँ
फाट्नुको कारण र समागम स्थल दुवै भुलेछु
वर्तमानले मलाई लखेटेको हो
या म समयलाई लखेटिरहेको छु ?
मेरो बोधिवृक्षलाई बोध भएको छैन
भोलिदेखि ख्याल गर्छु आमा !"

"तैँले सोचेको पुग्यो कान्छा ?"
"सोचेअनुसार गरे त हुन्थ्यो नि आमा !
सोचाइसँग भोगाइ मिल्दैन
आदर्शसँग व्यवहार हिँड्दैन
धेरै सोच्छु, ढिलाइ निम्त्याउँछु
आफ्नै आचरणको दुष्प्रभाव छ आमा !"

"चित्तशुद्धि गरिनस् बाबू ?"
"मभित्र विभिन्न स्वभाव छन् आमा
सद्भाव देखाउनेसँग श्वान भई खेल्न नजान्ने
बाटो देखाउनेसँग सिंह बनी गर्जिन थाल्ने
यो स्याललाई पो कसरी सम्झाउने ?
खाली छिमेकीको बारीमा बहार देख्छ
आफ्नो बारीको फूल पनि झार देख्छ
सन्तुलन खोज्नु छ
काबुमा अरू कसैलाई राख्न सकिन्न
नियन्त्रण स्वयम्को गर्नु छ आमा !"

"प्रकृतिलाई भुलेको छैनस् नि बाबू ?"
"बिर्सेको छैन आमा
तर, नग्नताले सुन्दर प्रकृतिलाई
कपडाले छोपेर हेरिरहेछु
पारदर्शी प्रकृतिलाई
अपारदर्शी चश्मा पहिरेर खोजिरहेछु
सामुको हाँगा छाडेर
हावामा झुन्डिन बल गरिरहेछु
शिखरको मोहमा टेकेको धरातल भुलिरहेछु
न अनुसरण गरिरहेछु, न उल्लङ्घन
यो रङ्हीन जिन्दगीमा
म पानीमा रङ खोजिरहेछु आमा !"

"मनस्नान गर्दैनस् र बाबू ?"
"हजुर, मनस्नान !
यो के हो ?"

सोध्दै थिएँ, आमा अलप !
आमालाई खोज्दै थिएँ
म झल्याँस्स ब्युँझिएँ !

■■

*तनहुँ, हालः टोरन्टो, क्यानडा*



# टाँकीका फूलहरूको निम्तो

✍ डा. हिमलाल श्रेष्ठ

तल कतै बग्ने बूढी गण्डकीको किनारहुँदै दौडँदै आउने कुहिरोको भुल्काहरू हेर्दैहेर्दै, देउरालीका ढुङ्गाहरूमा अड्किएका पातीका मुन्टाहरूसँग टोलाउँदै थप पातीका मुन्टाहरू थप्दै त्यो पातीघारी र उन्यूघारी चाहारेको सम्झँदा अझै पनि तिनै वनपाखामा डुलूँडुलूँझैँ लाग्छ ।

कर्कलाको पातमा पखेरोको जरुवाबाट उबाएर ल्याएर थाम डाँडाको खर्कभरि छिरलिएका काली, गोरी, सिँगौरी, लाम्काने बाख्राहरूको रखवारी गर्दैगर्दा चर्को घामले निकालेको पसिना र तापलाई मत्थर पार्ने त्यो चिसो पानी सम्झँदा अझै पनि तिनै डाँडाहरूमा घुमिर हूँझैँ लाग्छ ।

सालघारीको भित्रभित्रै पालुवाको भारी कसेर नाम्लो राखेर थप्लोले थेगेको भारी उकालै उकालो असिनपसिन हुँदै रातो माटोले रँगाएको तातो गोरेटोभरि अघिपछि गर्दै मलाई नै कुरीकुरी भन्ज्याङ कटाउने फूलमाया दिदीको माया सम्झँदा अझै पनि तिनै बालापन लिएर वनपाखामा झरूँझरूँझैँ लाग्छ ।

काफल, किम्बू, नास्पाती, अम्बा, जे फले पनि पहिलो छिमल मितज्यूलाई भन्दै घरमै आइपुग्ने कोसेलीहरू विशेषतः क्यामुनाको पातभित्र खिपेर मित बहिनीले पठाएको ऐँसेलुको कोसेली सम्झिँदा अझै पनि गाउँघरमा आफ्ना प्रियाजनहरूको समीपमा पुगूँपुगूँझैँ लाग्छ ।

विद्यालय जाने बाटोभरि फुलेका धयँरोका फूलहरूको महकतामा भुल्दैभुल्दै साथीहरू पखेराभरि तँछाडमछाड गर्दै सबेरै माहुरी भुन्भुनाउँदै रस चुस्नुभन्दा अघि नै धयँरोको फूलभित्र जम्मा भएर बसेको गुलियो रस चुसेर शिक्षाटनको कर्ममा लागेका ती दिन सम्झँदा अझै पनि उसैगरी दौडौँदौडौँ जस्तो लाग्छ ।

घरबारीभन्दा पर खरबारी नाघेर चिलाउनेका बुटाहरूको छेउछाउ पुगेर घाँसको भारी कस्नुपर्दा मन अमिलो हुन्थ्यो । जब घाँसको भारीभरि टाँकीका सुन्दर फूलहरू कल्ल्याङमल्ल्याङ पारेर बन्धनमा हुन्थ्यो र मनमनै अपराधबोधले टाँकीका फूलहरूसँग एकाकार हुन्थेँ- टाँकीका फूलहरूजस्तै बन्धनमा अनि अड्चनमा पनि हाँसिरहन सकूँ, मुस्काइरहन सकूँ, फुलिरहन सकूँ । हरेक साल जब शरद् याम लाग्छ, म सम्झन्छु तिनै टाँकीका फूलहरू, झुत्ताझुत्ता लमतन्न फुलेका सुन्दर सेता फूलहरू । अझै पनि म तिनै कोदोबारीको डिलडिलमा फुलेका टाँकीका फूलहरू सम्झन्छु र सम्झन्छु शरद् याममा फुलेका टाँकीका फूलहरूसँगै लिङ्गे पिङ र रोटे पिङ खेल्नका लागि मखमलीको निम्तो । म अझै सम्झन्छु, त्यो बाल्यकालको समय, त्यो गाउँघरको आवहवा, मान्यजन र नातागोताको माया ममता, शरद् याममा पर्ने चाडपर्व अनि जात्रामात्रा, टीकाटालो, आशिर्वाद र प्रेमभाव । यी सब सम्झँदा अझै पनि त्यही प्यारो जन्मथलो पुगूँपुगूँझैँ लाग्छ ।

अझै पनि मलाई तिनै मायालु टाँकीका फूलहरूले निम्ता गरिरहेझैँ लाग्छ । शायद ती टाँकीका फूलहरू पनि मेरै सम्झनामा फुल्दा हुन् हरेक शरद् याममा । दशैँ-तिहारको छेकोमा । शायद ती मलाई नै निम्ता गर्दा हुन् - 'आऊ परदेशी ! घर फर्की आऊ ! घर बगानमा आऊ ! घरबारी र खरबारीमा आऊ ! तिम्रो पदचाप र सुश्रुषाको भोका हामी टाँकीका फूलहरू तिम्रै प्रतीक्षामा फुलिरहन्छौँ– हरेक सालको शरद् याममा !'

■■

*अश्राङ, गोरखा*
*हाल- कटुन्जे, भक्तपुर*



# बूढीमाउ

✍ चिरञ्जीवी दाहाल

बूढीमाउको वास्तविक उमेर कति हो, सायद धेरैलाई थाहा थिएन। कसैले यति होला भनेर अनुमान गर्थे भने कसैले होइन यति पो होला भन्ने गर्दथे। बूढीमाउको रूपरङ हेर्दा हामीलाई भने वास्तविकताको नजिक कोही पनि पुग्न नसकेको हो कि जस्तो लाग्थ्यो । उमेर जतिसुकै होस्, चेतनशक्ति प्राप्त भएदेखि धेरै वर्षसम्म पनि हामीले भने बूढीमाउलाई सधैँ तरुनी नै देख्ने गरेका थियौँ। जहिले हेर्दा पनि उस्तै ।

बूढीमाउको उमेर थाहा नहुनुको मुख्य कारण बूढीमाउलाई कसैले कतैबाट ल्याइएको होइन रहेछ, ऊ आफैँ आएर भित्रिएकी अरे । त्यसैले उसको वास्तविक उमेरबारे प्रायः सबै अनभिज्ञ थिए । उसको उमेर जति भए पनि हामीलाई केही चिन्ता र चासो थिएन। मुख्य कुरा हाम्रो परिवारका अधिकांश केटाकेटीहरू बूढीमाउको दूध पिएर हुर्किएका हौँ भन्ने कुरा हामीलाई राम्रोसँग थाहा थियो ।

अरूभन्दा निकै रसिली र असल स्वभाव भएकीले हुनुपर्छ, हाम्रो परिवारका सबै सदस्यहरूको प्रिय थिई बूढीमाउ । मुख असाध्यै मीठो, जे दिए पनि नाइँनास्ती नगर्ने । अरूहरूले जस्तो छानीछानी मीठो-मसिनो खाएर, नमीठोजति भाँडैमा छोड्ने गरेको हामीले कुनै दिन पनि थाहा पाएनौँ । दिएको चिज कति पनि नछोडी सिनित्त पार्ने बूढीमाउको बानी थियो। सबैभन्दा रुचिको आहार मकैको खोले त उसले चाटीचाटी खाने गरेकी थिई। पानी पिउने सवालमा पनि बूढीमाउको अत्यन्त सजिलो स्वभाव थियो । अरूलाई जस्तै उसलाई नुन, सखरसहितको पानी चाहिँदैन थियो। कमसेकम एक खड्कुँलो निख्लो पानी बूढीमाउले एकै मुखमा सक्ने गरेकी थिई, स्वाट्टै पारेर । हुन त कसलाई पो हरियोपरियो मन पर्दैन र ! यसैले बूढीमाउ पनि त्यसको शौखिन थिई भन्दा फरक पर्दैन थियो ।

अरूहरूका लागि बन्दोबस्त गर्न नसके पनि बूढीमाउका लागि भने जसरी पनि हरियो-परियो जुटाउने गरिन्थ्यो ।

उसको नजिक चिने-नचिनेका जोसुकै पुगोस् तर बूढीमाउले झम्टिने र तर्साउने त परै जाओस्, कसैलाई आँखा तरेकोसम्म थाहा पाइएन ।

बिहान-साँझ यसै भइहाल्यो, कहिलेकाहीँ दिउँसोतिर पाहुनापाछा आउँदासमेत ताजा दूधको चिया बनाएर अतिथि सत्कार गर्न पाइन्थ्यो। यो सुविधा सारा गाउँभरि कतै नभएर हाम्रो घरमा मात्र थियो । त्यसको मुख्य कारण उही बूढीमाउ थिई । बूढीमाउ छउन्जेल जतिखेर दूध चाहियो, तत्काल उपलब्ध हुन्थ्यो ।

पाको उमेरमा पनि बूढीमाउले प्रशस्त दूध दिनु भनेको चानचुने कुरा थिएन। त्यसताका बूढीमाउको दूध बिक्री गर्न मिल्ने भए सायद हामी दूध बिक्री गरेर निकै सम्पन्न हुन सक्थ्यौँ, लखपति हुन्थ्यौँ होला । अँगेनामा बसालेको किटको बडेमानको कराहीमा तताएको दूध पिएरमात्र नसकिने भएकाले उब्रेको बाँकी दूध ठेकीमा खन्याउने गरिन्थ्यो। बाक्लो र स्वादिलोमात्र होइन, दूध खाने भनेको त बूढीमाउको मात्र हो भन्ने हामीलाई भ्रम परिसकेको थियो । दही, घ्यूको त छेलोखेलो बनाएकी थिई बूढीमाउले ।

तताएको दूधमा बाक्लो तर लाग्थ्यो । घ्यू बनाउनुपर्ने भएकाले त्यो बाक्लो तर भने सितिमिति हाम्रो भागमा पर्दैनथ्यो । त्यसैले होला, एक पटक दही

मन्थन गरेको बेला झन्डै मानो-बाह्र मुठी त घिउमात्र लाग्थ्यो । हामीले साँझ-बिहान खानासँग बाक्लो मोही कुनै पनि दिन टुटाउन परेन । वल्लो घर, पल्लो घरबाट मोही लिन आउनेहरू, घरमा काम गर्न आउने खेताला र आक्कलझुक्कल घरमा आउने अतिथिहरूको विशेष रोजाइमा पर्ने गरेको थियो हाम्रो घरमा मथेको बूढीमाउको मोही ।

बूढीमाउको बयान हाम्रो गाउँमा मात्र होइन, निकै पर गाउँतिर समेत उत्तिकै चल्ने गरेको रहेछ । बाक्लो ठूलो शरीर र हलुका गोरो छाला भएकी बूढीमाउको दुईचार बेत ब्याउँदासम्मको नाम भने 'गोरी' रहेछ । पछि घरमा जब एक-दुई पटकमात्र ब्याएका अरूहरू थपिए, उसलाई 'गोरी'बाट एकाएक बूढीमाउ भन्न थालिएको कुरा हामीलाई धेरै पछिमात्र थाहा भयो । जे होस् हामीले थाहा पाउँदा उसको नाम गोरी होइन बूढीमाउ नै थियो ।

एक दिन दौरा सुरुवालमा निकै ठाँटिएर दुई जना मान्छेहरू हाम्रो घर सोध्दै आए । निकै कड्किएको स्वरमा उनीहरूले हजुरबासँग भन्दै थिए "तपाईंको घरमा भएको बूढीमाउ जसरी पनि हामीलाई दिनुपर्‍यो ! यसको बयान सुनेर हामी निकै टाढाबाट आएका । बरु कति लिनुहुन्छ, लिनुस् तर बूढीमाउ हामीलाई जसरी पनि दिनुपर्‍यो ।"

हजुरबा पनि के कम ? तुरुन्तै उत्तर दिनुभयो "फकाएर लैजान खोजेको हो भने लैजानुभए हुन्छ, दिउँसो लिएर जान डर लाग्ने भए रातिमा आउनू । होइन, यसलाई साँचै दिने हो कि होइन भनेर सोध्नमात्र खोजेको हो भने हामी बूढीमाउ कसैलाई पनि दिँदैनौँ ।"

"सायद हामीलाई चिन्नुभएन क्यारे !" अर्को चाहिँले अलि नरम भएर भन्यो ।

"राजा, मन्त्री पक्कै होइनौ होला । अरू जो भए पनि हामी यो बूढीमाउ दिँदैनौँ भनेपछि दिँदैनौँ !" हजुरबाको यो उत्तर सुनेपछि तिनीहरू केही शान्त देखिए । हजुरबाको कडा व्यवहारले तिनीहरू धेरै बेर टिक्न सकेनन् । जब बूढीमाउ लिएर जान नपाउने निधो भयो, तिनीहरू अन्ततः आ-आफ्नो बाटो लागे ।

सिरानघरेको बूढीमाउ माग्न आएका पल्ला गाउँका धनपतिलाई सिरानघरे बूढाले बूढीमाउ दिएनछन् ! बूढाले धनपतिको उछित्तो काढेर पठाइदिए अरे ! बूढाले कोही होइन, मै हुँ भन्ने धनपतिको तेजोबध गरिदिएछन्, ठिक्क भयो । नराम्रोसँग दनक पायो धनपतिले !"

गाउँमा केही दिनसम्म पनि यसै विषयमा खूबै चर्चा चल्यो । त्यस दिनबाट हाम्री बूढीमाउ दिनुहुन्छ कि भनेर कसैले पनि सोध्ने आँट गरेनन् ।

एक दिन, दशौँ पटक सुत्केरी भइसकेकी बूढीमाउलाई पुनः गर्भाधान गराउने, नगराउने विषयमा ठूलै बहस चल्यो । कसैले भन्थे, 'बूढीमाउ निकै बूढी भई, अब यसलाई दुःख दिनुहुँदैन । उमेर पुगेपछि बच्चा जन्माउने कुरा त्यति सहज हुँदैन ।'

कोही भन्थे, 'उचित खानपिन र राम्रो स्याहार सम्भार भए पन्ध्र-बीस बेतसम्म ब्याउने भनेको कुनै ठूलो कुरा होइन । त्यसैले यत्रो दूध दिँदादिँदै थारो राख्न पनि त सकिँदैन नि !'

जसले जे भने पनि आखिरमा बूढीमाउ सत्र बेतसम्म ब्याई ।

सधैँजस्तै एक दिन बिहान बा बाल्टी लिएर बूढीमाउ दुहुन जानुभयो । तर, बूढीमाउ सुतिरहेकी रहिछे । बाले उठाउने प्रयास गर्नुभयो तर अहँ बूढीमाउले कुनै प्रतिक्रिया देखाइन ।

दुहुने बेला सधैँजसो केही सिर्को काँचो दूधले कचौरा भरेर पिउने आश गरेर पछि लागेको म, बूढीमाउ चल्नु, चट्पटाउनु गरेको नदेखेपछि मेरो हातबाट कचौरा भुइँमा खुत्रुक्क खस्यो । सधैँ जस्तै त्यस दिन मलाई एक कचौरा ताजा दूध खाने अवसर मिलेन । एकै छिनमा सारा गाउँलेहरू भेला भए । भेला भएका सबैले दुःखमनाउ गरे । केही बेरसम्म सबै मिलेर बूढीमाउको निकै प्रशंसा गरियो । घरमुनिको गह्रामा ठूलो खाल्टो खनेर विधिपूर्वक बूढीमाउको अन्त्यष्टि भयो ।

बूढीमाउको मृत्युपछि हामीले त्यही थलोमा पुनः अर्को भैँसी ल्याएर बाँध्ने हिम्मत गरेनौँ ।



*कालिका-६, चितवन*



# जापानको फुकुओका शहरमा काण्डैकाण्ड

✍ डा. कुसुमाकर शर्मा गौतम

सन् २००१ सेप्टेम्बर १२ तारेख बिहानको प्रसङ्ग हो । दक्षिण जापानको फुकुओका शहरको प्रख्यात रिगल होटेलमा बास बसेको दुई दिनमात्रै भएको थियो । त्यहाँ म अन्तर्राष्ट्रिय पानी संस्थाको एक पानी प्रशोधनसम्बन्धी एशिया क्षेत्रीय सम्मेलनमा कार्यपत्र प्रस्तुत गर्न पुगेको थिएँ । अरू नेपाली साथीहरू पनि त्यही होटेलमा बस्नुभएको थियो ।

नवराजजी तयार भएर छकालै मेरो कोठामा आउनुभयो । म पहिले नै तयार भएर बसेको थिएँ । हामी दुई जना होटेलको विश्राम कक्ष (लाउन्ज) तिर बढ्यौँ । कुनै पनि विषयलाई रोचक तरिकाले प्रस्तुत गर्ने कलामा पारङ्गत भएकाले नवराजजीसँग कुराकानी गर्न साह्रै मज्जा आउँथ्यो । अहिलेसम्म पनि त्यो जारी नै छ । दुई दशकभन्दा बढी भए पनि हामी दुईबीचको संवाद अहिलेसम्म पनि ताजै छ–

"हिजो हामीले भ्रमण गरेको फोहोर व्यवस्थापन र पुनःप्रयोग केन्द्र (रिसाइक्लिङ प्लान्ट) कस्तो अचम्मैको रहेछ है !"

"हो त नि ! त्यहाँको गाइडले भनेअनुसार त उनीहरूले फोहोरलाई पुनःप्रयोगमा नल्याएको त चिज नै केही छैन रे ! ठोस वस्तु होस् कि तरल !"

"हो त नि ! ट्युबलाइटलाई सेतो बनाउन भित्री भागमा पोतेको पारो (मर्क्युरी) मात्र सङ्कलन र पुनः प्रयोग गर्न नसकेका रे !त"

"प्लास्टिकलाई पुनःप्रयोग गरी बनेको झोला र ज्याकेट हेर्नुभो ? क्या गज्जबको छ ।"

"तातो पनि रहेछ ज्याकेट ।"

"मलाई त किताक्युशु प्रान्तमा रहेको दोकाई खाडी सफा गर्न फोहोर व्यवस्थापनले खेलेको भूमिकाको वर्णन पो साह्रै मन पऱ्यो ।"

"त्यै त भन्या ! दोश्रो विश्वयुद्धताका औद्योगिक फोहोरका कारण विषाक्त भएको दोकाइ खाडीमा कुनै जलचर प्राणी, वनस्पति जीवित थिएनन् रे ! दोकाइ खाडीको सफाइ गरी ती जलचरलाई त्यहाँ पुनर्जीवन दिन करीबकरीब चालीस वर्ष लाग्यो रे !"

"गरेर नहुने के रहेछ र ?"

"त्यही त !"

कुराकानी हुँदाहुँदै नवराजजी जुरुक्क उठ्नुभयो । किन होला भनेर मैले सोच्न नभ्याईकन यसो पछाडि हेर्दा एशियन इन्स्टिच्युट अफ टेक्नोलोजी (एआइटी) का प्राध्यापक चोङ्ग्राक पोलप्रासर्ट हामी बसेकोतिरै आउँदै हुनुहुन्थ्यो । उहाँ नवराजजीका विद्यावारिधिका सुपरीवेक्षक हुनुहुन्थ्यो । यसका साथै उहाँ एआइटीको सर्ड स्कूलका तत्कालीन डिन र मेरा हाकिम पनि हुनुहुन्थ्यो ।

भलाकुसारीपछि प्राध्यापक महोदयले सोध्नुभयो, "ए केटा हो ! हिजो राति अमेरिकामा आतङ्ककारीहरूले आक्रमण गरे नि ! थाहा पायौ ?"

"चाँडै सुतेकोले थाहा भएन त !" नवराजजीले जवाफ दिनुभयो ।

"टिभी हेर । हृदयविदारक छ । अब के हुन्छ ? कर्फ्यू लागू हुन सक्छ भन्ने हल्ला पनि छ ।"

कस्तो संयोग भन्ने कि अपशकुन ! हामी जापानमा भेला भएकै समयमा यस्तो अकल्पनीय घटना घटिसकेछ । जापानी टिभीमा पहिल्यैदेखि एउटा जहाज एक विशेष गगनचुम्बी भवनमा ठोक्किएको त देखाइरहेको थियो । तर, भाषा पनि नबुझेको र प्रसङ्ग पनि थाहा नभएकोले के हो भन्ने अड्कल गर्न सकिएको थिएन । त्यो दृश्य त अमेरिकाको न्यूयोर्क शहरको ट्वीन टावरमा जहाज ठोकाइएको रहेछ । यो कुरा पक्का

भएपछि भने साह्रै डर लागेर आयो । सबै जनाको चेहरामा उत्साह हरायो र भयले छायो । भयभित अनुहार लिएर प्राध्यापक महोदय त्यहाँबाट हिँड्नुभयो ।

त्यही बेला केशवजी र सरोजजी हामी भएकै ठाउँमा आइपुग्नुभयो । फत्तजी भने अलि ढिलो आइपुग्नुभयो । उहाँको निशाचरको जस्तै बानी थियो । जब रात छिप्पिँदै जान्छ, तब उहाँको शरीरमा जाँगर र उत्साह बढ्दै जान्थ्यो । त्यसैले उहाँलाई ट्वीन टावरमा जहाज ठोक्किएको राति नै थाहा भइसकेको रहेछ ।

“साथीहरूले पनि अमेरिकाको कुरा थाहा पाएजस्तो छ” भन्नुभयो फत्तजीले । हामी टिभीमा देखाइएको समाचार हेर्नमा व्यस्त थियौँ । माथिको परिदृश्यमा सम्मिलित पाँच भाइ नेपाल सरकारका खानेपानी विभागका पूर्व इन्जिनियरहरू थियौँ । हामी पाँच भाइले संसारको कुनै ठाउँमा बसेको भए पनि फुकुओकाको सम्मेलनमा भेट गर्ने भन्ने सल्लाह गरेर नै जम्मा भएका थियौँ । त्यसबेला केशव शर्मा हङकङ विज्ञान तथा प्रविधि विश्वविद्यालयमा, फत्तबहादुर थापा र नवराज खतिवडा जापानकै टोकियो विश्वविद्यालयमा, म एआइटी थाइल्यान्डमा र सरोज शर्मा डेल्फ्ट विश्वविद्यालय नेदरल्यान्डमा अध्ययन/अध्यापनमा संलग्न थियौँ । यस्तो अपूर्व सङ्गम फेरि अर्को पटक जुरेको छैन ।

अमेरिकामा आक्रमण भएको हो भने त अब तेस्रो विश्वयुद्ध हुने भयो भन्ने आशङ्काले हामी सबैका अनुहार उदास र मलीन भएका थिए । यस्तैमा नवराजजीले सबै कुरा थाहा पाउनका लागि अङ्ग्रेजी पत्रिका किन्न बाहिर जाऔँ भन्ने प्रस्ताव गर्नुभयो । होटलबाट निस्केर हामी पत्रिका खोज्न धेरै घुम्यौँ । घुम्दाघुम्दा करीब डेढ घण्टापछि बल्ल एक ठाउँमा पत्रिका पाइयो । पत्रिका खोज्ने समयमा भएको कुराकानीले झन् भयभित बनायो । अमेरिकाले त्यसै त पक्कै पनि छोड्दैन । अब कुन देशमा आक्रमण गरेर तेस्रो विश्वयुद्ध सुरु गर्ने हो ? हामी आफ्नो ठाउँ फर्किन पाउँछौँ कि पाउँदैनौँ ? सदाका लागि नेपाल को-को फर्किने ? अरू पनि यस्तै के-के कुरा भए, भए ! जीउ नै सिरिङ्ग हुने !

पत्रिका पढेर फर्कँदा झण्डैझण्डै दिउँसोको खाना खाने समय भइसकेको थियो । सबैलाई भोक पनि लागेको थियो । अनि रेस्टुरेन्ट खोज्ने कुरो उठ्यो । नवराजजीले आज म अर्कै ठाउँ लैजान्छु भन्नुभयो । हामी एउटा ‘लब ल’ भन्ने किराना पसलभित्र गयौँ । अचम्म ! त्यहाँ त चिस्याएर राखिएका खानाका प्याकेट पाइने रहेछ । त्यहाँको ठूलो रेफ्रिजेरेटरबाट चिस्याइएका खानेकुराका बट्टा उठायौँ । त्यस्तो बट्टालाई ‘बेन्तो’ भनिँदो रहेछ जापानी भाषामा ।

अहिले सम्झन्छु– नेपालदेखि थाइल्यान्डहुँदै अमेरिका पुग्दासम्म मैले पाकेको भात, मासु, तरकारी यसरी चिस्याएर किराना पसलमा राखेको देखेको पनि थिइनँ, खाने त परै जाओस् । त्यो चिसो खानालाई त्यही किराना पसलमा रहेको माइक्रो ओभन (खाना तताउने भाँडो)मा तताएर बाहिरको चौरमा बसेर खायौँ ।

खाना खाइसकेपछि केशवजीले मेरो अनुहार हेरेर “हिजोको काण्डले छाडेको छैन कि ?” भन्दै कसेको व्यङ्ग्यले म झसङ्ग भएँ । हिजोको काण्ड सम्झिनेबित्तिकै हाँसो र डर दुवैले अँठ्यायो । त्यो काण्ड हुँदा केशवजीको पनि साथ थियो मलाई । काण्ड भन्नुभन्दा पनि त्यो एउटा भिन्दै घटना थियो । गजबको अनुभव थियो । सरोजको बोली फुटिहाल्यो “हामी पनि थाहा पाऔँ न हिजोको काण्ड !”

बेलिबिस्तार लाउने अब मेरो पालो । मैले हुबहु वाचन गरेँ, “हामीलाई हिजो फोहोर व्यवस्थापन र पुनः प्रयोग केन्द्रको भ्रमणपछि आयोजकद्वारा एउटा औद्योगिक प्रदर्शनी स्थलमा पुऱ्याइएको थियो है । त्यहाँ धेरै देशका सांस्कृतिक स्टलहरू पनि थिए । खूबै रमाइलो गरेर साँझ होटलमा फर्कियौँ सबैजना । केशव र म होटेलको लाउन्जमा बसेर गफ गर्दागर्दै तपाईँहरू आ-आफ्ना कोठामा गइसक्नुभएको थियो ।

केशवजी र म सुत्न जाने बेलामा अगलबगलका कोठाहरूमध्ये मेरो कोठा पहिला आयो । ढोकाको ताल्चा खोल्नका लागि खल्तीमा हात हालेर साँचो खोज्छु त छैन ! यता छामेँ, उता छामेँ, कतै भेटिनँ । त्यो बेला यी केशवजीले ‘साँचो हरायो कि के हो ?’ भनेर ताना कस्दा मलाई लाग्यो– केशवजीले भेट्टाएर होला मलाई तौलेको ! ‘साँचो पाएको भए पाऔँ न त !’ भनेर

केशवजीतिर फर्कँदा उहाँको मुहारमा कुनै छलकपट देखिएन । उल्टै 'मैले कहाँ पाउनु ? आफ्नो साँचोको सुरक्षा त आफैँले गर्ने हो नि ! शायद त्यो प्रदर्शनी स्थलमा मै खस्यो कि ?' भन्ने अर्तिसहित प्रतिप्रश्न तेर्सियो ।

अब परेन बित्याँस ! म के गरूँ, के गरूँ भइरहेको बेला केशवजीको 'रिसेप्सनमा गएर साँचो हराएको सूचना गरियो भने अर्को साँचोको व्यवस्था गर्छन् होला नि ! त्यहीँ जाऔँ ।' भन्ने सुझाव आयो । यही ठीक हो भनेर रिसेप्सनमा गएर साँचो हराएको कुरा राखेँ । एक त जापानी होटेलमा अङ्ग्रेजी बोल्ने मान्छे पाउन गाह्रो, त्यसमाथि जापानीलाई कुरा बुझाउन झन् गाह्रो ।

बल्लबल्ल दश मिनेटको खोजीनीतिपछि एउटा अङ्ग्रेजी बुझ्ने गोज्याङ्ग्रे केटो आयो । बहुत मुश्किलले साँचो हराएको कुरा त्यो जापानी केटोलाई बुझाएपछि उसले एउटा फाराम भर्न लगायो । त्यो फारामसहित हामी दुई जनालाई सेक्युरिटी कोठामा लगेर छोडिदियो । त्यहाँबाट दुई जना सेक्युरिटीसँगै हामी दुई जनालाई फेरि अर्को एउटा कोठामा पुऱ्याइयो । मलाई साँचो कहाँ हराएको भन्नेबारे सोधपुछ गरे । मलाई याद नभएको कुरा गरेपछि त्यही दुई जना सेक्युरिटीसँग हामीलाई रिसेप्सनमा फिर्ता पठाइयो ।

यति बेलासम्म दिमागमा के-के कुरा आए के-के ! संसारको दोस्रो धनी देश रे ! होटेलको कोठाको साँचो हराउँदा खुरुक्क कोठा नखोली दिएर अपराधीजस्तै दायाँबायाँ सेक्युरिटी लाएर हिँड्नुपर्ने ? गाउँमा छँदा कसैको घरमा ताल्चा लागेको हुँदैनथ्यो । एउटा साङ्लो मात्र झुन्ड्याइएको हुन्थ्यो । बस ! चोरबाहेक अरूले 'ए ! साङ्लो लगाएको रहेछ, घरमा कोही छैन रहेछ' भनेर आफ्नो बाटो तताउँथे । अरू देश-विदेशका होटेलमा बस्दा पनि साँचो हराएर यस्तो सास्ती त पाइएको थिएन । अमेरिकाको घटना हिजो घटेकै थिएन । आज भइदिएको भए त आतङ्ककारी यिनै हुन् भनेर पुलिस कहाँ जाक्थे होलान् ।" मेरो बेलिबिस्तार सुन्दै डराए साथीहरू ।

"रिसेप्सनमा फेरि त्यही गोज्याङ्ग्रे केटाको खोजी भयो । फेरि उत्तिकै समयपछि ऊ देखा पऱ्यो । यो बेला उसको कुरा हामीलाई बुझाउन महाभारत चल्न थाल्यो । केही सीप नलागेपछि उसलाई मैले के गर्नुपर्छ त भनेर हात, आँखा र टाउकाको प्रयोगले प्रश्न गरेँ । उसले फाराम हातमा लिएर 'बयालीस सय येन तिर्' भन्यो । जापानी येन बयालीस सय भनेको त नेपाली रू. बयालीस हजारजति हुन्छ । यो रकमले त सानोसानो खेत नै आउँछ गाउँमा । यही सोचेर मैले भनेँ, 'किन तिर्ने ? म तिर्दिनँ । अर्को साँचो देऊ मलाई ।'

पैसा देखेपछि महादेवको पनि तेस्रो नेत्र खुल्छ भनेझैँ मबाट पैसा असुल्न त्यहाँ अलि माथिल्लो दर्जाको व्यक्ति आयो । उसले भने राम्रो अङ्ग्रेजी बोल्ने रहेछ । उसले वातावरणलाई शान्त बनाउँदै सम्झायो । होटेलमा पाहुनालाई दिने एउटामात्र साँचो हुन्छ । अर्को साँचो बनाउनुपऱ्यो भने नगरपालिकाको कार्यालयबाट स्वीकृति लिनुपर्छ । त्यस्तो स्वीकृति लिन एक हप्ता लाग्न सक्छ । यो राति नगरपालिकाको कार्यालय पनि बन्द भइसक्यो । यस्तै साँचो हरायो भने हामी ताल्चा नै फेर्छौँ । ताल्चा फेर्न नसकिए पनि ढोका नै फेर्नुपर्ने हुन्छ । त्यही कार्य गर्न लाग्ने खर्च तिमीले बेहोर्नुपर्छ । साँचो हराएको जरिवाना स्वरूप बयालीस सय येन त्यसको रेट हो ।'

रात धेरै गइसकेको र निद्राले च्यापेकोले मैले बयालीस सय येन तिर्न मानेँ । त्यसपछि मेरो कोठा खोलिदिए हाउस किपिङको मास्टर कीको प्रयोगले र आज नयाँ ताल्चाको साँचो पाउँछु रे !"

मेरो काण्ड सुनेर साथीहरू ट्वाँ परेको देखेँ । कुतूहलता र अन्यमनस्कमा डुबेका थिए साथीहरू । उनीहरूका जिज्ञासाका उत्तर मसँग नभएकोले भनेँ, "ल जाऊँ अब सम्मेलन स्थलतिर ।" यता मलाई भने यति धेरै काण्ड भइसक्दा पनि घरमा खबर गर्न नपाएको, कति खेर फोन गरौँ भनेर बेचैनी हुन थाल्यो ।

'नाइन इलेभेन' भनेर संसारमा तहल्का मच्चाएको त्यो आतङ्ककारी हमलाको काण्ड सम्झिँदा म भने मेरो बयालीस सय येन क्षतिपूर्ति गराएको साँचो काण्ड सम्झिन पुग्छु । अनि, स्मृतिमा ताजा हुन्छन् मेरा तरुणवयका चार मित्रहरू र जापानको फुकुओका ।



*एडमन्टन, क्यानडा*

# मन्त्र

✍ शीतल गिरी



कुनै देवी-देवतालाई खुशी पार्नको लागि उनलाई जुन सङ्क्षेप शब्द जप गर्नाले खुशी बनाउने गरिन्छ, ती शब्दलाई मन्त्र भनिन्छ, जब कि स्तोत्र पाठ गरेर आराध्य देवताको उपासना-प्रार्थना गर्ने गरिन्छ । मन्त्र जप गरेर कुनै पनि आराध्यदेव देवतालाई चाँडै नै खुशी बनाएर आफूनजिक आउन बाध्य पार्न सकिन्छ । यसको विपरीत, स्तोत्र पाठ गरेर प्रार्थना-विनय लामो समयसम्म गरेर पनि आफ्नो आराध्य देवताको सामीप्य-दर्शन गर्न प्रतीक्षा गर्नुपर्ने हुन्छ । मन्त्र शब्द अनन्त छ । यसको अर्थ यति सहज हुन्न, जसलाई एक पङ्क्तिमा लेख्न सकियोस् ! मन्त्र शब्दको अर्थ असीमित छ । यानी मन्त्रको कुनै सीमा हुँदैन । अलग-अलग धर्ममा फरक-फरक करोडौँ मन्त्र पाउन सकिन्छ । सङ्क्षेपमा मन्त्र त्यसलाई भनिन्छ, जुन शब्दपङ्क्ति या पङ्क्तिसमूह जुनजुन देवता या शक्ति प्रकट गर्दछ, त्यो त्यही देवता या शक्तिको मन्त्र भनिन्छ । दिव्य शक्तिहरूका कृपा प्राप्त गर्न उपयोगी शब्द शक्ति हो । संसारमा व्याप्त गुप्त शक्तिलाई जाग्रत गरेर आफ्नो अनुकूल बनाउने विद्या मन्त्र हो ।

देवताहरूका लागि प्रशंसनीय वर्ण समूहहरूबाट बनेको वाक्य मन्त्र हो, जसले आफ्नो विशेष प्रभाव देखाउँछ । गुप्त शक्तिलाई विकसित गर्ने विद्या मन्त्र हो । मन्त्रको उद्भव कहिले भयो यो कसैलाई थाहा छैन ।

मन्त्र कहिलेदेखि प्रचलित भयो ? तथा यसको प्रारम्भ गर्ने को थिए ? यो पनि अज्ञात नै छ । ऋग्वेद आर्य जातिको तथा विश्वका भाषामा सबभन्दा पुरानो ग्रन्थ हो र मन्त्रको रूप यस वेदमा उद्भासित छ, अतः मन्त्र शक्तिको विकास एवम् उद्भव निश्चय नै यसभन्दा पहिलेको देन हो ।

तर, यसभन्दा अघि कहिले यसको विकास भयो ? यसको कुनै प्रमाण पाउन सकिएको छैन । वेदपछिका ग्रन्थमा उपनिषद्, संहिता, अरण्यक र पुराना छन् ।

मन्त्र शब्दको रूप न कहिल्यै परिवर्तित गरिएको छ, न त गर्न नै सकिन्छ । जुन वेदशास्त्रहरूमा दिइएको छ, त्यही मूल रूपमा उच्चारण गर्नुपर्ने हुन्छ । मन्त्रशक्ति एउटा अलौकिक शक्ति हो, जसबाट विधिको विधान पनि परिवर्तन गर्न सकिन्छ । गोस्वामी तुलसीदासले रामचरित मानसमा लेखेका छन्-

**मन्त्र महामणि विषय व्याल के ।**<br>
**मेटत कठिन कुहंक भाल के ॥**

आजको युगमा पनि मन्त्रको अस्तित्व त्यति नै सशक्त र विद्यमान छ, जति प्राचीन समयमा थियो । मन्त्रहरूमा जुन स्वर, व्यञ्जन, नाद र बिन्दुको प्रयोग गर्ने गरिएको छ, ती सबैमा नाक, कान, मुख, घाँटी अनि आँखा छ यानि सबैको आकृति एउटै छ, तब पनि ती मनुष्यमा कुनै विशेष व्यक्तिलाई बोलाउनको लागि केही न केही साङ्केतिक शब्दहरू प्रयोग गरिन्छ, या नि नामबाट बोलाउने आवश्यकता पर्छ ।

उदाहरणको लागि यदि एक ठाउँमा दश जना मानिसले अनुष्ठान गराइरहेका छन् भने ती दश जनाका फरकफरक नाम रमेश, विधान, धनराज, निरञ्जन, वैद्यनाथ, आनन्द, श्रीराम, शैलेन्द्र, अश्विनी, ढुण्डिराज हुन्छ । वैद्यनाथ शब्द उच्चारण गर्दा रमेश, विधान, धनराज आदि अगाडि नसरेर वैद्यनाथ नै अगाडि सर्नेछ । यसैगरी अनेकन देवी र देवता गण छन्, जसको अलगअलग नाम र गुण छ । ती सबैको पूजा-अर्चना र आराधना गर्नको लागि ती विशेष देवताको विशेष नाम अथवा सङ्केतबाट स्तुति गर्ने गरिन्छ । मन्त्र उच्चारणबाट ध्वनि उत्पन्न हुन्छ र ध्वनिले मन्त्रको साथमा विशेष प्रभाव पार्ने गर्छ । ध्वनिमा एक किसिमको विशेष शक्ति लुकेर रहेको हुन्छ, जो निकै नै प्रभावशाली हुने गर्छ ।

ध्वनिमा लुकेर बसेको शक्तिबाट ठूलोभन्दा ठूलो प्रलय एवम् सृजन कार्य गर्न सकिन्छ, यस कुराको पुष्टि ध्वनि विशेषज्ञहरूले गरेका छन् । ध्वनिलाई विश्व ब्रह्माण्डको सङ्क्षिप्त रूप पनि भन्ने गरिएको छ । ध्वनिको प्रभाव सम्पूर्ण

संसारका प्रत्येक जीवित प्राणी, चाहे त्यो मनुष्य होस् अथवा पशु, चाहे त्यो रूख-बिरुवा नै किन नहोस्, अनुभव गर्दछ र त्यसबाट सुख अथवा दुःख प्राप्त गरिरहन्छ । यदि कुनै मानिसलाई गाली गरियो भने, अथवा रिसाएर झपाऱ्यो भने त त्यो व्यक्ति दुःखी हुन्छ र शत्रु बन्छ । यदि त्यही व्यक्तिलाई गाली गर्न अथवा झपार्नुका साटो माया गरेर मीठो शब्दले बोलेमा त्यो व्यक्ति खुशी भएर रमाउँछ र ऊ सदा सहयोगी बन्न तयार हुन्छ । भनिएको पनि छ–

**'कागले कसको धन लियो, कोइलीले कसलाई दियो।**
**मीठो बोली बोलेर, संसार आफ्नो बनायो ।'**

यानी यो सबै केको प्रभाव हो– उच्चारणको नै चमत्कार त हो ।

बीनको ध्वनिमा सर्प तथा बाँसुरीको ध्वनिमा हरिण अनि अन्य वाद्ययन्त्रहरूका ध्वनिमा कतिपय हिंस्रक पशुसम्म स्तब्ध र वशीभूत हुने गरेका छन् ।

वनस्पतिशास्त्रका विश्वविख्यात प्रोफेसर टी.सी. एन. सिंहले सङ्गीतको प्रभावबाट केराको बोटमा समयभन्दा अघि नै फूल र फल (बुङ्गा र कोसा) लगाएर रूख-बिरुवामा पनि उच्चारणको प्रभाव पर्छ भन्ने कुरा सिद्ध गरिदिएका छन् । भारतमा तान्त्रिक सी.एम. श्रीवास्तवले एक जना प्यारालाइसिसका रोगीलाई १०८ पटक हनुमान बाहुकको पाठ सुनाएर बिसेक पारेका थिए । यसकारण पूर्णतया विश्वासपूर्वक मन्त्र उच्चारण आफू आफैँमा चमत्कार हो भनेर भन्न सकिन्छ । विधिपूर्वक मन्त्र निरन्तर उच्चारण गर्नाले त्यस उच्चारण स्वरूप ध्वनिको प्रभावले जुन मन्त्र जुन इष्टदेवतासँग सम्बन्धित हुन्छ, त्यसको शक्ति जाग्रत गरेर आत्मसात गर्छ र मन्त्रसाधक स्वयम् देवतातुल्य भएर जनकल्याण गर्न थाल्छ । जसरी परीक्षामा विद्यार्थीहरूको नामको ठाउँमा रोल नम्बर साङ्केतिक रूपमा राख्ने गरिन्छ, ठीक त्यसै गरी मन्त्रमा स्थित अलग-अलग देवताहरूका अलग सङ्केत हुन्छन्, त्यसलाई बीज भनिन्छ । एउटा सामान्य दृष्टान्त– ह्रीं श्रीं क्रीं ऐँ– यी बीजाक्षर माया बीज, श्री बीज, काली बीज र सरस्वती बीज हुन् ।

यसबाहेक पनि मन्त्रको अन्तमा हुँ वर्म बीज, हुम बीज र फट् अस्त्र बीज जोडिएको हुन्छ । मन्त्रमा देवताको नाम पनि सङ्केतमात्रले दर्शाइएको हुन्छ– गणेशको लागि गं, रामको लागि रां, हनुमानको लागि हं र दुर्गाको लागि दुंको प्रयोग गर्ने गरिन्छ । यसैगरी अन्य देवताहरूका पनि सङ्केत अक्षर दिनाले बीजमन्त्र एकदम सूक्ष्म र सरल हुनेगर्छ तथा उच्चारणमा कम समय लाग्दछ, जस्तो गणेशको बीज मन्त्र ॐ गणपतये नमः, जसमा ॐ बीज परमपिता परमेश्वरको परमात्म शक्तिको प्रतीक हो । यस ॐ शब्दबाट सृष्टि, स्थिति र संहार तीन वटै कार्यको बोध हुन्छ ।

बीजाक्षरमा जुन अनुस्वार (ं) या चन्द्रबिन्दु (ँ) सङ्केत लगाइएको हुन्छ, त्यसलाई नाद भनिन्छ । नादबाट नै ईश्वरको शक्ति प्रकट गर्ने गरिन्छ । लिङ्गभेदबाट, जुन मन्त्रहरूका अन्तमा 'हूँ' र 'फट्' लाग्छ, त्यस्तालाई पुलिङ्ग मन्त्र भनिन्छ । जुन मन्त्रहरूका अन्तमा 'स्वाहा' लागेको हुन्छ, ती मन्त्र स्त्रीलिङ्ग भनाउँछन् । जुन मन्त्रको अन्तमा 'नमः' लागेको हुन्छ, ति मन्त्र नपुङ्सक लिङ्ग हुन्छन् ।

ऋग्वेद, यजुर्वेद, सामवेद, अथर्ववेद– यी सबै वेद मन्त्रहरूले भरिएका छन्, यसका प्रत्येक ऋचा मन्त्र हुन् । यजुर्वेदमा विशेष रूपले पर्याप्त मन्त्र पाइए पनि शुक्ल यजुर्वेद मन्त्रहरूका दृष्टिले विशेष महत्त्वपूर्ण छ । यसमा पनि रुद्राष्टाध्यायी महत्त्वपूर्ण छ, जसका मन्त्रले देवताहरूका आह्वान गर्ने गरिन्छ र कार्य सम्पन्न गराउन सकिन्छ । रुद्राष्टाध्यायीको माध्यमबाट त अभीष्ट सिद्धि पनि प्राप्त गर्न सकिन्छ ।

रुद्राष्टध्यायीमा जम्मा १७६ ऋचा मन्त्र छन् र यसको नियमित पाठ गर्नाले हरेक किसिमका कार्य सिद्धि, शान्ति, विद्वेषण, रोगनास, मारण, वशीकरण, स्तम्भन, उच्चाटन, सम्मोहन आदि सम्भव हुन्छन्, जसमा आगम मन्त्र विशेष उल्लेखनीय छ । कलियुगमा आगम मन्त्रहरूका प्रभाव अतिचाँडो, निश्चित एवम् पूर्ण रूपले हुन्छ । आगम मन्त्रहरूबाट पनि सबै किसिमका कार्य राम्रोसँग सम्पन्न गर्न सकिन्छ, किनभने यी मन्त्रहरूमा विशिष्ट प्रभाव रहेको हुन्छ र त्यस प्रभावको फलस्वरूप नै कार्यमा त्वरित गतिले सफलता प्राप्त हुन्छ । आगम मन्त्रको भाषामा फारसी तथा संस्कृत शब्दहरूको समावेश रहेको हुन्छ । यसप्रकार यी दुवै पद्धतिहरूका सम्मिश्रणबाट यी मन्त्रहरूका निर्माण भएको छ तर यसप्रकारका मन्त्रहरू सिद्ध गर्नमा विशेष चनाखोपनको आवश्यकता रहन्छ, किनभने यी मन्त्रमा फारसी प्रभाव र मुसलमानी प्रभाव विशेष रूपमा छ । आगम मन्त्र आफू आफैँमा बन्दुकजस्तै हुने गर्छ, यसकारण वैदिक एवम् आगम दुवै किसिमका मन्त्र एक ठाउँमा राख्दा अनिष्ट हुन सक्छ । आगम मन्त्रमा अलिकति पनि त्रुटि हुन गएमा त्यसले मन्त्रसाधकको

सत्यानाश गर्दछ, यसकारण आगम मन्त्रहरूका प्रयोग एवम् सिद्धि अत्यन्त सहगताको साथमा गर्नुपर्ने हुन्छ ।

सामाजिक दृष्टिले आगमको शाबर मन्त्रलाई हेय दृष्टिले हेर्ने गरिएको छ तर वास्तवमा व्यवहारमा भने यो मन्त्र अत्यन्त महत्त्वपूर्ण छ किनभने यो अति चाँडै प्रभावी छ, किनभने ग्रहदशा जब नराम्रो हुनेगर्छ, तब शत्रु पक्ष प्रबल हुनेगर्छ । उदाहरणको लागि शनिको साढेसातीको प्रभाव हटाउन वैदिक मन्त्र पाँच लाख पटक जप्नुपर्ने हुन्छ । सो जप गर्ने लामो समयमा त शत्रुपक्षले स्थिति नियन्त्रणभन्दा बाहिरको बनाइदिन सक्छ । यसकारण सङ्कटको समयमा आफ्नो स्वार्थपूर्तिको लागि आगम मन्त्रको प्रयोग गर्नै पर्छ । तर, गलत कार्यको लागि यसको प्रयोग गर्नु भने हुँदैन ।

उदाहरणको लागि चिकित्सा विज्ञानमा रोगीमा विषको प्रयोग सावधानीपूर्वक गरिन्छ, किनभने डाक्टरलाई विष प्रयोगको ज्ञान छ, यसको अर्थ उसले प्रत्येक रोगीलाई विष दिनु होइन । धेरैजसो रोग यस्ता हुन्छन् जसमा न्यून मात्रामा विष दिँदा रोगीले स्वास्थ लाभ प्राप्त गर्छ । धेरैजसो रोगमा साँपको विषको केही मात्रा दिने गरिन्छ, जसबाट त्यस रोगलाई बिसेक पार्न सकिन्छ । ठीक यही अवस्था मन्त्रको बारेमा पनि हो, उदाहरणको लागि एक जनालाई वैदिक, आगम, मानस सबै किसिमका मन्त्रहरूको ज्ञान छ तब पनि यो आवश्यक हुँदैन कि उसले सबै किसिमका मन्त्रहरूको प्रयोग समाजको हितको लागि गर्ला । यो त निकै राम्रो कुरा हो एक व्यक्तिमा सबै किसिमका मन्त्रको पूर्ण ज्ञान हुनु, यसले समयअनुसार मन्त्रहरूका चयन योग्य गुरुको परामर्शअनुसार गर्नुपर्छ ।

आगम मन्त्रहरू सिद्ध गर्ने र प्रयोग गर्ने विधि अलि फरक छ । कतिपय आगम मन्त्रको साधनामा सुरा र मासुको सेवन वर्जित हुन्छ । कतिपय मानिस आगम मन्त्र सिद्ध गर्ने समयमा यस्ता पदार्थको प्रयोग गर्दछन्, तर नाथपन्थको आगम विद्यामा यस्तो कुनै पनि उल्लेख छैन यस्ता पदार्थ सेवन गरेर साधना गर्नु भनेर । हो, यति अवश्य लेखिएको पाइन्छ, केही आगम मन्त्र श्मसानमा चाँडै सिद्ध हुन्छ र सम्पूर्ण आगम मन्त्र रातिको समयमा चाँडै सिद्ध हुन्छ । केही औघड साधकले आफूखुशी मदिरा सेवन गर्नु एकदम गलत हो । आगम मन्त्रमा मात्रै होइन, बरु कुनै पनि साधनामा अभक्ष पदार्थ सेवन गर्नु भनेर कतै पनि लेखिएको छैन । आगम मन्त्र सिद्ध गर्ने बेलामा खास ध्यान दिनुपर्ने कुरा के हो भने जबसम्म यो मन्त्र सिद्ध गरेर प्रयोग गरिनेछ, तबसम्म वेदोक्त मन्त्रहरू अथवा सात्विक मन्त्रहरूका उच्चारण एवम् जप गर्नुहुँदैन । यदि आगम मन्त्र प्रयोग गर्ने बेलामा सात्विक मन्त्र जप गर्ने हो भने त आगम मन्त्र सिद्ध हुँदैन र हुन सक्छ विपरीत परिणाम आओस् !

एउटा सानो उदाहरण एक जना व्यक्तिले बिहान दूध पिउँछ र साँझ कागती पानी । यी दुवै पेय पदार्थले उसको अनुकूल परिणाम पुगाइरहेको हुन्छ, तर त्यही व्यक्तिले दुवै पदार्थ मिलाएर सेवन गरेमा (दूधमा कागती पर्नासाथ दूध फाट्छ) दूध र कागतीबाट त्यस व्यक्तिले पाउनुपर्ने लाभ भने प्राप्त हुँदैन । बरु फाटेको दूध पिउनाले स्वास्थ्यमा हानि गर्छ । गोस्वामी तुलसीदासले रामचरित मानस लेखेका छन् । यसको प्रत्येक छन्द, चौपाइ, सोरठा र दोहा एउटा-एउटा मन्त्र हो । मानस मन्त्रको प्रयोग गर्नमा कुनै किसिमको सोचविचार गर्नै पर्दैन । मानस मन्त्र पाठ गर्दा मङ्गल नै मङ्गल हुन्छ ।

**भाय-कुभाय अनख आलसहु ।**
**नाम जपत मङ्गल दिसि दसहु ॥**

यस किसिमले मानस मन्त्र सर्वश्रेष्ठ छ, तर आयुर्वेदका औषधीझैँ सुस्त गतिमा लाभ दिन्छ । प्रारब्धमा जसलाई सुख-सुविधाहरू सजिलै हुन सक्दैन यानि जसमा सुख-सुविधा तथा लक्ष्मी प्राप्तिको योग नै हुँदैन, उनीहरूले मन्त्रोच्चार गरेर लक्ष्मीलाई प्रसन्न बनाउनुपर्छ । यस्तै क्रियाहरूका लागि मन्त्र उपयोगी हुन्छ । यदि मन्त्रको प्रभाव देखापरेन भने त यसमा मन्त्रको दोष हुँदैन । मन्त्रको मूल लय हो, जुन व्यक्ति एउटा निश्चित लयको साथमा बिस्तारै-बिस्तारै मधुर वाणीमा मन्त्र उच्चारण गर्दछ, उसले अवश्य नै सफलता पाउँछ, यदि सरर पढ्दै त्यही मन्त्र पाठ गर्ने हो भने त त्यसको प्रभाव कम हुन्छ किनभने त्यस मन्त्रमा लयको संयोग रहेको हुन्न । लयपूर्वक मन्त्र उच्चारण गर्दा प्रारब्ध पनि बदल्न सकिन्छ । वैज्ञानिक मतानुसार हामी जे उच्चारण गरे पनि, त्यो ध्वनि ब्रह्माण्डभरि फैलिन्छ । सम्मुखमा रहेको व्यक्तिमा मात्रै शब्द अथवा मन्त्रको प्रभाव पर्छ, यतिमात्र सत्य होइन, बरु हजारौँ किलोमिटर टाढा बसेको व्यक्तिको चित्तमा पनि मन्त्रको माध्यमले निश्चित प्रभाव पार्न समर्थ हुन सक्छौँ । उदाहरणका लागि पुराणहरूमा यस्ता अनेकन् घटनामध्येको एउटा घटना– एक समयको कुरो हो, इन्द्रको सभामा एउटी अप्सरा नाच्दा नाच्दै बेहोस भएर डङरङ्ग पछारिइन् । चारैतिर होहल्ला भयो ।

यस घटनाले इन्द्र अत्यधिक क्रोधित भए । यो घटना निश्चय नै देवराज इन्द्रको अपमान र निन्दा थियो ।

घटनाको छानबिन गरियो । देवराज इन्द्रले यस घटनाको यथार्थ पता लगाउने जिम्मेवारी देवगुरु बृहस्पतिलाई सुम्पिए । गुरु बृहस्पतिले विस्तृत अध्ययन गरेर कारण थाहा पाए, लङ्काधिपति रावणले नाच्दै गरेकी अप्सरा बेहोस बनाएर इन्द्रको अपमान गरेको । बृहस्पतिको यस यथार्थबाट देवराज आश्चर्यचकित भएर सोधे, रावण त सभामा उपस्थित छैन, अप्सरालाई पनि अस्त्रको कुनै चोट पटक लागेको छैन, कसरी ? अस्त्र बल त मन्त्र शक्तिको अगाडि तुच्छ भएको कुराको जानकारी गुरु बृहस्पतिबाट देवराज इन्द्रले थाहा पाए, लङ्काधिपति रावणले भगवान् शङ्करको कठोर तपस्या गरेका थिए ।

भगवान् शङ्कर रावणसँग प्रसन्न भएकाले उनले रावणलाई आफ्नो नजिक बोलाएका थिए । भगवान शङ्करको नजिक गएर पनि रावणले केही पनि मागेन । एक दिन रावणले भगवान् शङ्करको पाउ थिचिरहेको थियो र भगवान् शङ्कर पार्वतीका साथमा बसेका थिए । त्यस बेला पार्वतीले धेरै अनुरोध गरेपछि महादेवले तान्त्रिक विद्याको बारेमा जानकारी गराए, मनुष्यको साधनाले प्राप्त गरेको शक्ति अस्त्र शक्तिभन्दा निकै नै धेरै प्रभावशाली हुन्छ । उसको सिद्धिको कारण कुनै पनि शक्तिले साधकको अनिष्ट गर्न सक्दैन । मन्त्रको प्रयोग हजारौँ किलोमिटर टाढाबाट पनि गर्न सकिन्छ । रावणले मनमनै मन्त्र विद्या सिक्न चाहेको कुरो महादेवले थाहा पाए । उनले सम्पूर्ण विद्या उसलाई सिकाइदिए र भने “यस विद्याबाट ऊ संसारको सम्पूर्ण असाध्य कार्य पनि पूरा गर्न सक्दछ साथै यशादि प्राप्त गरेर विजयी हुन सक्दछ ।”

रावणले यसै विद्या प्रयोग गरेर इन्द्रको सभामा नाच्दै गरेकी अप्सरालाई बेहोस पारेका थिए । मन्त्रमा लयको विशेष महत्त्व रहने गर्दछ । त्यो मन्त्र प्रभावहीन हो, जसको मूलमा निश्चित लय या ध्वनि रहेको हुँदैन ।

ती शब्दलाई निरर्थक भन्न सकिन्छ, जसको मूलमा अर्थ रहे पनि त्यस शब्दलाई एउटा विशेष लय अथवा मधुर रूपमा गाउन सकिँदैन, यस्ताको प्रभाव शून्य हुने गर्छ ।

कवि सम्मेलनमा जब हास्यरसका कविले विशिष्ट लयमा आफ्नो रचना सुनाउँछन्, तब टाढाटाढा बसेका श्रोता पनि मुग्ध हुन्छन् र पेट थिचेर भए पनि हास्दै रहन्छन् । तर त्यही कविता जब सामान्य मानिसले कहिल्यै त्यही मञ्चमा सुनायो भने एक जना स्रोता पनि हाँसेको पाइन्न । स्थान त्यही हो, शब्द त्यही हो, कविता पनि त्यही हो, तर कविले त्यसलाई विशेष लयको साथमा प्रस्तुत गर्दछ, यसबाट त्यस शब्दको प्रभाव टाढा टाढा बसेका स्रोताको चित्तमा पार्छ, त्यही शब्द एकजना साधारण व्यक्तिले सुनाउँदा कुनै प्रभाव पर्दैन । यसबाट स्पष्ट हुन्छ शब्द अथवा त्यसको अर्थ मन्त्रको दृष्टिले विशेष महत्त्व राख्दैन, बरु मन्त्र त विशेष लय एवम् ध्वनिको साथ उच्चारण गर्दा प्रभावशाली हुने गर्छ ।

कतिपय मानिसले भन्ने गरेको यत्र-तत्र सुनिन्छ– ‘समयभन्दा पहिले र भाग्यभन्दा धेरै कहिले केही पाइन्न ।’

आज मन्त्रप्रति विश्वास नरहेको हुँदा, मन्त्रजप गर्न कोही चाहिन्न, जप्यो भने पनि हतार हतारमा अति चाडचाडो, समय-सीमा राखेर ।

वैदिक मन्त्रहरूका चमत्कार आज पनि विद्यमान छ ।

प्रश्न यतिमात्र हो आज पनि रुद्राष्टाध्यायी शिव अभिषेक लमक-चमक लयको साथमा उच्चारण गर्ने हो भने पानी पार्न सकिन्छ । मन्त्र जब लयको साथमा उच्चारित हुन्छ, तब निश्चित रूपले प्रभाव पर्छ नै । आजको समयमा मन्त्र पाठ गर्दा कसैलाई लाभ भएकोमा पनि उसले मैले यो उपलब्धि मन्त्र पाठ गरेर पाएको हुँ भन्दैन । लाभ भए पनि उसले भन्छ, मैले पाउनुथियो पाएँ । हिजोआज यथार्थमा सोचमा नै परिवर्तन आएको छ ।

कुनै भोको माग्ने घरघरमा गएर ढोका ढकढकाउँदै, गेटको घण्टी बजाउँदै भन्छ ‘म भोको छु, खान दिनुस्’ यो वाक्य यथार्थमा मन्त्र हो, जुन घरधनीलाई यस मन्त्रले प्रभावित गर्दैन, त्यस्ताले गाली गरेर, हप्काएर, झपारेर भगाइदिन्छ ।

त्यही घरमा एक छिनपछि आएको अर्को माग्नेले आर्द्र एवम् करुणामयी आवाजमा त्यही वाक्य भन्छ, तब घरधनी द्रवित भएर, प्रभावित भएर केही न केही दिन्छ । भगवान् शिव सबैको दाता हुन्, उनलाई प्रभावित पार्न साधकले योग्य गुरुबाट मन्त्रप्राप्त गरेर उच्चारण गर्ने तरिका सिकेर जप गरेमा अवश्य काम बन्छ ।



# भोट क्षेत्रकी प्रसिद्ध योगिनी येशे छोग्याल



✍ कल्पना पराजुली (तिलस्मी प्रभास)

**जन्म :**

तिब्बतमा सातौँ शताब्दीमा बौद्ध धर्मको प्रवेश भएपछि धेरै तिब्बतीहरूले बौद्ध धर्मको गहन रूपमा अभ्यास गर्न थाले । त्यही क्रमका आठौँ शताब्दीमा येशे छोग्याल नाम गरेकी साधिकाले बौद्ध धर्मको गहन रूपमा अभ्यास गरी सिद्धि प्राप्त गरेको विषयलाई यहाँ चर्चा गरिन्छ । भोटको एउटा प्रदेशमा खार्छेनकी राजकुमारीको रूपमा आठौँ शताब्दीमा कैयौँ चामत्कारिक घटनाहरूसहित येशे छोग्यालको जन्म भएको थियो । त्यस बेला भूकम्प जाने, मेघ गर्जिने, आकाशबाट पुष्पवर्षा हुने, तालको पानी बढ्ने र अनेकौँ नयाँ प्रकारका सेता र राता फूलहरू फक्रिने आदि चामत्कारिक घटनाहरू भएका थिए । दरबार क्षेत्रलाई इन्द्रेणी प्रकाशले ढाकेको थियो । त्यसपछि सुमधुर सङ्गीतको ध्वनिले आकाश गुञ्जियो । वीणाको सुमधुर लामो झङ्कार चारैतिर सुनियो । बादलहरूका बीचमा देवीहरूका गण देखा परेर गीत गाए । येशे छोग्यालको बयान गर्दै गीतबाटै बधाई दिए । फूलहरूको वर्षा गराएर देवीहरू आकाशमा अलप भए । येशे छोग्याल घुँडा टेकेर अर्धपद्मासनमा बसिन् र 'म यस्ती कन्या हुँ' भन्दै गीत गाइन् । उनका दाँतहरू शङ्खजस्तै सेता थिए र नीलो रङको कपाल कम्मरसम्म पुगेको थियो । भोटको परम्परा-अनुसार आमाले दिएको चौँरीको नौनी कसरी र किन खाँदै छु भन्नेबारे बताउँदै खाइन् । उनका लक्षणहरू देखेर सबै आश्चर्यचकित भए । विभिन्न मानिसहरूले विभिन्न भविष्यवाणी गरे ।

जन्मिएको एक महिनापछि नै उनी आठ वर्षकी जस्ती देखिन थालिन् । उनको चकित पार्ने सुन्दरताले गर्दा मान्छेहरू उनीप्रति मोहित हुने गर्थे । उनलाई हानी पुग्ने ठानेर दश वर्षसम्म उनका मातापिताले उनलाई अरूसँग भेट्न दिएनन् । छोग्याल दश वर्षकी हुँदा उनको शरीर सुडोल र अति नै सुन्दर अनि आश्चर्यचकित पार्ने खालको बन्यो । छोग्यालको सुन्दरताको बयान तत्कालीन राजाको कानसम्म पनि पुग्यो । तिब्बत, चीन, मङ्गोलिया र नेपालबाट छोग्याललाई हेर्न भनी असङ्ख्य मानिसहरू कुनै उत्सव मनाउन गएझैँ गरी गएको कुराको वर्णन छ । (लामाः २००३ः ६)

**विवाहः**

येशे छोग्याल अति सुन्दरी भएकीले उनलाई विवाह गर्नका लागि मानिसहरू जे गर्न पनि तयार थिए तर येशे छोग्याल बिहे गर्न चाहँदैन थिइन् । यसको प्रतिवादमा उनले धेरै दुःख, कष्ट र सजाय भोग्नुपर्‍यो । अन्ततोगत्वा उनको विवाह धार्मिक राजा ठिसोङ देउचेनसँग भयो । उनले येशे छोग्याललाई उचित सम्मानका साथ राखे । धार्मिक क्षेत्र हेर्ने जिम्मा दिए । येशे छोग्याल विदूषी हुनुका साथै बौद्ध धर्ममा अगाध श्रद्धा राख्थिन् । राजाले उनमा भएका अद्भूत क्षमताको मूल्याङ्कन गरी उनलाई लोकहितको लागि नेपालबाट गएका बज्रयानी गुरु पद्मसम्भवको साथमा रही सहकार्य गर्नको लागि सुम्पिएका थिए । राजाले अन्य बहुमूल्य सामग्रीहरू पनि पहाडजत्तिकै थुप्रो चढाएका हुनाले गुरु रिन्पोछे अति नै प्रसन्न भएर येशे छोग्याललाई आफ्नो शिष्या बनाए, आगम तथा अभिषेकहरू दिए । गुरु रिन्पोछेको निर्देशन अनुसार येशे छोग्यालले ती सबै अभ्यास पूरा गरिन् । गुरु रिन्पोछेले अन्य धेरै उपदेशहरू पनि दिए ।

**पद्मसम्भव (गुरु रिन्पोछे):**

आठौँ शताब्दीमा उड्डियानमा कमलको फूलमा पैदा भएका पद्मसम्भवलाई तलाउको बीचमा कमलको फूलमा आठ वर्षको जत्रो देखेर राजाले आश्चर्य मान्दै आफ्नो दरबारमा लगेर आफ्नो उत्तराधिकारी बनाएको प्रसङ्ग पाइन्छ । यद्यपि, पद्मसम्भवलाई राज्य चलाउने इच्छा भएको देखिँदैन । उनी नालन्दा विश्वविद्यालयको

आचार्य भएको पनि प्रसङ्ग पाइन्छ । विभिन्न चामत्कारिक घटनाहरूले उनी महान् सिद्ध भएको कुरा पुष्टि गर्छ ।

उनी नेपालको फर्पिङ क्षेत्रमा रहेका याङ्लेसो र असूर गुफामा बसी ध्यान गरी केही सिद्धि प्राप्त गरेका थिए । त्यही समयमा तिब्बतमा बौद्ध धर्म फैलाउने उद्देश्यले राजाका दूतहरू उनलाई लिन आए र तिब्बत गई बौद्ध धर्म फैलाउन बिन्ती गरेपछि उनले तिब्बतमा गएर त्यहाँका स्थानीय बोनहरू, भूत, प्रेत, राक्षस र राक्षस्नीहरूलाई दमन गरी बज्रयान बौद्ध धर्मको स्थापना गरेको पाइन्छ । (लामाः २००२ः ३१)

साम्ये गुम्बा बनाउन खोज्दा राक्षस्नीले बनाउन नदिएको हुँदा त्यसलाई खेदाउँदै मुस्ताङको लोगेकारसम्म ल्याएर दमन गरी त्यहीँ एउटा गुम्बा बनाएको र त्यो गुम्बाको नाम लोगेकार गुम्बा रहेको जुन गुम्बा हालसम्म रहेको छ र यो संसारकै सबैभन्दा पुरानो गुम्बा मानिन्छ । यी आदि प्रसङ्गहरू तिब्बती ग्रन्थ गुरु रिन्पोछेको नाम्थार पेमा काथाङमा उल्लेख गरिएको छ । (ओर्गेनः लिङ्पाः १९९३ः ३८४) त्यतिमात्रै नभएर बौद्ध स्तुपको कथा पनि गुरु पद्मसम्भवसँग जोडिएको पाइन्छ त्यसैले पद्मसम्भवलाई नेपाल, भारत, भोट, भुटान र पाकिस्तानमा शक्तिशाली सिद्ध बज्रयानी गुरुको रूपमा लिने गरेको पाइन्छ ।

## गुरु रिन्पोछेसँगको अनुशरणः

गुरु रिन्पोछे र येशे छोग्याल साधनाको लागि पहिले चिम्फुमा गएका थिए । त्यसपछि एकान्तबासको ध्यान गर्न यामालुङमा गए । त्यसबेला गुरु रिन्पोछेले येशे छोग्याललाई जहिले पनि सदाचारी हुन र भगवान् बुद्धका उपदेशहरूमध्ये विशेष गरी चार आर्यसत्यको अनुशरण गर्ने सल्लाह दिए । यसको अलावा सूत्र, विनय, अभिधर्म र हेतु प्रत्यय आदिको उपदेश पनि दिए । यसै गरी स्वीकार गर्ने र त्याग्ने कुराहरू बताए । यस्ता उपदेशहरूलाई येशे छोग्यालले हृदयङ्गम गरिन् र ध्यानमा उतारिन् । यसरी गुरु रिन्पोछेले बुद्धका सम्पूर्ण उपदेशहरू येशे छोग्याललाई दिए । येशे छोग्यालले पनि यसलाई भावनामा उतारेर यसको संरक्षण गरिन् ।

येशे छोग्यालले तन, मन र वचनले लामो समयसम्म गुरु रिन्पोछेको सेवा गरेर खुशी पारेपछि उनले उपदेशहरू एउटा कलशबाट अर्को कलशमा जल खन्याएजसरी दिएका थिए । त्यसपछि छोग्यालले फेरि कारण र असरभन्दा परको सर्वोच्च उपदेश दिन अनुरोध गरिन् ।

यसबाट गुरु रिन्पोछे खुशी भएर मुस्कुराउँदै मधुर वाणीमा यस्तो भने, “ज्यादै असल हे खार्चेन पुत्री ! तिमी १६ वर्षकी कन्याले ८० वर्षकी वृद्धाको दुःख भोगेकी छ्यौ । तिम्रो पीडालाई तिम्रो पहिलेको कर्मको फल भएको जान । अबदेखि तिम्रो कर्म शुद्ध र असल गुणयुक्त हुनेछन् । अबदेखि तिमी जहिले पनि सुखी हुने छ्यौ । अब कहिल्यै पनि अकुशल कर्मका कारण खराब शरीर पाउने छैनौ । अब तिमीलाई यो कुराको बोध भइसकेको छ । तिमीले सर्वोत्कृष्ट महायानको सर्वोच्च उपदेश पाउने आकाङ्क्षा राख्नु ज्यादै असल कुरा हो ।”

त्यसपछि गुरु रिन्पोछेले येशे छोग्याललाई उपदेश र दीक्षा दिएर “वाचा नतोड्नू, यदि तोड्यौ भने दुवैलाई अप्ठ्यारो पर्नेछ” भनी सम्झाए । उनले पनि सोहीअनुसार गरिन् । काय, वाक र चित्तले कहिल्यै गुरु र वहाँका नजिक र सम्बन्धित व्यक्ति, चिजबिज आदिलाई पनि त्यत्तिकै सम्मान र आदर गर्नुपर्ने हुन्छ, त्यो सबै गर्न येशे छोग्याल सफल भइन् । त्यस्तै क्रमले येशे छोग्यालले गुरु रिन्पोछेसँग भएका ज्ञान वाङ, लुङ र ठ्रि मार्फत अर्थात् अभिषेक, आगम र उपदेशहरू सबै क्रमैसँगै लिइन् । उनले गुरुको वचन कहिल्यै उल्लङ्घन नगरी त्यसको शतप्रतिशत पालना गर्दै कठोर शीलमा रहेर अति उत्साहका साथ तन, मन र वचनले युक्त भई अभ्यास गरेर छिट्टै सिद्धि प्राप्त गरिन् । यसमा उनले उच्च स्तरको सर्वोच्च अभ्यासको विधिअनुसार रक्षक देव ह्यग्रीव र बज्रबाराहीको मण्डललाई निरन्तर प्रवाह हुने नदीलाई झैँ गरी आफ्नो मनमा बलियोसँग ग्रहण गरिन् ।

साम्ये नजिक यामालुङमा गुरु पद्मसम्भव र येशे छोग्यालले तान्त्रिक अभ्यास गरेपछि उनीहरूलाई दरबारमा निमन्त्रणा गरिएकाले गए । येशे छेग्याललाई पद्मसम्भवले खट्वाङ्गमा लुकाएर लगेका थिए । यसबीचमा येशे छोग्याललाई नदेखेपछि मन्त्रीहरूले सोधीखोजी गरे । कुरा लुकाउन नसकेर राजाले येशे छोग्याललाई गुरु पद्मसम्भवलाई चढाएको कुरा सुनाएपछि मन्त्रीहरू रिसले चुर भए र विरोध गरे । येशे छोग्याललाई पनि पहिले उनले खार्छेनमा समस्या खडा गरेकी थिइन् । अब यहाँ पनि उनको कारण समस्या आयो । अब त्यो फिरिङ्गे पद्मसम्भवलाई छोड्नुहुँदैन भनेर मन्त्रीहरूले

सल्लाह गरे । राजाले यो कुरा पद्मसम्भवलाई सुनाए तर पद्मसम्भव डराएनन् ।

पद्मसम्भवले दिएका सम्पूर्ण अभ्यासहरूमा येशे छोग्यालले अभ्यासमा पूर्णता हासिल गर्दै गएपछि उनलाई यस्तो भन्छन्, "उत्साही र संवेदनशील हे खार्चेन पुत्री ! तिम्रो शरीर एउटा अनुपम अवसर र उचित समय हो । तिमी महान् र ज्ञानी सरस्वती हौ । तिमी योग्य उपदेशको सिद्धि प्राप्त गर्ने बज्रबाराही हौ । एउटा वीराङ्गनाले झैँ कार्य गर ।"

येशे छोग्यालले आफूलाई अझै गहन उपदेश दिन अनुरोध गरेपछि गुरु रिन्पोछेले उनलाई यस्तो निर्देशन दिए, "हे खार्चेन पुत्री ! अहिले तिमीले गुह्य अभ्यास गर्ने समय आएको छैन । तिमीलाई एक जना उपाय वीर सहचरको आवश्यकता पर्दछ । हाल नेपाल भूमिमा एक जना स्वर्णद्वीपका बासिन्दा ह्यग्रीवका रूप आचार्य साले बस्छन् । उनको हृदयमा रातो चिन्ह छ र उनी सत्र वर्षका छन् । उनलाई फेला पारेर मित्र बनाऊ । त्यसपछि तिमी चाँडै नै महासुखको स्तरमा पुग्नेछ्यौ ।" (लामाः २००३ः ३४)

गुरु रिन्पोछेको आज्ञाअनुसार छोग्याल एउटा सुनको धूलोले भरिएको पात्र बोकेर एक्लै यात्रामा निस्किन्छन् । नेपाल र तिब्बतको इरोङ उपत्यकामा आएपछि उनलाई भयानक शिकारी कुकुरका साथै सात जना डाकूहरूले सुन लुट्न लागेपछि उनले तिनीहरूलाई आफ्नो रक्षक देवताहरूको रूपमा भावना गरेर गीत गाउँछिन् र प्रार्थना गर्छिन् । ती डाकूहरूले छोग्यालको भाषा नबुझे पनि शान्त भएर सुन्छन् र बुझाउन आग्रह गर्छन् । त्यसपछि छोग्यालले बुझाउँछिन् र उपदेश दिन्छिन् । डाकूहरूमा छोग्यालप्रति श्रद्धा पैदा हुन्छ । छोग्यालको उपदेश पाएर उनीहरू अवैवर्तिक अवस्थामा पुग्छन् र उनीहरूको उद्धार हुन्छ । उनीहरूले छोग्याललाई आफ्नै गाउँमा बस्न आग्रह गर्छन् ।

**नेपाल भ्रमणः**

छोग्याल त्यहाँबाट बौद्ध स्तुप (झ्यारुङ खास्योर) को दर्शन गर्न भनी हिँड्छिन् । बौद्ध स्तुपमा आएर छोग्यालले सुनको धूलो चढाएर प्रार्थना गर्छिन् "आँ आ हुँ नेपाल भूमि बुद्धहरूको शुद्ध भूमि होस् । धर्मकाय सन्ततिहरू प्राणीहरूको रक्षक बनून् । अब आउने गहन कल्पहरूभरि नै प्राणीहरूलाई संसारको सागरबाट मुक्त गर्दै सर्वोच्च धर्मको चक्र निरन्तर रूपले घुमिरहोस् ।"

येशे छोग्यालले यस्तो प्रार्थना गरेपछि स्तुपबाट असङ्ख्य रङ्गीन प्रकाशको किरणहरू उत्पन्न हुन्छन् । बादलहरूको बीचमा गुरु पद्मसम्भव देखापर्नुहुन्छ । उहाँका दायाँ र बायाँ बोधिसत्वहरू र डाकिनीहरू पनि देखापर्छन् । पद्मसम्भवले यस्तो भने, "हे खार्चेन पुत्री, ध्यान दिएर सुन । तिमी अनुशासित, नैतिक तथा धर्यवान् र रिसमुक्त छ्यौ । तिम्रो विभेदपूर्ण ज्ञानद्वारा तिमीले अनेकौँ प्राणीहरूलाई मार्गदर्शन गरेकी छ्यौ" आदि कुराहरू भन्दै "अब समय खर्च नगरीकन आफ्नो उपाय खोजेर तिब्बतमा आऊ अनि म गहन र मन्त्रयानको द्वार खोल्नेछु" भनी अलप हुन्छन् ।

येशे छोग्याल ती युवकको खोजीमा लाग्छिन् । कतै सङ्केत नपाएपछि उनी भक्तपुर (खोखोम हान) लाग्छिन् । दक्षिणद्वारबाट बजारतर्फ प्रवेश गर्दा उनको भेट एक युवकसँग हुन्छ । उनी अति सुन्दर र आकर्षक थिए । उनको छातीमा रातो कोठी थियो । अगाडिका दाँतहरू मिलाएर राखिएका शङ्खझैँ थिए । ४ वटा कुकुर दाँतहरू शङ्ख घुम्ने दिशातिर घुमेका थिए । उनको नाक तीखो थियो र आँखाहरू नीला थिए । केश दायाँतिर घुम्रिएका थिए । औँलाहरू लामा र सुन्दर थिए ।

उनीहरूबीच वार्तालाप हुन्छ । युवकले "तपाईँ मलाई यो बन्दी जीवनबाट मुक्त गर्न आउनुभएको हो ?" भनी सोध्छन् र यशे छोग्यालले "हो" भन्छिन् । युवकले आफूलाई एउटा हिन्दू जोगीले आफ्ना बाआमाबाट चोरेर ल्याई यहाँ बेचेको, त्यसकारण आफू बन्दी भई नोकरको रूपमा काम गर्नुपरेको कुरा बताउँछन् । उनको घर सुवर्णद्वीप (इन्डोनेसिया) मा भएको र उनी सात वर्षदेखि त्यही साहुकोमा बस्न बाध्य भएको कुरा बताउँछन् । उनीहरूको वार्तालाप सुन्ने मान्छेहरूको भीड नै लाग्छ । यशे छोग्यालले कुरा गर्दा सुमधुर स्वरमा गीत गाएर कुरा गरेको सुनेर त्यो भीडले उनलाई गीत गाउन लगाउँछ उनको गीत सुनेर मुग्ध भई उनलाई मीठो गीतकी डाकिनी भनी सम्बोधन गर्छ ।

त्यसपछि त्यो साझ उनीहरू आचार्य सालेको साहुको घरको छिडीमा बस्छन् । आचार्य सालेकी साहुनीले येशे छोग्याललाई सोध्छिन्, "तिमी कहाँबाट आयौ यहाँ के गछ्र्यौ ?" येशे छोग्यालले आफ्नो सहचर

आचार्य साले यहाँ भएकाले मलाई गुरु पद्मसम्भवले उनलाई लिन पठाउनुभएको उनलाई उद्धार गर्न दिनुमा नै तपाईंहरूको कल्याण हुन्छ भनिन् ।

यति सुनेपछि साहुनीले यस्तो भनिन्, "आचार्य साले हाम्रो अनुचर भए पनि हाम्रो छोरासमान छन् । उनलाई त्यत्तिकै लान मिल्दैन उनलाई हामीले धेरै सुनका सिक्काहरू तिरेर किनेका हौँ । बरु तपाईं जिद्धी गर्नुहुन्छ भने दुवै जना हाम्रो सेवा गरेर बस्दा हामी खुशी हुन्छौँ ।"

येशे छोग्यालले उनका कुरा सुनेपछि भन्छिन्, "यदि फल परिपक्व भएको भए मलाई सालेको आवश्यकता पर्ने थिएन तर परिपक्वताको पथमा मलाई मित्रको रूपमा सालेको आवश्यकता छ, त्यसैले उनलाई बेच्न म बिन्ती गर्दछु ।" उनले यी सबै कुराहरू गीतमै भनेकी थिइन् । मान्छेहरू उनको सुमधुर ध्वनिमा लठ्ठ भएर स्वागत गरे । साहुले उनलाई यी युवकलाई छुटाएर बिहे गर्न चाहेको हो भने म गरिदिन्छु भने । छोग्यालले "पवित्र धार्मिक उद्देश्यका लागि चाहिएको हो" भनिन् । साहुले "कति छ सुनका सिक्का ? मैले ऊ बेला ५ सय सुनका सिक्कामा किनेको हो । अहिले त उनको मूल्य त्यो भन्दा धेरै बढी हुन्छ" भनेपछि "तपाईंले मागेजति सुनका सिक्का म दिन्छु" भनिन् तर उनीसँग भएको सुनको धूलो जोख्दा एक सय सिक्कामात्र हुने रहेछन् । "मैले उनलाई जसरी भए पनि लानै पर्छ" भनेपछि साहुले भने, "म तिनलाई जान त दिउँला तर तपाईंले सुन दिनै पर्छ । तपाईंसँग अहिले भएको सुनले त सालेको एउटा पाखुरा पनि किन्न सक्नुहुन्न । अरू सुन जुटाउनुबाहेक तपाईंसँग अन्य कुनै उपाय छैन ।"

त्यस समयमा भक्तपुरमा लडाइँ भइरहेको र त्यो लडाइँमा धनआयु नाम गरेको एकजना व्यापारीको नाग नाम गरेको बीस वर्षीय छोराको मृत्यु भएको थियो । छोराको शवलाई बाआमाले घरमा ल्याएर सम्मानपूर्वक राखेका थिए । उनीहरू शोकाकुल भई आफ्ना पुत्रले भैँ आफूहरूले पनि जीवन बलिदान दिने प्रतिज्ञा गर्दै थिए । त्यो दृश्यले छोग्यालको मनमा असीम करुणा पैदा भयो र उनले भनिन्, "यति धेरै दुःखी हुनुपर्दैन यस शहरमा आचार्य साले नाम गरेका एक युवक बस्छन् । यदि तपाईंहरूले मलाई तिनलाई छुटाउनका लागि चहिने जति सुन दिनुहुन्छ भने म तपाईंका पुत्रलाई जीवित बनाइदिनेछु ।"

छोग्यालका यस्ता कुरा सुनेर उनीहरू हर्षविभोर भएर भने, "यदि तपाईंले हाम्रा पुत्रलाई फेरि जीवित बनाउनुभयो भने तपाईंका लागि एकजना राजकुमार नै दिने छौँ ।" छोग्यालले मलाई राजकुमार हैन, सुन चाहिएको छ भनेपछि उनीहरू आचार्य सालेलाई छुटाउन चाहिनेजति सुन दिन तयार भए । छोग्यालले ती व्यापारीको छोरालाई पुनर्जीवित बनाउनका लागि गुरु रिन्पोछेको आर्शिवाद प्राप्त गर्न प्रार्थना गरिन् । करुणाले ओतप्रोत भएर उनले मृतकको हृदयमा औँलाले देखाउँदा त्यसमा बिस्तारै रङ आउन थाल्यो । अलिकति पानी मृतकको मुखमा हालेपछि उसको कानमा "आयु ज्ञान भ्रुं ।" भनेर जपिन् त्यसपछि मृतकको शरीरमा लागेको छुरीको गहिरो घाउमा उनले आफ्नो मुखबाट न्याल निकालेर हातले दलेपछि मृतकको शरीर पहिलेकै जस्तो भयो । बिस्तारै उसमा चेतना आयो ।

छोग्यालको चमत्कार देखेर मृतकका मातापिता र गाउँलेहरू खुशी भएर विभिन्न उपहारहरू चढाएर गणचक्रको आयोजना गरे । आचार्य सालेलाई छुटाउन पुग्ने सुन पनि दिए । (लामाः २००३ः ४२)

छोग्यालको ख्याति देशभरि नै फैलियो । राजाले पनि छोग्यालको सत्कार गरे र राजपुरोहित भएर बस्न प्रस्ताव गरे । छोग्यालले राजाको प्रस्ताव अस्वीकार गर्दै आफ्नो आध्यात्मिक सहचर आचार्य सालेको साथ काठमाडौँको इयीचुङ-लाखाङ मन्दिरतर्फ लागिन् त्यहाँ गुरु पद्मसम्भवका चेला वसुधरसँग उनीहरूको भेट भयो । छोग्यालले उनीसँग आफ्नो सहचरको लागि अभिषेकको अनुरोध गर्दै सुन र उपहारहरू चढाइन् । छोग्याल गुरु पद्मसम्भवको सहचरी हो भन्ने थाहा पाएपछि वसुधरले बढो सत्कार गरेर उपदेश र निर्देशनहरू दिन अनुरोध गरे । छोग्यालले पनि उनका सबै इच्छाहरू पूरा गरिदिइन् ।

त्यसैगरी अन्य साधक-साधिकाहरूसँग छोग्यालको भेट भयो र वार्तालाप भयो । फर्पिङको याङ्लेशो क्षेत्रमा पनि यसमध्ये छोग्यालले शाक्यदेमा सामु आफ्ना अनुभूति सुनाइन् त्यसपछि पद्मसम्भवकी नेपालीकी सहचरी (प्रज्ञा), डाकिनी शाक्यदेवीले आफूले पाएका ज्ञान र अनुभूतिका बारेमा बताइन् । त्यसको केही समयपछि छोग्याल आफ्नो सहचार आचार्य सालेको साथमा तिब्बततिर लाग्छिन् । छोग्यालका पूर्वपति राजा ठिसोङ देउचेनले

अभिषेक र उपदेश लिने उद्देश्यले पद्मसम्भवलाई लिन आफ्ना दूतहरू पठाउँछन् । पद्मसम्भव जानलाई राजी हुन्छन् र छोग्याललाई आफ्नो खट्वाङ्गमा परिणत गरेर राजाकहाँ पुग्छन् ।

दरबारमा भव्य स्वागत हुन्छ । गुरुलाई एकजना भारतीय साधुसँग देख्छन् आफ्नी प्रज्ञा छोग्याललाई नदेखेपछि उनी छोग्यालविना गुह्य उपदेश प्राप्त गर्न असम्भव होला भनी निराश हुन्छन् । छोग्याललाई भेट्ने राजाको उत्कट इच्छा पनि हुन्छ । त्यसैले छोग्याल जहाँ भए पनि आउन निमन्त्रणा दिने सोच बनाउँछन् । त्यसपछि राजाले सोध्छन् "हे महागुरु ! छोग्याल अहिले कहाँ छिन् ? उनी किन आइनन् ? यी भारतीय साधु को हुन् ? यिनले कुन उपदेश पाएका छन् ?"

त्यसपछि गुरु पद्मसम्भवले छोग्याल धर्मधातु र शून्यताको बिस्तारमा प्रवेश गरेकी छिन् र अहिले उनी यस संसार र विर्वाणका बीचमा छिन् भनेर अन्य यस्तै गुह्य उपदेश दिँदै आफ्नो खट्वाङ्ग छुन्छन्, त्यसबाट छोग्याल बाहिर निस्किन्छिन् । राजा र जनताले खुशी व्यक्त गर्दै श्रद्धा गर्छन् । गुरुले उपदेश दिन्छन् । त्यसपछि पद्मसम्भव ३ सय ५ जना साथमा लिएर छिम्फुमा गई त्यहाँ आफ्ना अनुयायीहरूलाई अभ्यासको निर्देशन दिन्छन् । राजाले खुशी भई अरू साधक र गुरुलाई चाहिने कुराहरू उपलब्ध गराउने वाचा गरेपछि गुरुले राजालाई तपाईँ साँच्चिकै देवतुल्य शासक हुनुहुन्छ भनी प्रशंसा गरे ।

गुफामा बसेर येशे छोग्यालले आफ्नो साधनालाई निरन्तरता दिइन् । उनको सिद्धि हुँदै गयो । उनले डाकिनी साधना सिद्धि भएको कुरा यसरी उल्लेख गरेकी छिन्–

"मैले तुम्मो (चण्डाली) अभ्यास गर्दा गुरु पद्मसम्भवको आज्ञाअनुसार नरवस्त्रको उपेक्षा गर्दै सबै प्रकारका अनुशासनमा रहेर सिद्धि प्राप्त गरेँ । उनलाई सबै प्रकारका सिद्धिहरू भएका थिए । आठ वटा अनुशासनमा बसेर साधना गरेपछि सिद्धिका लक्षणहरू देखा परे । तुम्मो ताप जागेपछि म सांसारिक आवश्यकताबाट मुक्त बनेँ । गुरुको शुद्ध रूपको दर्शन पाएँ । नेपाल भूमिमा आचार्य सालेलाई छुटाएँ । महासन्धिको सारभूत सिद्धि प्राप्त गरेँ । मेरो आवाज ब्रह्मको भैँ सुरिलो भयो । मेरो शरीर आकाशमा नृत्य गर्न सक्ने पूर्ण रूपमा इन्द्रेणीभैँ बन्यो । मेरो चित्त तीन कालको बोधिचित्त बन्यो । सिङ्गेजोङमा म देवीदेवताहरूबाट घेरिएँ । औषधी अमृत प्राप्त गरेँ । नेरिङमा मैले दैत्यको राजालाई पराजित गरेँ । इष्टदेवताहरूको दर्शन पाएँ । सिद्धिको परम आनन्द प्राप्त भयो ।

पारो गुफामा महासन्धिको अभ्यास गरेँ । मेरा तीन जना सहचर र सहचरीसँग हेरुकको अभ्यास गरेँ । नाडी, प्राण र वायुमा नियन्त्रण गर्न सक्ने भएँ । पञ्चतत्त्वहरू शक्तिशाली देव बने । बज्रयोगिनीको अक्षुण्ण आशिर्वाद पाएर म मण्डलहरूकी स्वामिनी बनेँ । वोम्फु बाघ गुफामा बज्रकिलको साधना गरेँ । शरीर अपराजित र अभेद्य बज्र बन्यो । मैले तिब्बतका असङ्ख्य शक्तिपीठहरूमा अभ्यास गरेँ । मैले आशिर्वाद नदिएको एक मुठी माटो पनि छैन । त्यो कुरा भविष्यले बताउनेछ । पछि फेला पर्ने निधिहरूले त्यो कुरा पुष्टि गर्नेछन्, जुन निधिहरू अहिले मैले पछिका लागि लुकाएर राखिदिएकी छु । कल्पनाभन्दा परका स्थानहरूमा मेरा हात र पदचिह्नका छापहरू छाडिएका छन् । भविष्यमा यिनीहरूले आस्था देखाउनेछन् ।

मेरा ऋद्धिले दानव र अधर्मीहरूलाई नष्ट गऱ्यो । पञ्चतत्त्वलाई नियन्त्रण गरेर मैले पृथ्वीलाई निधिले ढाकेकी छु । निरोधका सम्पूर्ण शक्तिहरू प्राप्त गरेर म पद्मसम्भवको शब्दहरूको भण्डार बनेँ । निडर भएर वहाँका उपदेशहरू बिस्तार गरेँ । भविष्यवाणी–अनुसार भविष्यका लागि मैले तिनीहरूको संरक्षण गरेँ । म सम्पूर्ण बुद्धभैँ भएर तीन कालका तथागतहरूको ऋद्धि कार्य पूरा गरेँ । अहिले मैले सम्पूर्ण सिद्धि प्राप्त गरेकी छु । म सांसारिक घटनाक्रमलाई नियन्त्रण गर्न सक्छु । म द्रूत गतिमा हिँड्न सक्छु । मैले हेरेरमात्रै पनि र औषधी दिएर रोगीहरूको रोगको उपचार गर्न सक्छु । म शरीरको रूप परिवर्तन गर्न सक्छु । आकाश र धर्ती जहाँ पनि यात्रा गर्न सक्छु । मसँग ध्यानका तीन वटा आश्चर्यहरू छन् । मैले सम्पूर्ण खुलापनको गहनता सात्क्षात्कार गरेँ । बोधिचित्तयुक्त मनको शून्यतामा एकाकार भएँ । करुणा सूर्यभन्दा चहकिलो छ । आशिर्वाद कालो बादलभन्दा पनि घनीभूत छ । भविष्यमा भक्ति र विश्वासले प्राथना गर्ने र याचना गर्नेले सारयुक्त महान् साङ्केतिक उपदेश पाउनेछ । अनिष्ट स्थानहरूमा पनि म मार्गदर्शक हुनेछु । म प्रतिज्ञाबाट पछि हट्नेछैन ।" (लामाः २००३ः ८६)

तिब्बतमा बोन धर्मको धेरै प्रभाव थियो । राजाले

विद्वान् र सिद्धहरूबीच शास्त्रार्थ र सिद्धहरूबीच ऋद्धि प्रदर्शन गर्न लगाएर बौद्ध धर्मालम्बीहरूको जित भएपछि देशमा बौद्ध धर्म राज्यको धर्म भयो । यस क्रममा पद्मसम्भवलगायत अन्य गुरुहरू, येशे छोग्याल र अन्य पच्चीस साधकहरूले कुशलताका साथ बोनहरूसँग सामना गरेका थिए । येशे छोग्याल दोस्रो पल्ट नेपाल आउँदा सम्पो भन्ने ठाउँमा सात जना डाकाहरूले उनलाई लुटेर बलात्कार गरेका थिए । तिनीहरूलाई छोग्यालले करुणा गरी धर्ममा लगाइन् र चेला बनाइन् उनीहरूलाई पनि लिएर नेपाल आएकी थिइन् । पहिलेका उनका संरक्षकहरू र जिलाजिन्पा नाम गरेका नेपालका राजाले सहयोग गरेको कुरा बताइएको छ ।

भदन नरनागिनीका चौध वर्षीय मानव रूपकी डाकिनी कन्या उनकी शिष्य बनिन् । ती कन्या डाकिनीको निर्वाण कायको रूपमा तान्त्रिक परिवारमा जन्मिएकीले येशे छोग्यालले उनको नाम कलासिद्धि राखिदिइन् । त्यति बेला ती कन्याको उमेर १४ वर्षको थियो । त्यसपछि उनीहरू माङ्ग्युल क्षेत्रतर्फ लागे । त्यहाँ अन्य चेला चलीहरूको साथमा कालासिद्धिलाई एक वर्षसम्म ध्यान अभ्यास गराएपछि कालासिद्धिले सिद्धि प्राप्त गरिन् । त्यहाँ दुई सयजति स्थानीय मानिसहरू जम्मा भएका थिए । उनीहरूलाई पनि छोग्यालले मार्ग दर्शन गरिन् । त्यसपछि तिब्बत राज्यबाट छोग्याललाई निमन्त्रणा आयो । उनी त्यहाँ आफ्नो प्रतिनिधि राखेर गइन् । उनको भव्य स्वागत भयो ।

त्यस समयमा शान्तरक्षितको भर्खरै परिनिर्वाण भएर स्तुप बनाइएको थियो । छोग्यालले उनको गुण स्मरण गर्दै बडो भावविह्वल भई सुन चढाएर प्रार्थना गरिन् । शान्तरक्षितले आशिर्वाद दिँदै उपदेश र निर्देशन दिए । त्यसपछि छोग्यालले आफ्ना विभिन्न चेलाहरूलाई विद्याका विभिन्न कलामा निपुण हुने आर्शिवाद दिइन् जसको फलस्वरूप उनीहरूले बौद्ध धर्मका ग्रन्थहरू तयार पार्न छोग्याललाई सघाए । ती उपदेशहरू पछिका मानिसहरूको र बुद्ध धर्मको हितार्थ छोग्यालले निधिका रूपमा लुकाएर राखिन् । जसको उल्लेख पद्मसम्भवको जीवनीमा पाइन्छ ।

निधिको बारेमा राजारानी र सबैको सामु उपदेश दिएर त्यसको बारेमा भविष्यवाणी गरेर पद्मसम्भव बाँदर वर्षको दशौँ महिनाको दशौँ दिनमा सूर्यको किरणमाथि चढेर दक्षिण-पश्चिम क्षेत्र प्रस्थान गरे । छोग्याल प्राणीहरूको हित गर्दै बसिन् । सूर्यकै किरणमा चढेर छोग्याल पनि गुरुको साथ दिन नेपालको सीमा क्षेत्र छाहोरोङसम्म आइन् । त्यहाँ एउटा गुफामा ७३ दिनसम्म पद्मसम्भवले छोग्याललाई उपदेश दिए र छोग्यालले गर्नुपर्ने सबै कुराहरू बताएर उनको बारेमा भविष्यवाणी पनि गर्दै भने, “तिमीले भविष्यका बौद्ध धर्मालम्वीका लागि निधिहरू राख्नेछौ । तिमी यस धर्तीमा मानवदेह धारण गरेर करीब २ सय वर्ष बस्नेछौ । लोकहित गर्ने छौ ।” आदि भविष्यवाणी गरेपछि तिमीले मलाई ज्ञानको सूक्ष्मलोक डाकिनी क्षेत्र ङायाव खान्ड्रोलिङमा भेट्नेछौ, जहाँ हामी छुट्ट्याउन नसकिने गरी मिलन भएर अरूको हित र कल्याणका लागि विशुद्ध अन्तरिक्षझैँ भई कार्य गर्नेछौ । त्यसपछि पद्मसम्भव जाने तयारी गर्न लागेपछि छोग्यालले रुँदै दण्डवत् गर्दै नजान अनुरोध गरिन्, बिलौना गरिन्, प्रार्थना गरिन् । पद्मसम्भव बस्न नमानेपछि आशिर्वाद मागिन्, गुरुको गुणहरूको स्मरण गरिन् । गुरुले सम्झाई, बुझाई उपदेश दिएर गए ।

गुरुसँग प्रतिज्ञा गरेअनुसार छोग्यालले लोकहित गर्दै गइन् । बीचमा पद्मसम्भवलाई प्रार्थना गर्दा उनी आएर राजा र छोग्याललाई भेटेर उपदेश दिएर भविष्यवाणी गरे । छोग्याललाई अझै तिमी यस धर्तीमा ५० वर्ष बसेर लोकहित गर्नू भने । राजालाई पनि उपदेश दिएर भविष्यवाणी गरे । त्यसपछि उनी फेरि फर्केर गए । छोग्यालले गुरुको आज्ञाअनुसार जसलाई जे कुराको आवश्यकता छ, त्यही बनेर अरूको हित गरिन् । भारतकी डाकिनी सिद्धिहरूकी रानी मन्दरावा छोग्याललाई भेट्न आकाशमार्ग गरेर आइन् । दुवैले एकअर्काको सम्मान गर्दै दण्डवत गरी स्तुति गाए । आफूमा भएका र नभएका ज्ञान आदानप्रदान गरे ।

छोग्याल यस धर्तीबाट बिदा हुन खोज्दा उनका चेलाचेलीले अझै बसेर धर्म सिकाउन बिन्ती गरेपछि उनले यस्तो भनिन्, “म गुरुको आज्ञा र भविष्यवाणी अनुसार यस धर्तीमा २ सय ११ वर्ष बसिसकेँ । मैले धेरै हित गरेँ । अब मेरो कर्तव्य पूरा भइसकेको छ । त्यसैले अब सामान्य मानव लक्षण र मृत्युलाई रोक्ने कुनै उपाय छैन” भनी उपदेश दिने क्रममा उनी भन्छिन्–

“दृष्टि- विषयगत तथा वस्तुगत जस्ता अवधारणाहरूबाट मुक्त छ । ध्यान- अनुभवहरूको

प्राकृतिक निरन्तरता हो । चर्या– भ्रमहरूबाट मुक्त स्थीर केन्द्रीयता हो । फल– प्राकृतिक प्रभायुक्त सिर्जनशीलता तथा तीन कायको सिद्धि हो । मायावी संसारलाई आफूसामु फैलाऊ र त्यसलाई हाडभित्रको तरल पदार्थसम्म मिलाऊ । त्यसको सम्पूर्ण भागहरूलाई अन्वेषण गर । आफ्नो चित्तसँग त्यसभित्र प्रवेश गराऊ । यदि तिमीले बिन्दुको लक्षणहरूलाई घट्न दियौ भने त्यो बुद्धलाई मारेको भैँ हो । जेसुकै भए पनि त्यसलाई आफ्नै शक्तिभित्र ल्याऊ । परमानन्दमा लिन भएर त्यसको सारतत्त्व पत्ता लगाऊ । अन्यथा गोप्य उपदेशहरू अर्थहीन हुनेछन् ।" यो उपदेश नेपाली चेली कलासिद्धिलाई केन्द्रित गरिएको थियो ।

येशे छोग्यालको परिनिर्वाण हुने समय भएपछि उनका चेलाचेलीले धेरै बिलौना गर्छन्, रुन्छन् र हामीहरूसँगै बसेर तिब्बतलाई सहायता गर्न अनुरोध गरेपछि येशे छोग्यालले यस्तो भन्छिन्, "तिमीहरूले दुःखी हुनुपर्ने कारण छैन । मेरा प्रभु उर्गेन (पद्मसम्भव) ले यस जीवनमा मैले दुई सय वर्षसम्म प्राणीहरूको कल्याण गर्ने छु भनी भविष्यवाणी गर्नुभएको थियो । हाल त्यो भन्दा पनि बढी समय गुज्रिसकेको छ । मैले तिब्बतलाई धेरै लामो समयसम्म सेवा गरेकी छु ।

तेह्र वर्षकी हुँदा म तिब्बतकी रानी बनैँ । सोह्र वर्षकी हुँदा गुरुको करुणाले मलाई स्वीकार गरियो । बीस वर्षकी हुँदा मैले पूर्ण रूपको आगम प्राप्त गरेर अनुशासनको साधना गरेँ । तीस वर्षकी हुँदा साक्षात्कार तथा सिद्धि प्राप्त गरेर अरूको कल्याणका लागि कार्य गरेँ । चालीस वर्षकी हुँदा मैले गुरुको बोधिज्ञान प्राप्त गरी मनको ध्यान गरेँ । पचास वर्षकी हुँदा मैले दैत्यहरूलाई नाश गरेँ । बुद्धधर्मको उपदेश तथा शिक्षाको रक्षा गरेँ । साठी वर्षकी हुँदा मैले पुस्तकहरू बिस्तारपूर्वक फैलाएर समुदाय विकास गरेँ । सत्तरी वर्षकी हुँदा मैले छोन्यी (धर्मता) को विकास गरेँ । असी वर्षकी हुँदा गुरु दक्षिण–पश्चिमतर्फ प्रस्थान गर्नुभयो । नब्बे वर्षकी हुँदा मैले छोन्यी डोन्सुम (प्रत्यक्ष धर्मता) साक्षात्कार गरेँ । एक सय वर्षकी हुँदा रिग्पा छे विकास गरेँ ।

एक सय बीस वर्षकी हुँदा म राजधर्म गुरु बनैँ । एक सय तीस वर्षकी हुँदा सम्पूर्ण तिब्बतभरि यात्रा गरेँ । एक सय पचास वर्षकी हुँदा मैले निधिहरू लुकाएर अरूको हित गर्ने काम गरेँ । म एक सय साठी वर्षकी हुँदा राजा मुठी छेपोको मृत्यु भयो । एक सय सत्तरी वर्षकी हुँदा मैले बचेका शिष्यहरूको उद्धार गरेँ । म एक सय असी वर्षकी हुँदा लोडाकमा छाया रूपहरू प्रक्षेपण गरेँ । एक सय नब्बे वर्षकी हुँदा मैले एकमात्र दिदी सिद्धहरूकी रानी मन्दरवालाई भेटेँ । सर्वोच्च उपदेशहरू पाएर दीर्घायुको सिद्धि प्राप्त गरेँ । मेरा पुनर्जन्म र मृत्युका लक्षणहरू एकैसाथ हराए ।

अहिले दुई सय एघार वर्ष बितिसकेको छ । निश्चय नै यत्तिका समय तिब्बतका लागि यथेष्ठ छैन र ? के अरू कसैले यस्तो दुःखकष्ट भोगेको अनुभव गरेको छ र ? के सबै मानव र देवहरू मसँग कृतज्ञ छैनन् र ?" भन्दै आफ्ना चेला र चेलीहरूलाई चिन्ता नलिन र एकाग्र भई ध्यान गरेर मोक्ष प्राप्त गर्न साथै गाह्रो अप्ठ्यारो पर्दा आफ्नो र पद्मसम्भवको प्रार्थना गरेको खण्डमा आफूहरू तुरुन्त सहायता गर्न आउने वाचा गर्दै डाकिनी क्षेत्र पद्मसम्भव भएको ठाउँमा प्रस्थान गर्छिन् । त्यस बेला विभिन्न अद्भूत दृश्यहरू देखा परेको बयान गरिएको छ ।

उसरी दुई सय एघार वर्षसम्म येशे छोग्याल बाँचेको कुरा यहाँ बयान गरिएता पनि पछिका अन्य सिद्ध गुरुहरूका जीवनी र इतिहासमा यशे छोग्यालको कतै नाम उल्लेख नभएकाले अनुसन्धाता र शोधार्थीहरूका लागि एउटा खोजको विषय बन्ने देखिन्छ । यो भनाइलाई अर्को तर्फबाट विश्लेषण गर्ने हो भने तिब्बतमा रात र दिनलाई छुट्टाछुट्टै गणना गर्ने गरेको पाइन्छ । यसरी गणना गर्ने हो भने उनको उमेर जम्मा १०५ वर्ष भएको अनुमान गर्न सकिन्छ, जुनचाहिँ उचित देखिन्छ । यो पनि अर्को अनुसन्धानको विषय बन्न सक्ने देखिन्छ ।



**सन्दर्भ सामग्री :–**


ओर्गेन लिङ्पा, पेमा काथाङ, सिठोन मिरिग पेटुन खाङ, १९९३, चीन

ताग्स्याम् दोर्जे : खाण्डो येशे छोग्याल घी नामथार शुग्सो, सिठोन मिरिग पेटुन खाङ, चीन

लामा, मुकेश (अनु.), डाकिनी येसे छोग्याल (जीवनी), २००३, सोनाम ग्याल्बो लामा, काठमाडौँ नेपाल

लामा मुकेश (अनु) गुरु पद्मसम्भव (जीवनी), मुकेश लामा, २००२, काठमाडौँ नेपाल ।

The Padmakara Translation Group, Lady of Padmasambhava, 2002, Boston and London.

# चार मुक्तक

✍ अरुणकुमार भुजेल



१) यो जिन्दगी हुनु र नहुनुको भएन सार नभन
दुःख अनि पीडाहरूमात्रै छ भरमार नभन
दूबो चट्टानमा, कमल हिलोमा फुल्छ बुझ यति
हुर्किन अनि फुल्न नपाई भएन साकार नभन ।

■■

२) झिँगालाई सधैँ घाउमै डेरा जमाउन मन पर्छ
रूखमा बसेर गिद्ध भुइँको सिनो नै ताक्ने गर्छ
कर्म आफ्नै, धर्म-मर्म र सोचहरू आ-आफ्नै
परिश्रमी मौरी सधैँभरि रस बटुल्नै अघि सर्छ ।

■■

३) कुर्कुच्चाले ठोक्दै खेतका ढेलाहरूसँग खेल्छु
फरुवाको बिँडले उठाएको ठेलाहरूसँग खेल्छु
भुइँमान्छे हुँ हजुर म ! कर्म नै मेरो धर्म
जड अनि निष्क्रिय नबनी बेलाहरूसँग खेल्छु ।

■■

४) काँधमा बोकेको कुकुरले शिकार कहिल्यै मार्दैन
जालहारीले एकै पटकमा जालभरि माछा पार्दैन
अभ्यास नै हो सर्वोपरि सबैलाई पारङ्गत बनाउने
गफैमात्र हाँक्न खोज्नेले सिन्को सम्म पर सार्दैन ।

■■

*गोरुबथान, कालेबुङ, भारत*



# मेरो गाउँ

✍ तृष्णा श्रेष्ठ



स्वर्गझैँ प्यारो छ
मेरो सुन्दर गाउँ
जात्रा, पर्व, मेला लाग्ने
एक ऐतिहासिक ठाउँ ।

जातजाति अनेकौँ छन्
अनेकौँ छन् भाषा
भेदभाव गर्दैनन् है
सबैलाई ठान्छन् आफ्ना ।

शिखरचुली, बूढाबूढी र जलजले
त्रिशूल डाँडा पर्यटकको राज
सुन्दर शैल त्रिपुरासुन्दरी
माईको छ आशिष् ।

श्रम, सीप र सिर्जनाले
हाम्रो गाउँ भर्छौँ
जन्मभूमि, कर्मभूमि
उच्च गौरव गर्छौँ ।

■■

*कक्षा - ९*
*उत्तरबाहिनी बोर्डिङ स्कूल*

# नेपाली मुक्तकको विकासमा उदात्त सिद्धान्तको सिञ्चन

✍ बाबुराम पोखरेल



**विषय–प्रवेश :**

अति कष्टकर उकालो छिचोलेर फुत्त भन्ज्याङमा निस्कँदा "आहा ! कति राम्रो प्राकृतिक दृश्य देखियो" भन्दै घाँटीमा झुण्ड्याइएको क्यामेरा झिकेर चट्ट फोटो खिचेझैँ मन छुने दृश्य, घटना, परिवेश, विचारबाट एउटा मन छुने सुन्दर एक पाना फोटोजस्तै रचना जन्मन्छ, त्यो नै मुक्तक हो । मानौँ, एउटा दृश्यले मन तान्छ क्यामेरा बोकेको मान्छेलाई, त्यसै गरी एउटा घटना, विचार वा भावनाले मन तान्छ सर्जकलाई र तत्काल सुन्दर सङ्क्षिप्त रचना निस्कन्छ चोटिलो मुक्तक बनेर ।

मुक्तक संस्कृत साहित्यबाट सुरु भएको कविताको लघुत्तम रूप हो । हृदयको भावलाई प्रतिविम्बित गर्ने प्रभावकारी, निरपेक्ष, सङ्क्षिप्त, स्वतन्त्र र मुक्त पद्यात्मक उपविधा मुक्तक हो । एक श्लोकमा रहने चमत्कारले युक्त पूर्ण कवितालाई अग्नि पुराणले मुक्तक मानेको छ । चतुष्पदीय, तुकबन्दीयुक्त र गहन भावमय चोटिलो रचना मुक्तक भएकोले यसलाई 'बिन्दुमा सिन्धु अटाउने' वा 'गागरमा सागर अटाउने' सिर्जनाको रूपमा पनि लिने गरिन्छ ।

**मुक्तक परिचय :**

विम्बात्मक, प्रतीकात्मक, शब्दार्थसौन्दर्ययुक्त तथा भावगाम्भीर्यता मुक्तकका प्राण हुन् । अन्त्यानुप्रास वा तुकबन्दी मुक्तकको संरचनागत पूर्णताको लागि अपरिहार्य छ भने मुक्तकभित्र जीवन भर्न स्रष्टाको कथनगत सुन्दर विम्बात्मकताको आवश्यकता पर्दछ । व्यङ्ग्यदृष्टान्त मुक्तकमा आवश्यक मानिन्छ । चोटिलो प्रहार बिजुलीको झिलिक्क वा एक्कसी गालामा दिएको चड्कन नै आनन्दानुभूतिको कडि बन्छ मुक्तकमा । हाल यसको चतुष्पदी संरचनामा प्रभावोत्पादक अर्थयुक्त शाब्दिक तुकबन्दी वा अनुप्रासबद्धताको प्रयोग स्थापित बनेको छ । समग्रतामा मानवीय मनमा एउटा विशिष्ट भावको तरङ्ग रोमाञ्चक ढङ्गले उठाउने तागत हुनु वा नवप्रभावोत्पादक सामर्थ्य नै आजका मुक्तकको विशिष्ट पहिचान हो ।

मुक्तक समाजबाट नै जन्मन्छ । समाजमा जे छ त्यही यसका विषयवस्तु हुन् । त्यसैले मुक्तकमा विषयवस्तुगत विविधता नै देखापर्दछ । रसमा विविधता हुनु यसको मिठास हो । भनिन्छ जहाँ नेपाली त्यहाँ मुक्तक । नेपाली मन र सामाजिकपनसँग मुक्तक जोडिएको छ ।

मुक्तक कविताको उपविधा हो । यो चतुष्पदीय संरचनामा पूर्ण भाव बोकेको सिङ्गो रचना हो । चार हरफमध्ये पहिलो, दोस्रो र चौथो पाउमा अन्त्यानुप्राशयुक्त शब्दसंरचनामा आबद्ध र तेस्रो पाउ स्वतन्त्र रहनु यसको संरचनागत विशेषता हो । चार पाउले एउटा मात्र सिङ्गो भाव अभिव्यक्त गरेर मुक्तकको रचना हुन्छ । मुक्तकका चार पाउमा एकले अर्कोलाई सिलसिलाबद्ध रूपमा एउटा मात्र विचारलाई परिपुष्ट पार्दै महत्वपूर्ण अभिव्यक्ति व्यक्त गर्दछ । जसरी एउटा फोटोग्राफरले कुनै एउटा दृश्य देख्दछ, क्यामेरा झिक्दछ, फोकस मिलाउँछ र बटम दबाउँछ अनि सुन्दर फोटोमा रमाउँछ, त्यसैगरी मुक्तकका चार हरफले मौका छोपेर महत्वपूर्ण विचार पोख्दछ अथवा जिज्ञासाको प्रहारयुक्त समाधान दिन्छ र पाठक वा स्रोता आल्हादित हुन्छन् ।

गीत गेय विधा हो र श्रबण यसको आनन्दानुभूतिको तरिका हो । निबन्ध पाठ्य विधा हो । पठन यसको ग्रहण तरिका हो । यसैगरी मुक्तक खास रूपमा पाठ्य तथा बाच्य विधा हो । बाचनले

यसलाई जिवन्त बनाउँछ । वाचनमा पनि यसको आफ्नै तरिका छ जसले पाठक वा स्रोताको मन तान्न सफल भएको छ । त्यसकारण मुक्तक एउटा शक्तिशाली तरङ्ग हो, भावनाको मितव्ययी अभिव्यक्ति हो । अनुभूतिको एक सानो झिल्को भएर पनि युगौँसम्म दरिलो प्रभाव छोड्नसक्ने शक्तिशाली झड्का यसले प्रदान गर्दछ । यो अभिव्यक्तिको एउटा संगठित स्वरूप भएको हुँदा शक्तिशाली बिम्व्योजनामा बुनिएको सानो तर भावनाको खँदिलो ठोस रूप हो । मुक्तकका चारै हरफमा खाँदिएको गहन भावमा एउटा सिङ्गै काव्य अटाउन सक्छ ।

### उदात्त सिद्धान्त र मुक्तक

ईशाको पहिलो वा तेस्रो शताब्दीतिरका पाश्चात्य समालोचक लन्जाइनस्ले उदात्त कृतिको व्याख्या र विश्लेषण गरेका छन् । उनकाअनुसार उदात्त कृतिका लागि पाँच तत्वहरूको आवश्यकता पर्दछ । १. प्रबल चिन्तन, २. प्रेरणा वा आवेग, ३. समुचित अलङ्कार योजना, ४. समुचित शब्द चयन र ५. गरिमामय रचना विधान वा संरचना । प्रबल चिन्तन र प्रेरणा वा आवेग यी दुई तत्वहरू नैसर्गिक वा प्रतिभाजन्य हुन्छन् भने अलङ्कार, समुचित शब्द चयन र संरचना कलात्मक साधनाबाट निसृत हुने गर्दछन् (त्रिपाठी, २०४२) । प्रबल चिन्तन र आवेग यी दुई तत्वहरू पूर्वीय साहित्य समालोचना सिद्धान्तका प्रतिभासँग मिल्ने छन् । यसले गर्दा स्वच्छन्दतावादसँग यो विश्लेषण नजिक छ । स्वच्छन्दतावादले प्रतिभालाई सिर्जनाको अपरिहार्य तत्व मान्दछ । परिष्कारको आंशिक वा न्यून उपस्थिति स्वच्छन्दतावाद रहे तापनि मूलतः यो अभ्यासिक परिष्कारको विपक्षमा नै छ । प्राचीनतातर्फ वा ग्रामिण परिवेशप्रति मोह जागृत हुने, प्रकृतिप्रदत्त सुन्दरतामा मोहित हुने, कुनैपनि प्रकारका बन्धनहरूबाट प्रायः उन्मुक्ति स्वच्छन्दतावादका अवयवहरू मान्न सकिन्छ । उदात्तताको सिद्धान्तले स्वच्छन्दतावाद, परिष्कारवाद, प्रगतिवाद, प्रतीकवाद वा यस्तै कुनै वाद वा सिद्धान्तसँग प्रत्यक्ष सम्बन्ध राख्दैन । तर कुनै अवयवसँगको सान्निध्यता वा आन्तरिक मेल भने देख्न सकिन्छ ।

प्रबल चिन्तन क्षमताविना कृति दुर्घटनाग्रस्त हुन्छ । समग्रमा उदात्तीकरण कुनै पनि सफल कृतिका लागि आवश्यक छ । पूर्वीय संस्कृत साहित्यमा तुलना गर्दा महाभारत उपजिव्य उदात्त कृति हो । कवि (साहित्यकार) मा सहज प्रतिभा (प्रकृति प्रदत्त) र अध्ययन (आर्जित कला) दुवैको सम्मिश्रण र संयोजन उदात्त कृतिका लागि आवश्यक छ । यसरी हेर्दा भाव र शिल्पको संश्लिष्ट नतिजा उदात्त कृति हो । 'उच्च अभिव्यक्ति आत्माकै उच्चताको प्रतिध्वनी हो' भन्ने विचार राख्दै लन्जाइनस्ले प्रेरणदायी भएर आवेगको सिर्जना गर्नसक्ने भव्य चिन्तनलाई उदात्त सिद्धान्तको मेरुदण्ड मान्दछन् ।

उदात्त सिद्धान्तको दोस्रो महत्वपूर्ण अंश अलङ्कार विवेचना हो । लन्जाइनस्का अनुसार कुनै पनि कृतिमा अलङ्कारका जरा आवेग वा प्रेरणामा गाडिएका हुन्छन् । यो बाहिरी आभूषण होइन । अलङ्कार र उदात्तताको अन्तरसम्बन्ध आन्तरिक आंगिक र अपरिहार्य छ र यो मानव प्रकृतिसँग नै सम्बन्धित छ । अलङ्कार विधानमा संयमता आवश्यक छ । उपरिमाथि थुपरी वा खापका खाप गहना अशोभनीय हुन्छ । त्यसैले सहज रूपमा संयमतापूर्वक स्वतः सिर्जित अलङ्कारले उदात्तताको उचाइ थप्छ ।

बासुदेव त्रिपाठीका अनुसार सुन्दर शब्दहरू वास्तवमा विचारका ज्योतिहरू हुन् । यस भनाइले उदात्ततामा पद-सङ्घटना वा शब्दचयनको महत्व प्रष्टिन्छ । पूर्वीय साहित्य समालोचना सिद्धान्तको रीतिवादसँग यसको भगिनी सम्बन्ध रहेको मान्न सकिन्छ । 'अनुकूल पदावलीको सामञ्जस्यपूर्ण प्रयोग' उदात्तता र पूर्वीय रीतिवाद दुवैको सान्निध्यपूर्ण व्याख्या हो । कमसल वा तुच्छ विषयवस्तुका लागि भव्य पदावली अनुकूल होइन । बौद्धिकताविहीन व्यक्तिको महँगा पहिरन र गरगहनाले उसलालाई शोभा दिँदैन बरु उल्टो दर्शकको दृष्टिलाई लज्जाबोध गराउँछ ।

रचना विधान र शब्दचयनका बीच राम्रो मेल वा भनौँ अन्विति आवश्यक छ । कुनै रचनाले पाठकको आत्मालाई वक्तव्यले छुनु पर्दछ । वक्ताको उदात्तता स्रोतामा संप्रेषित हुन संरचनाले भूमिका

खेल्दछ । साहित्यमा कल्पना, आवेग र शब्दसौन्दर्यको योगदान निकै उत्कृष्ट हुन्छ । यी तत्वहरूले साहित्यको आन्तरिक तथा बाह्य सम्पूर्ण शरीरलाई स्वस्थ राख्दछन् । यही नै उदात्तताको परिचय हो । साहित्यिक कृतिमा अतिसङ्क्षिप्तता वा अतिव्याख्येय संरचना दुवै अनुपयुक्त मानिन्छ । अति सङ्क्षिप्तताले भाव उजागर क्षमता राख्दैन भने अति व्याख्येय विस्तारले भावको तिव्रता न्यून गर्छ । अति विस्तारित व्याख्यामा आवेगलाई दोहोरोतेहेरो आवृत्तिमा प्रस्तुतिको फैलावट उदात्त साहित्यमा राम्रो नहुनु स्वभाविक हो । यो उदात्त सिद्धान्त समग्र साहित्य सिर्जनाको लागि महत्वपूर्ण मानिन्छ । यसमा पनि मुक्तक रचनामा अझ प्रभावकारी छ। सङ्क्षिप्ततामा गहन भावलाई उजागर गर्न शब्दचयनको भूमिका तिब्र हुने गर्दछ । त्यसैले पनि उदात्तताको सिद्धान्त मुक्तक रचनामा बढी प्रभावकारी ठहर्छ ।

**उपसंहार**

कुनै एक पक्षमा अनुदार साहित्यिक प्रवक्ता सधैँ आलोचित हुन्छ । प्राचीन युगिन चेतनाका चिन्तक प्रायः नयाँ युग चेतनामा अनुदार देखिन्छन् । प्राचीनता अनुसरणको अर्थ अनुदार पक्कै होइन । परम्पराका पृष्ठपोषक र अनुदार पर्याय हुँदै होइन । उदारताले पनि परम्परा र प्राचीनताको पृष्ठपोषण गर्नसक्छ । अहिले नेपाली साहित्यमा गजलको सैद्धान्तिक पक्षको विश्लेषणमा यही प्राचीन युगिन चेतना र नविन चेतना बीच अनुदार चिन्तन र उदार चिन्तनको विवाद देखिएको छ । स्वस्थ छलफल र विवेचनाले साहित्यलाई उचाइतर्फ लैजान्छ तर अस्वस्थ विवाद हानिकारक र विकासको वाधक हुनसक्छ । त्यसकारण अनुदार अतिवादलाई साहित्यमा प्रश्रय दिनु उचित मानिदैन । पूर्वीय साहित्य समालोचना सिद्धान्तको ‘कान्तासम्मित उपदेशका निम्ति काव्य’ भनिएको कुरालाई पाश्चात्य समालोचना जगतमा होरेस पाठकलाई एकैसाथ आनन्द र शिक्षा प्रदान गर्ने साहित्यको पक्षमा छन् । साहित्यमा ‘औचित्यको सिद्धान्त’ हामी अपरिहार्य मान्छौँ । यो सिद्धान्त मुक्तकको उदात्तीकरणका लागि बढी नै उपयोगी छ ।

सन्दर्भ सामग्री :


उपाध्याय, केशवप्रसाद (२००९), पूवीय साहित्य सिद्धान्त, ललितपुर : साझा प्रकाशन ।

जोशी, डा. कुमारबहादुर (२०५४), पाश्चात्य साहित्यका प्रमुखवाद, ललितपुर : साझा प्रकाशन ।

त्रिपाठी, बासुदेव (२०४२), पाश्चात्य समालोचनाको सैद्धान्तिक परम्परा, ललितपुर : साझा प्रकाशन ।

पोखरेल, बाबुराम (२०७५), शब्दचित्र (भूमिका खण्ड), काठमाडौँ : नेपाल मुक्तक प्रतिष्ठान ।

पौडेल, रमेश (सम्पा.) (२०७६), नेपाली मुक्तकमा नारी हस्ताक्षर (भूमिका खण्ड), काठमाडौँ : गैर आवासीय नेपाली सङ्घ ।

......., ....... (२०७५), नवप्रज्ञापन, मुक्तक विशेषङ्क, पूर्णाङ्क ८०, काठमाडौँ ।

....., ...... (२०७५), मुक्तक माधुर्य भाग १ (भूमिका खण्ड), काठमाडौँ : नेपाल मुक्तक प्रतिष्ठान ।


■■ *विराटनगर*

**कविता**

# टुक्का कविताहरू

## ✍ प्रेम थापा ‘मन’



१. कागलाई पाकेछ अरे बेल
उतै अचम्मको चलेछ खेल ।

२. के गर्छौ आफैँ मपाइँत्वको भ्रमजाल नै छरेर
के हुन्छ घात गरेपछि हातजोडी जप गरेर ?

३. उस्तै छन् गरीबको लागि प्रभावी भेट
उस्तै छन् चर्केका हातखुट्टा, भोको पेट ।

४. जबसम्म बगलीमा छुरा, बाहिर हुन्छ रामराम
तबसम्म देशलाई अझ पछि धकेल्ने हुन्छ काम ।

५. सद्भाव छ मूल जड के खोतल्नु
जोश र जाँगर छ म किन गल्नु ?

■■

*बागलुङ*



# विवश आँसु

✍ विष्णु भण्डारी आचार्य

"पख न भाइ ! हाम्री पनि आमाले अरबबाट पैसा ल्याएपछि त्यसरी नै स्कूल.... ।"

हिउँदको कठ्याङ्ग्रिँदो जाडो, माथिबाट फुसुसु तुसारो झरिरहेकै छ सेतै । तुसारोले आवतजावत गर्ने मानिसहरूको सङ्ख्या घट्दो छ । बाहिर निस्कन सकिन्न, कसरी हिँडडुल गर्ने ! कसरी काम गर्ने ? पैसा छ त न्याना, बाक्ला लुगा किनेर लगा, तातो खा; छैन त चिसैले मर्, स्थिति यस्तै छ ।

यसै बीचमा दुई जना बालक सडकमा यताउता गर्दै छन् । धेरैजसो तिनीहरू बसपार्कको छेउछाउमा देखापर्छन् । तिनीहरूको उमेर अन्दाजमा त्यस्तै एउटाको दश-बाह्र हुँदो हो । अर्कोको आठ-नौ वर्ष हो कि जस्तो लाग्ने ।

दुई वर्षअघि देखिमात्र यहाँ देखा पर्न थालेका तिनीहरू खाली खुट्टाले हिँड्दै छन् सडकमा । माथिबाट तपतप झरेको शितले कपालमा सेतै लिखा टल्केझैँ छ । दुवैको ओठका रङ बदलिएर हरिया देखिन्छन् । ओठ हल्लिएको देख्दा कामेका हुन् कि ! सर्ट मैलो र च्यातिएको छ शायद जाडो छेल्न सकेन नै होला । काठमाडौँको जाडो पचाइसकेकै छैनन्जस्तो छ ।

तिनीहरूको अवस्थाले संरक्षकको अभाव खड्काइरहेको देखिन्छ ।

घरी यता, घरी उता गर्दा छन्, काम खोजेका होलान् । काम भेटेनन् भने हुन सक्छ तिनीहरूको पेट पनि चिसै ।

कालेले यताउति, पल्याकपुलुक हेर्दै भन्यो, "भाइ ऊ त्याँ बसबाट उत्रेर हिँड्दै छ एउटा मान्छे । त्यसको ठूलो झोला छ । तेल्ले पक्कै पनि त्यो भारी झोला कसैलाई बोकाउँछ ।"

दुवैको ध्यान त्यता तानियो, "जौँ ।"

माछो फुत्केर गएको समात्न दोडेझैँ दौडे ! काले अघि दगुर्‍यो । भाइ उसको पछिपछि ।

यात्रुनजिकै पुगे, पुलुक्क हेरे काले र रामेले झोलावाललाई, आशाको नजरले ।

"ए केटा हो तिमेरू मेरो झोला बोक्छौँ ?" झोलावालले रूखो बोलीमा सोध्यो ।

"बोक्छौँ, काँ लानुपर्ने हो ?" खुशी हुँदै भन्यो कालेले हतारहतार ।

"बोकेर हिँड न अलि पर हो ! म देखाइहाल्छु नि !"

निधारका नशा तन्काउँदै मरिकन उचाल्यो कालेले, अर्को झोला रामेतिर अघि बढायो । "कति गह्रौँ र'छ, के होला यसभित्र ? कम्तिमा पनि बीस किलो त होला !" कालेले हिँड्दै भन्यो । झोलावाल नसुनेझैँ गरिरह्यो ।

कलङ्की बसपार्कबाट पश्चिमतिर मोडिए तिनीहरू । ठूलो झोला बोकेर काले अघिअघि, सानो झोला बोकेर रामे पछिपछि, साथमा झोलाको मालिक । ससाना छिँडी छिचोल्दै झण्डै दुई किलोमिटरको बाटो हिँडेपछि, "दाइ गह्रौँ भो, म त गलिसकेँ । कति छ होला अझै पुग्न हँ ?" रामेले रुन्चे अनुहार लाउँदै झोला भुईंमा राख्न खोज्यो । 'गलेँ, थाकेँ, गह्रौँ छ' को सङ्केत अनुहार कुचुक्क पार्‍यो ।

"हे.... मूला हिँड् न छिटो, एक छिन त हो नि ! ऐले पैसा दिन्छ अनि खानुपर्छ नि चिया-पाउरोटी । याँ म त बोकिरा'छु कति गह्रौँ छ र पनि ।" चिया-पाउरोटीको शब्द सुन्नेबित्तिकै रामेले मुख मिठ्यायो ।

"ए केटा हो छिटो आओ ! आइपुग्यो अब मेरो घर । मूला भाते केटाहरू र'छन् हिँड्न नसक्ने" पर पुगेर उभिँदै गरेको झोलाधनी करायो । केटाहरू स्वाँस्वाँ गर्दै पुगे ऊछेउ । उनीहरूको स्वाँस्वाँमा सास फुलेको प्रष्ट हुन्थ्यो ।

"कति टाढा र'छ नि । झन्नै आधा घण्टा लाग्यो होला अङ्कल !" कालेले स्वाँस्वाँमा नै भन्यो ।

"लाग्छ मोरा हो आधा घण्टा ! राख, यही हो मेरो घर आइपुग्यो ।" हप्काउँदो बोलीमा भन्यो त्यसले । राखे दुवैले झोला । लामो श्वास ताने, "उख्.... तेसिमा भ्याक्ने, बल्ल ल्याइपुऱ्याइयो ! शरीरका जोर्नी नै खुस्केलाझैँ भयो । कति गह्रौँ भारी !" कालेले सानो बोली निकाल्यो ।

झोला भुइँमा बिसाइसकेर कालेले पुलुक्क हेऱ्यो झोलावालाको अनुहारमा । 'अब पैसा कति दिने हो यल्ले ? पैसा दिएपछि लिएर त्यो सानो पसलमा जाने, चिया-पाउरोटी खाने, भाइ पनि खुशी हुन्छ । भाइ जाडोमा तातो चिया र पाउरोटी खान पाइने आशमा मुख मिठ्याउँदै थियो, झोलावाला मालिकले ठूलो बोलीमा भन्यो, "कति लिन्छौँ पैसा, केटा हो ?"

"बीस रुपियाँ दिनू न ! तेती टाढाबाट ल्या'को गह्रौँ भारी ।"

"ए बीस रुपियाँ पो ? मास्साले भाते हो ! लैजावो पाँच रुपियाँ दिन्छु । ला समा !" पाँचको नोट निकालेर केटाहरूतिर बढायो ।

"नाइँ ! यतिले त केही पनि आउँदैन ! कति महँगो छ किनेर खाइसक्नु छैन केही ! एक कप चियामात्रै आउँछ पाँच रुपियाँले त !"

पाँचको नोट समाएन कालेले । रामेले पनि हेरिरह्यो ऊतिर ।

"लिँदैनौ ? तेसो भा लु जाओ त तेत्तिकै !" पाँचको नोट पेन्टको गोजीमा घुसाऱ्यो झोलावालले र ढिलो नगरी एउटा ठूलो घरको गेट खोलेर भित्र पस्यो । काले गेट लाउनै नपाई भित्र पस्यो, "दिनू न अङ्कल पैसा !" रुन्चे बोलीमा अनुरोध गऱ्यो । रामेले डरमिश्रित अनुहार लायो । नाकबाट तल झर्दै गरेको सिँगानको लत्को स्वाँक्क उँभो तान्यो, च्यातिएको सर्टको बाहुलो नाकतिर लाँदै पुछ्यो । दाइलाई तान्यो आफूतिर, "जाँ दाइ ! ऐले मार्छ हाम्लाई !" डराएको सानो बोली निकाल्यो । अघि थर्काएकोले सातो उडेको थियो रामेको ।

"यो गेटभित्र किन पसिस् ! जा गइहाल् ! बाहिर जा !" कठालोमा समातेर बाहिर निकाल्न खोज्यो, काले जब्बर भइरह्यो ।

"दिनू न त छिटो ! म गइहाल्छु नि !" कालेका आँखाबाट दुईतीन ओटा आँसुका ढिका गालाको बाटोहुँदै भुइँमा खसे गुरुरुरर र भुइँमा पुगेर फुटे ।

"ए मास्साले ! किन भित्र पसिस् हँ ! जाजा ! गइहाल् !" कालेले जब्बरहुँदै हात थापिरह्यो ।

"जाँदैनस् त ? कुकुर फुकाएर लाइदिऊँ तँलाई ? धेर जब्बर हुन्छस् !"

कुकुर सुन्नासाथ काले बिजुली गतिमा गेटबाहिर निस्कियो । एकचोटि कुकुरले टोकेर घाइते बनाएको थियो, सम्झियो त्यही । आँखा मिच्दै लागे दुवै बसपार्कतिरै ।

कोहीबाट रित्तो हात गालीमात्र पाउँथे सामान बोकेवापत, कसैले जति मन लाग्छ त्यति नै दुईचार रुपियाँ दिन्थे । त्यसैमा बाँच्न उनीहरू बानी परिसकेका थिए । भोकै सुतेका रात अनगिन्ति छन् उनीहरूका ।

तिनीहरूले बासको लागि साहुको घरमा डेरा लिएका थिए । डेरा नाममात्रैको थियो, ट्वाइलेटको छेउ, भऱ्याङमुनिको सानो अँध्यारो छिँडी । खाना पकाएर खाने र सुत्ने त्यहीँ हुन्थ्यो । कोठा अति दुर्गन्धित, ट्वाइलेटको ह्वारह्वारी गन्ध कतै नगै आउँथ्यो । त्यही फोहोरको कारणले दुई दाजुभाइ बरोबर बिरामी परिरहन्थे, कोठा राम्रो खोजौँ त भाडा तिर्ने केले ?

सडकमा आवतजावत गर्नेको भारी बोकेर कहिले केही पैसा कमाउँछन्, कहिले पैसाको साटो हप्काइ, पिटाइ ।

त्यो दिन उनीहरूको पेट पनि खाली ।

सडकका बदमास केटाहरूको झुण्डले दिनभरको कमाइसमेत लुटेर लग्दिन्छन्, खान लाग्या बिस्कुट खोसखास पारिदिन्छन् कि भन्ने त्रास उत्ति थियो । त्यो दिन उनीहरूको 'आमा-आमा' पुकार्दै, सुकसुकाउनुबाहेक केही गर्ने सामर्थ्य रहँदैन थियो ।

ooo

परिवारमा आमा मैना र बाउ सन्ते, उनीहरू दुई गरी चार जनाको परिवार थियो । गरीबीले माया गरेको जीवन, दिन लागेरै भन्नुपर्‍यो– भएको जेथो सकिन बेर लागेन । ठेक्कामा लिएको साहुको जग्गा । ठेक्का तिर्न नसकेर साहुले जग्गा पनि खोसिदिए ।

आफ्नो भन्ने एउटा फुसको छानो, नाममात्रको, रातमा तारामण्डल गन्न सकिने आकाशको छानोमुनिको बासबाहेक के थियो र ! जनवनी गरेको ज्यालाले जीवन धान्नै कठिन ।

सन्तेले बिस्तारै रक्सीको लत बढाउँदै लगेको थियो, मातेर आई घरमा बूढीसँग झगडा गर्ने उसको नियमित कर्म बन्दै गयो । बूढोले आफूले जनवनीमा कमाएको जम्मै रक्सीमै खर्च गर्ने ।

आफ्नो परिवारले खाए, नखाएको पर्वाह गर्नु परको कुरा, उल्टै आफूसँग झगडा गर्ने, पिट्ने गर्न थालेपछि मैना विरक्तिनसम्म विरक्तिएकी थिई । आफू एक्लैले बनिबुतो गरी ल्याएको पैसाले कतिदिन धानोस् । लोग्नेको रातोदिनको पिटाई कति सहोस् ज्यानले । कति मानिस बाँच्नको लागि सङ्घर्ष गरिरहेका छन् ओखतमूलो पिइरहेका छन्, कतिमान्छे आफूले आफ्नै जिन्दगी नै पिइरहेका छन् । स्वास्नीले कति अनुनय नगरेकी हैन नप्युनू भनेर, लागेको भए पो !

“के तेरा बाउको खाइदेको छु र ?” हप्काइ, गाली, कुटाइपिटाइ खानु उसको लागि यही भयो निरन्तरता ।

आफन्तले पनि नसम्झाएका हैनन् । “छोड्छु, भोलिदेखि छोड्छु, अब उप्रान्त धरोधर खान्नँ ।” कसम खाको धेरैचोटि भो, उसको लागि भोलि कहिल्यै आएन । पगितो पिएर बिरामी पर्दा पटक-पटक अस्पताल नलगेको पनि हैन । डाक्टरले चेतावनी नदिएको पनि हैन, “प्युन बन्द गरेन भने सोच्नू म चाँडै मृत्युको मुखमा पस्दै छु ।” लागेन । भीरबाट लड्न लागेकालाई रामराम भन्न सकिन्छ, काँधै हाल्न नसकिँदोरहेछ । स्वास्नीका आँखा छलीछली लुकीलुकी पिएपछि के लाग्यो !

ससाना चिचिला ममता खन्याई काखमा खेलाएर हुर्काउनुपर्ने बेला, लोग्नेको यो छ हाल ।

मनभरि पीर र विरक्तिको भारी बोकिरहेको बेला डुब्न लागेकालाई त्यान्द्रोको सहायता भनेझैं आशाको एउटा सानो झिल्को मैनाको मनभित्र आएर सुटुक्क पस्यो । मनसँग संवाद गरी, जहिले पनि यही अभाव र पीडाको जिन्दगी कति जिऊँ ? पशुसरह पिटाइ कति खाऊँ ? ससाना छोराहरू छन्, छोराछोरी पाएरमात्र के गर्नु छोराछोरीले मागेको दिन-पुर्‍याउन सकिएन भने !

ऊ विकल्प खोज्न थाली ।

‘अरू छोरीमान्छेहरू पनि विदेश गएका छन्, कमाएर ल्याएका छन्, खान-लाउनको अभाव टारेका छन्’ सुनेकी थिई, देखेकी थिई । त्यही भएर उसलाई विदेश गएर धेरै कमाएर ल्याउने, सुखसँग बसेर खान पाइने रहर जागेर आयो । विदेश पठाउने एजेन्टको खोजीमा लागी । गाउँटोलमा च्याउ उम्रेजत्तिकै भेटिन्छन् विदेश पठाउने एजेन्ट ।

खर्च पनि धेरै नलाग्ने । उसले सोचेजस्तै भयो । जसोतसो ऋण खोजेर पासपोर्ट बनाई एजेन्टलाई बुझाई । “भिसा चाँडै आउँछ, तयार परिराख” भनेकाले एक जनासँग सयकडा पाँचमा ऋण लिएर रु. बीस हजार जम्मा गरी बुझाई एजेन्टलाई । एजेन्टले दिएको समयमा ढिलाई भएन । बीस दिनपछि भिसा आएको खबर आयो ।

मन भारी भयो, ससाना छोराहरूलाई लोग्नेको जिम्मा छाडेर उड्नुपर्दा । ‘आफू हिँडेपछि लोग्ने सुध्रला कि !’ झिनो आश पनि थियो उसलाई ।

रातोदिनको पियाइले कति दिन थामोस्, शरीर गलाएर क्षीण भयो । आखिर मृत्युले नै पिइछाड्यो सन्तेलाई ।

बाबुको मृत्युपछि काले र रामे साहाराविहीन बन्न पुगे । के खाने, कहाँ बस्ने ? एक दिन दुवै अरूको साथ लागि आइपुगे काठमाडौँ शहर !

बाटोमा हिँडिरहेका केटाकेटीहरूको हुलमा रामेको आँखा पुग्यो । उनीहरूको शरीरमा चिटिक्क मिलेको टाइसुट थियो, टिलिक्क टल्किने जुत्तामोजा, पछाडि राम्रो ब्याग भिरेर स्कूल जाँदै गरेका । रामेले आँखा झिमिक्क नपारी हेरिरह्यो केटाकेटीको हूलतिर । आफू पनि त्यसरी नै मिसिएर हिँडेको कल्पना गर्‍यो ।

औँल्याउँदै कालेलाई देखायो, “हेर दाइ ऊ तेता, तिनीहरू कति राम्रो लुगा लाएर, ब्याग बोकेर स्कूल गका ! हेर न कोही त हामीजत्रै नि !” कालेको मुखमा पुलुक्क टीठलाग्दो हेऱ्यो र भन्यो फेरि, “हाम्री पनि आमा भैदिएको भा ............नि दाइ !”

काले भावुक बन्यो, रामेको टाउको सुम्सुम्यायो।

आफूतिर टाँस्यो भाइलाई, “पख न भाइ, हाम्री पनि आमाले अरबबाट पैसा कमाएर ल्याउँछिन् अनि हामी पनि त्यसरी नै स्कूल ...... ।” भक्कानो फुट्लाभैँ बोली निकाल्यो ।

जहाज गुइयँ आवाज निकालेर आकाशमा उडेको देख्न हुन्थेन, “ओई भाइ, हेर ऊ आकाशमा !” उनीहरू पटक-पटक आकाशतिर आँखा लाउँथे– कतै यसैमा आउलिन् कि हाम्री आमा !

जहाज उड्दै अदृश्य हुन थाल्थ्यो, निराश हुँदै आँखा हटाउँथे फेरि आकाशबाट ।

एक दिन रामे सारो बिरामी पऱ्यो। बिरामी भाइलाई कोठैमा छाडेर काले एक्लै गयो काम खोज्न । ओखती किन्ने पैसा थिएन, भावीले दुःख लेखिदिएकै रहेछ कति हो । कुन सुरतले धेरै दिन ओछ्यान परेपछि बल्ल आफैँ उठेर अलिअलि हिँड्न सक्ने भयो ।

आमालाई सम्झेर रुनु, रोएर दिन काट्नुको विकल्पै थिएन । चार-पाँच वर्ष भैसक्यो, आमाको कुनै अत्तोपत्तो थिएन । न फोन, चिठी, न खबर कुनै ।

०००

मैनादेवीको हालत उस्तै थियो । काठमाडौँबाट जाँदा धेरै खर्च लाग्छ, त्यसैले भारतबाट जानुपर्छ भन्यो, अरू साथीहरूकै साथ मैनादेवीलाई एजेन्टले भारतको दिल्ली पुऱ्यायो। पन्ध्र दिन राखेर बल्ल त्यहाँबाट साउदी अबर उडाइयो ।

साउदी पुगेर एयरपोर्टबाट उत्रेपछि अरू साथीहरूलाई कुन ठाउँ लगियो ? थाहा भएन। मैनादेवीलाई साउदीको एयरपोर्टनेरै उतैको मानिस आयो लिन । ऊ त्यही लिन आउने मानिसको पछि लागी गई । लिन आउने मोटे मानिसको घरमा पुगी । भाषा बुझ्नु थिएन खालि हातको इशाराले काम गर्नुपर्थ्यो । बिनाबोलीको मानवझैँ बनी त्यहाँ ऊ ।

कहाँ आइयो ? के हो यो ? पूरै निर्जन ठाउँ उसको अघि खडा थियो । उसलाई त्यहाँ गर्नुपर्ने कामको जानकारी दिइयो । भाषा नबुझे पनि उसले इशाराले बुझ्नुपर्थ्यो। मैनादेवी एउटा निर्जीव मेसिनजस्तो खुरुखुरु काम सुचारु गर्न थाली ।

काम थियो- घर सफा गर्ने, लुगा धुने, ओछ्यान मिलाउने। भाँडा माझ्ने, ट्वाइलेट पुछ्ने, साना केटाकेटी हेर्ने आदिआदि ।

एक दिन ऊ बिस्तारा मिलाउँदै थिई, उसको मालिक कोठामा पस्यो, कामुक आँखाले ऊतिर नजर फाल्यो, उसको शरीरभरि आँखा डुलायो। मैनाको मुटुमा हिउँ पसेझैँ सिरिङ्ग भयो। ट्वाइलेटको बहानाले बिस्तारै कोठाबाट बाहिरिई । ट्वाइलेटबाट निस्किँदा गैसक्यो ठानेकी थिई, झसङ्ग भई । ट्वाइलेटबाहिर त्यो मोटे खम्बाझैँ ठिङ्ग उभिइरहेको पाई ।

कोठामा पसेर फेरि काममै व्यस्त हुँदै मोटेको चाला नियालिरही । मोटे कोठाभित्र पस्यो । उसको सात्तो गयो । मोटेले चुक्कुल लगायो र निर्वस्त्र पाऱ्यो मैनालाई । उसले न सकी प्रतिकार गर्न, न कराउन-चिच्याउनै । ऊ विनाआवाज, विनाचेतनाकी झैँ बन्न पुगी । त्यही दिनदेखि उसलाई, नाङ्गिने कामसमेत थप भयो । घरभरिका पुरुष र आगन्तुक पाहुनाहरूले मनलाग्दीसँग शरीर भोग्दै जान थाले मैनादेवीको ।

मैनाको बोल्ने थिएन सामर्थ्य । बिरानो ठाउँमा केही बोलिहालेमा मारिदेलान भन्ने डर ।

‘अभागी खप्पर, जहाँ गयो, त्यहीँ ठक्कर !’

रातोदिनको यातना र शोषणले गर्दा आफ्नो भाग्यलाई सराप्दै कष्टकर समय बिताउनुबाहेक अरू उपाय उसको भएन केही ।

घर, आफ्ना स-साना बालक छोराहरूलाई सम्झिएर आँखाबाट झरी ओभाउँदैन थियो । चिन्ताले न रातभर निन्द्रा पर्थ्यो । घरमा फोन गर्न परैको कुरा। घरबाट निस्केर बाहिर जान बन्देज थियो। बाहिर जानको लागि त कम्पाउन्डको गेटमा ठूलो ताल्चा मारेको हुन्थ्यो। कतिचोटी त मैनादेवीले त्यहाँबाट भाग्ने कोशिश नगरेकी हैन, सक्दिनथी ।

यातना सहन नसक्दा त्यहीँबाट फाल हानेर मर्न नखोजेकी हैन । त्यही गर्न पनि भनेजस्तो अवसर नपाउँदा सास अल्भिएकै थियो उसको ।

सुनेको सुख, देखेको दुःख मिल्दैन भन्थे, त्यही भयो । उसले सोचेकी त थिई– केही जेल दुःख गरेर कमाइन्छ, कमाएर फर्केपछि सहजसँग गुजारा चल्छ ।

'यस्तो पापी ठाउँमा नआउनुपर्थ्यो मैले, उतै दुःख गरेकी हुँदी हुँ त बालख छोराहरू आमाको न्यानो मायाबाट वञ्चित हुनुपर्दैन थियो होला । यो ज्यान बचेर जाला भन्ने आश कमै रह्यो । कुनै सुरतले बाँचेर गइएछ भने यस्ता ठाउँको नामै के लिन्थेँ मात्र हैन, मेरा दश पुस्ताले पनि यस्तो सास्ती भोग्न यहाँ आउनुनपरोस् भगवान् !' उसले भगवान् पुकार्नुसिवाय केही गर्न सकेकी थिइन ।

तलब माग्यो, मालिकले उल्टै सास्ती थथ्यो बदलामा । मैनादेवी दुःखका आँसु प्युँदै बँधुवा पशुझैँ नारकीय जीवन बिताउन विवश थिई । आफ्ना मसिना दूधे बालक छोराहरू छाडेर आएकोमा पछुताउँदै आँखाबाट नदी बग्थे दिनरात । तिनै विवश आँसुमात्रै उसका साथी बने । मैनादेवी गएको पनि महिना दिन, वर्ष दिनहुँदै चार वर्ष पुगेर पाँच लागेको थियो । त्यतिका दिनसम्म उसले कुनै दिन न आफ्ना छोराहरूको खबर बुझ्न र पैसा पठाउन नै सकी । आफ्नो लोग्ने मरेको समेत थाहा पाइन ।

रातोदिनको शोषण र यातनाले गर्दा मैनादेवी बिरामी पर्न थाली । जति बिरामी भए पनि निकृष्ट पापीहरूले उसको शरीर लुछ्न छाड्दैनथे । उसको जीउ सुकेर हाड र छालामात्र बाँकी रह्यो । बोल्न नसक्ने भइसकेकी थिई ऊ । त्यस्तै अवस्थामा मालिकले उसलाई एयरपोर्टमा ल्याएर छाडिदिएछ ।

कठै हाम्रै देशकी चेली हुन् ।

उसको नाजुक अवस्थामा फेला पारेर साउदी पुगेका श्रमिक नेपाली दाजुभाइहरू पैसा उठाएर नेपाल पठाउने तरखर गर्दै थिए ।

■■

*बेलबारी मोरङ*



# टुक्का कविताहरू

✍ मन्दिरा सेढाई



१.
एक्लै हुँदा शून्यतामा तिम्रै यादले सताउँछ
हेर्छु फोटो आँसु झर्दा त्यै मुहारले हँसाउँछ ।

२.
देखाएर मीठो सपना कसैलाई नभुलाउनू
मुखमा राम गर्दै तिमी मन अन्त नडुलाउनू ।

३.
वसन्तको बहार बल्ल यो जीवनमा छाउँदै छ
आजभोलि यो मनले प्रेमको आभास पाउँदै छ ।

४.
हाँसीहाँसी मर्न पाऊँ त्यही काखमा रमाएर
बितोस् मेरो बाँकी जीवन तिम्रै हात समाएर ।

५.
मिलन हुँदा दुई मुटुको कति मीठो नाता
घामपानी ओत दिने रहेछ एउटै छाता ।

■■

*मलेखु, धादिङ*



# दार्जीलिङ र नेपालबीचको साहित्य

सचेन राई दुमी

'कल्पतरू' १०० अङ्कका लागि केवल तीन पेजको लेख अनि एक हप्ताभित्रै 'दार्जीलिङ र नेपालबीचको साहित्य' बारे लेखिपठाउनुपर्ने सुझाव/आदेश/आग्रह प्राप्त भयो। लेखककहरू प्रायशः खालि हात बाँधेर कहिल्यै बसिरहेका हुँदैनन् । लेख्नुपर्ने कतिपय विषयहरू, लेखहरू लेखकको टेबलमा समय/पालो पर्खेर बसिरहेका हुन्छन् । लेख माग्नसाथ तुरुन्तै लेखिहाल्न धेरैलाई सम्भव हुँदैन। सबै लेखकहरूलाई यो थाहा भएकै कुरो हो। दिइएका उपरोक्त विषय गहन, गम्भीर र गजबको तथा लेख्नयोग्यको भएकाले केवल तीन पृष्ठभित्र के-कसरी अटाउने हो ? त्यो सोच्दै, फड्किँदै, 'जम्प' गर्दै अनि चाहँदाचाहँदै पनि कतिपय ठोस विषयहरूलाई पर सार्दै केही शब्दहरू लेख्न धृष्टता गरेको छु। लेख अधुरो भयो भन्ने अभियोग यसर्थ नलगाइओस् भन्ने आग्रह छ।

नेपालका पूर्वीय चार-पाँच वटा जिल्लाका मानिसहरूको अघिल्लो कुनै समयमा धेरै वर्षसम्म दार्जीलिङसितको आवतजावत 'पानी-पँधेरो' भनेसरह नगिचको सम्बन्ध थियो, जतिको दिल्ली र काठमाडौँबीचमा तात्कालिक वरिष्ठ राजकीय, राजनीतिक र व्यापारिक व्यक्तिहरूको घनिष्ठता र आवतजावत थियो। अब सुरु गरौँ यहाँ धरणीधर शर्मा कोइरालाबाट। नेपालमा जन्मेका कोइरालालाई भाषा शिक्षार्जनका निम्ति उनका काकाले बाल्यकालमै बनारस (भारत) मा ल्याएपछि उनको प्राथमिक, माध्यमिक, स्नातक तहका शिक्षा आर्जन गर्दै बी०टी०पनि गरिसकेपछि दार्जीलिङको भाषा, शिक्षा र साहित्यको विकासको खबर-समाचार सुनेपछि सन् १९१८ मा दार्जीलिङतिर आएपछि यहाँका मानिसहरूको आचार-व्यवहार, हावापानी, प्राकृतिक सौन्दर्य साथै भाषा, शिक्षा र साहित्यको उत्तरोत्तर विकासको वातावरण देखेपछि 'बाहुन गुलियोमा भुलियो'भन्ने सस्तो उक्तिलाई पर पन्साएर यहाँ स्वस्थ वातावरण पाएपछि यतै उनले कर्मथलो बनाउन थाले। यहाँका साहित्यिक वातावरणमा निर्लिप्त भएपछि उनले यहाँ दार्जीलिङमै 'नैवेद्य', 'स्पन्दन' र 'पञ्चायत' लेखे । खरसाङको गोर्खा लाइब्रेरीको १ तारिख जनवरी १९१९ मा उद्घाटनमा उनी सामेल भए।

नेपाली साहित्य सम्मेलनको स्थापना (२४ मई १९२४) मा उनी सरिक भई उपसभापति पनि भएका थिए । दार्जीलिङ सरकारी हाइस्कूलमा शिक्षकबाट हेडमास्टरसम्म भए । हाइस्कूलबाट अवकाश भएर सामाजिक शिक्षा अधिकारी पनि भए । वृद्धावस्थामा ढल्कन सुरु भएपछि कोइराला बाबू नेपाल फर्केर गएपछि लेखनकार्यमै आफ्नो जीवन समर्पित गरे।

तात्कालिक परिचित कवि, लेखक इलाम-निवासी श्यामकृष्ण श्रेष्ठ समयसमयमा सुकियापोखरी, दार्जीलिङ आवतजावत गर्दा सुकियापोखरी, सिमाना-निवासी धनकुमारी थापासित विवाह गरेका थिए। श्रीमान् श्रेष्ठज्यूले दार्जीलिङका तात्कालिक प्रतिष्ठित पत्रिकातिर आफ्ना लेखहरू प्रकाशित गरिरहन्थे । पछि तिनी झापातिर लागे श्रीमती थापालाई एक्ली बनाइराखेर ।

तारानाथ शर्मा (ताना शर्मा) का दार्जीलिङ आफ्नो गाउँघरसरह सम्बन्धमा थियो। पशुपति बजार-मुनि फिक्कल बजार पुग्ने बाटोबीचमा अवस्थित बौद्ध धामनजिक बाटैछेउमा उनको घर थियो, त्यहाँबाट तिनी दार्जीलिङ आइरहन्थे। त्यसबेलाका दार्जीलिङका साहित्यकारहरूसित उनको उठबस थियो। दार्जीलिङबाट प्रकाशित पत्रिकातिर उनका लेखहरू छापिन्थे। अङ्ग्रेजी भाषाको ज्ञान दार्जीलिङमै उनले लिएका थिए। काठमाडौँमा सरेपछि अङ्ग्रेजीमै स्नातकोत्तर हासिल गरे । धेरैजस्तो पश्चिमी साहित्यकारहरूको तिनले अध्ययन गरेका थिए, त्यसैले 'पश्चिमका महान् साहित्यकारहरू' नामकरणमा

नेपाली भाषामा पुस्तक लेखेका थिए । नेपालमा तिनी ताना शर्मा भएर बाँचे । उसै गरी करफोक आइतबारे-निवासी पासाङ गोपर्मा दार्जीलिङसित नजिकको सम्पर्कमा रहेका हुन् । दार्जीलिङको साहित्यिक हावाले उनलाई पनि गहिरो हावाले स्पर्श गरेका थिए । उनका लेखहरू दार्जीलिङमा पाठकहरूले पढ्ने गर्दथे । उपरोक्त प्रतिष्ठित लेखकहरूमध्ये कान्छो लेखक, गायक, सङ्गीतकार गणेश रसिकको दार्जीलिङ पानी-पँधेरोभन्दा अत्युक्ति हुनेछैन । तारानाथ शर्मा र पासाङ गोपर्माका नजिकका छिमेकी रसिकको घर पनि बौद्धधाम छेउमै हो, दार्जीलिङका गायक, लेखक, सङ्गीतकार हरूसित आजपर्यन्त उनका सम्बन्ध नजिक छ ।

भनौँ नै भने इलाम र पाँचथर जिल्ला र दार्जीलिङका कमान, बस्ती र बजारबीचमा भएको विवाहक्रम त भनेर साध्य छैन । त्यस्ता विवाहहरू कति भए कति ! यो पङ्क्तिकारले ५५/६० वर्षअघि तीन वटा त्यस्ता विवाहमा खुला खेतबारीमा सम्पन्न गरिएको भतेर बिहामा मिरिक अञ्चलअन्तर्गत गोपालधारा चियाबगानको कोठीगाउँका दिलबहादुर लकाईँको विवाहको जन्ती भएर फिक्कल जाँदा सन् १९६१-६२ को अति चल्ती हिन्दी गीत 'तेरे सुर और मेरे गीत, दोनौँ मिलकर बनेकी प्रीत' रातभरि फिक्कल बजारमा त्यही वर्ष गुञ्जिरहेको सुर-लय आजपर्यन्त विस्मृति भएको छैन । यहाँ तर विवाहको सिलसिला जोड्ने विषय होइन ।

अब आऊँ यता विश्वेश्वरप्रसाद कोइरालापट्टि । बी०पी० कोइरालाको बाल्यकालको शिक्षा बनारसमै भयो । म्याट्रिकुलेसन, बी०ए०, बी०एल० बनारसमै शेष गरेर दार्जीलिङमा आई वकालती गरेका हुन् । उनको पनि दार्जीलिङ एक अतिप्रिय गाउँ भएको थियो । यहीँबाट तिनले मनोवैज्ञानिक कथाहरूको सङ्ग्रह 'दोषी चश्मा' तयार गरे । दार्जीलिङलाई जस्तै उनले राजधानी दिल्लीलाई आफ्नो 'रासोबासो' बनाएका थिए । भारतीय भाषा, राजनीति र संस्कृतिसित उनी चिरपरिचित थिए, भारतको स्वतन्त्रता आन्दोलनसित त्यत्तिकै परिचित थिए । त्यसैले राजनीतिमा अनुभवी भइसकेर नेपालको राजनीतिमा पनि तिनले ठूलो योगदान दिन सके। राजनीति र साहित्यिक लेखनलाई अलगअलग विशुद्ध स्थानमा राख्न तिनी बेजोड थिए। 'सुम्निमा' पुस्तकको साहित्यिक लेखनले नेपालमा दुई ध्रुवीय जातसमूहलाई एकसाथमा गठबन्धन गर्दै नेपाल देशलाई सबै जातसमूह लिएर एकसूत्रमा बाँध्ने लेखनशैली तिनको साधारण दर्शन थिएन । महानन्द सापकोटाले आसाममा साहित्यलेखन सुरु गरेर दार्जीलिङमा आई साहित्यिक लेखनमा भाषा, शब्द, व्याकरण, लेखाइमा शुद्धता दर्शाउने कार्यमा भरपूर सेवा पुऱ्याउँदै नेपाल फर्केपछि आफ्नो साहित्यसेवा यात्रा शेष गरेका हुन् । उनलाई दार्जीलिङले स्मरण गरिरहन्छन् ।

सूर्यविक्रम ज्ञवाली काशी (भारत) मै जन्मी, हुर्की, त्यहाँकै प्राथमिक, माध्यमिक, स्नातक र बी०टी० शिक्षा हासिल गरेर २२/२३ वर्षको युवावस्थामै दार्जीलिङ आएर दार्जीलिङ सरकारी हाइस्कूलमा शिक्षक हुन आइपुगे, जतिबेला धरणीधर शर्मा त्यस बेला प्रधान-अध्यापक थिए । कविवर कोइराला त्यस हाइस्कूलबाट अवकाश गरेपछि सूर्यविक्रम ज्ञवाली प्रधान-अध्यापक भए । दार्जीलिङमा रहेर ज्ञवाली बाबूले नेपाली भाषा र साहित्यको सेवा कति गरे ? कति शिक्षा दान गरे ? नेपाली साहित्य सम्मेलनको स्थापना (मई १९२४) गरेर कति र कस्तो साहित्यिक इतिहास निर्माण गरे ? सो वृत्तान्तसित दार्जीलिङ र नेपालका पुराना पाठक र साहित्यिकवर्ग राम्ररी अवगत छन् ।

२२ तारिख जुन १९५३ मा घूम पहाड (दार्जीलिङ) मा विराट् साहित्यिक गोष्ठीको कार्यक्रमको अध्यक्षता गर्नुहुने सुश्री देवकुमारी सिन्हा (विवाहपश्चात् थापा) ले आफ्नो कतिपय कृति र साहित्यिक पत्रिका प्रदान गरिराखेर नेपालतिर लागिन्, जहाँ उनी देवकुमारी थापा वा एक सिद्धहस्त लेखिकाका रूपमा परिचित भइन् । सो गोष्ठीको कार्य सञ्चालन गर्ने र स्वागत वक्तव्य दिनुहुने सुश्री राधिका राया मलायामा धेरै वर्षसम्म शिक्षिका रहेर अवकाश ग्रहण गरी भद्रपुर, झापामा स्थायी रूपमा बसेर प्रशस्तै साहित्यिक सेवाकार्यलाई अनवरतता प्रदान गरिरहिन्, जसको फलस्वरूप उनलाई झापाली साहित्यकारहरूको संयोजकत्वमा सम्मान दिएको सम्झना छ । उनले कति वटा पुस्तकहरू, कतिकति लेखहरू लेखिन् ? सो विवरण झापाली

साहित्यकारहरू पूर्ण रूपले अवगत छन् । उसरी नै सो साहित्यिक गोष्ठीमा उपस्थित अनेकौँ श्रोतावर्गभित्र परेका प्रतिष्ठित त्यस बेलामा घूम पहाडकै चौध/पन्ध्र जना साहित्यकारहरूमध्ये काजिमान कन्दङ्बा एक हुन् । सन् १९५३ मै 'आठ कथा' कथासङ्ग्रहका स्रष्टा कन्दङ्बाले सो गोष्ठीमा 'पाङ्खरे खेत पनि होड्यो' कथा पाठ गरेका थिए । लिम्बू भाषा र संस्कृतिका अध्येता घूम मोनास्ट्री रोड-निवासी कन्दङ्बाज्यू नेपाल तरेपछि पूर्वी नेपालमा मन्त्री पदमा रहेर सेवा गरेजस्तो लाग्छ ।

राजकुमार वीरेन्द्र शाह दार्जीलिङकै कलेजमा पढेका हुन् । साहित्यिक कृतिहरू शायद उनको कुनै नभए पनि साहित्यमा उनको चासो बढी नै देखिन्थ्यो । आफ्ना विचार, वक्तव्य, सन्देश जनतालाई वा लेखकहरूलाई दिँदा उनका साहित्यिक भावभङ्गी, विचारविमर्श र सुझावहरूमा गहन साहित्यको मर्ममय मनसायको अभिव्यक्ति देखिन्थ्यो । भूतपूर्व प्रधानमन्त्री सूर्यबहादुर थापाका भाइ नगेन्द्र थापा १९६३-६४-६५ तिर दार्जीलिङ महाविद्यालयमा अध्ययनरत थिए । धर्म बस्नेत, गुमानसिंह चामलिङ, गोपाल योञ्जन, प्रेम शेर्पा विरोकी आदिसित उनको भेटघाट भइरहन्थ्यो । कलेजमा तिनी उमेरमा भन्न सकिएन तर श्रेणीमा मभन्दा एक वा दुई स्टेज जुनियर थिए । नेपाल फर्केपछि तिनले के-के गरे ? केही थाहा भएन । प्रायः साठी वर्षको समयअघिको कुरो हो, सम्झना धेरै धीमा भइसकेको छ अहिलेघरी । पाँचथर एकचेपा क्षेत्रबाट तीलविक्रम नेम्बाङ (वैरागी काइँला) १९६१-६२-६३-६४ तिर दार्जीलिङ सरकारी महाविद्यालयमा अध्ययनरत थिए । तर्क प्रतियोगितामा सेन्ट जोसेफ कलेज र दार्जीलिङ सरकारी कलेजबीचमा चलेको समयमा दार्जीलिङ कलेजबाट गुमानसिंह चामलिङ, अम्बर गुरुङकी श्रीमती सुकियापोखरीका सुश्री पेमाला र अन्य एक जना जम्मा चार जनामा एक थिए उनै नेम्बाङज्यू । तर्कमा खप्पिस भएकैले उनी कलेजबाट तार्किकका रूपमा चयनित थिए । उनले राडीको अस्कोट सिलाउन लगाएर सो असकोट दार्जीलिङमा रहुञ्जेल पहिरिइरहे तापनि अन्य लेखक, विद्यार्थीहरू कसैले सो फेसनलाई अनुकरण गरेनन्, केवल उनी एक्लै भए । तर, पछिबाट नेपालबाट दार्जीलिङमा आउने भरिया भाइहरूले त्यो असकोट सिको गरेर लाउन थाले । त्यस बेलासम्ममा नेम्बाङज्यू साहित्यमा अग्रज भइसकेका थिए । त्यही वर्षहरूमा (१९६३-६४ ) इन्द्रबहादुर राई र ईश्वरवल्लभको सहकार्यमा सम्मिलित भएर 'तेस्रो आयाम' नाममा आयामिक लेखन आन्दोलन सुरु गरेका थिए । लिम्बू भाषा, लिपि र संस्कृतिका ज्ञाता वैरागी काइँला नेपाल प्रज्ञाप्रतिष्ठानका कुलपतिको ओहोदामा पुग्नु भनेको कति सम्मानित, कति गौरवान्वित हो, सो सर्वजनले बुझ्न सक्छन् ।

'नेपालको राजनीतिमा अदेखा सच्चाइ' पुस्तकका लेखक खरसाङ-निवासी गोपाल गुरुङ नेपाल पसेर 'मगराली' का संस्थापक अध्यक्ष भए । मङ्गोलियाली समूहको वकालती गरिरहे । खरसाङ (दार्जीलिङ) निवासी नगेन्द्र शर्मा काठमाडौँ गइसकेपछि त्यहाँका लब्धप्रतिष्ठित साहित्यिक विद्वान् बने । खरसाङकै सुभद्रा सुब्बा नेपालका वल्लभमणि दाहालसितको वैवाहिक नाताले सुभद्रा सुब्बा दाहाल बनिन् । एक प्रतिष्ठित नारी हस्ताक्षरका रूपमा चिनिएकी सुभद्रा आफ्ना पति वल्लभमणिको सम्बन्धबाट परिचित नभएर हुन नचाहेर आफ्नै लेखन क्षमताको आधारमा साहित्य जगत्मा परिचित हुन चाहन्थिन् । पाँचथर जिल्लाकै सुभाङ गाउँमा जन्मेका, पाँचथर जिल्लाका प्रथम निबन्धकार, डिल्लीराम तिमसिना, दार्जीलिङ आएर केही वर्ष बसेर दार्जीलिङबारे कविताहरू लेखेका थिए । त्यसपश्चात् बनारस हिन्दू विश्वविद्यालयमा नेपाली भाषा विभागका प्रमुख भए । म १९६५-६६ तिर उनकै गाउँ सुभाङमा अवस्थित नीलगिरि हाइस्कूलमा प्रधान-अध्यापकको पदमा रहँदा दार्जीलिङबाट आएका शिक्षक भनी हर्ष प्रकट गर्दै उहाँले मलाई त्यस स्थानमा शिक्षाको उन्नति गरियोस्/गरिइनेछ भन्ने विश्वस्त हुँदै शुभेच्छा-पत्र पढाउनुभएको थियो । यसको अर्थ दार्जीलिङसितको उहाँको आस्था र विश्वास स्पष्ट थियो । आयामिक कवि ईश्वरवल्लभले त यहाँको शहरबीचमै ससुराली बनाए, जुन ससुराको नामको घर मन्तुलाल बिल्डिङ भनेर चिनिन्छ ।

कालेबुङमा टीकाराम शर्मा कुमुदिनी होम्स

हाइस्कूलका प्रधान अध्यापकको जागिरबाट अवकाश ग्रहणपश्चात् नेपालतिर लागे। ईश्वर बराल काठमाडौँबाट दार्जीलिङ आएर यहाँको सरकारी कलेजमा अङ्ग्रेजी विषयमा अध्यापन गरे । उनी यही दार्जीलिङमै बसेर एक चर्चित प्रस्तुत दस्तावेजीय पुस्तक 'झ्यालबाट' प्रकाशनमा ल्याए । अतिविशिष्ट विद्वान् भनी चिनिने बरालज्यूले दार्जीलिङलाई धेरै मन पराएका र धेरै माया गरेका थिए ।

सन् १९५३-५४ सालमा लेखनाथ, बालकृष्ण सम र देवकोटा दार्जीलिङमा आएकै हुन्; उहाँहरूले केही लेखेर, बोलेर नेपाली साहित्य सम्मेलनमा र गो०दु०नि०स० मा बसेर कार्यक्रममा अंशग्रहण गरेर फर्केका हुन् । सिद्धिचरण श्रेष्ठ आए, तुलसी दिवस आए दार्जीलिङमा धेरै वर्षपछि बालकृष्ण पोखरेल र भानुभक्तका खनाति र उहाँहरूका सहयोगीहरू भानुको वृत्तचित्र प्रदर्शनीका निम्ति सरसल्लाह गर्न आएका थिए, जसलाई हामीले सो प्रदर्शनी कार्यमा भरपूर सहयोग गरेका थियौँ, सो लेखिएन यहाँ। पछिबाट कवि विश्वविमोहन, सन्ध्या आचार्य आदिको टोली आएका अनि उनीहरूको निमन्त्रणामा नेपाली साहित्य सम्मेलनबाट हामी छ जना पदाधिकारीहरू इलाममा दुई दिवसीय साहित्यिक कार्यक्रममा (डा०लक्खीदेवी सुन्दाससहित) अंशग्रहण गरेका उनीहरूकै दोस्रो पल्टको दार्जीलिङ आगमनमा एकजना राम्रा कवि (विनय रावल ?) को खरसाङमा गाडी दुर्घटनामा निधन भएको दुःखद कथा यहाँ कोरिएन । चार-पाँच वर्षअघि प्रज्ञाप्रतिष्ठानका उपकुलपति प्रा०गङ्गाप्रसाद महोदयको साथमा काठमाडौँका साहित्यकारहरू तथा इटहरी-नजिकका बेलबारी साहित्यिक संस्थाका कार्यकारी साहित्यिक समूह आएका अनि दार्जीलिङकै चुङथुङ चियाबारी १९७०-८० को दशकभित्रमा वामपन्थी विचारधारामा कट्टर समर्थक हर्कमान तामाङ, जो इलामतिर गएर दुई-तीन पल्ट त्यहाँका सांसद भए, उनी पनि बेलबारीका साहित्यिक टोलीसित सम्मिलित भएर आएका विवरणहरू यहाँ लेखिएन ।

अन्तमा, तीन पन्नाभित्रको लेख हुनुपर्ने आदेश, निर्देशलाई बाध्यतावश उल्लङ्घन गर्ने शायद यो मेरो दुःसाहस भनी नसम्झिबक्सियोस् । उपरोक्त सबै पङ्क्तिहरूमा मैले तर साहित्य लेख्न सकिनँ, केवल इतिहास र विवरणमात्र लेखेँ तथापि इतिहास लेखेँ ती व्यक्तिहरूको, जो नेपाली भाषा-साहित्यसित नङ-मासुसरह जड्ति भएका मात्र होइनन्, अपितु सम्पूर्ण नेपाली साहित्यको संरक्षण, संवर्द्धन र भरणपोषणमा यथेष्ठ योगदान प्रदान गरेका छन् ।

'कल्पतरू' बाट लेखकीय आशीर्वाद थाप्न अभिलाषित एवम् अपेक्षित छु । अस्तु ।

■■

घुम, दार्जीलिङ, ९७३५९०१६४५

छेस्का

# पाँच छेस्काहरू

✍ एलपी पराजुली



१. आँखा छन् चिम्रा
काँधमा भैँसी
चढ्यो कि तिम्रा ?

२. नेता उभिण्डो
बोकाको मुख
सिङ्गै कुभिण्डो !

३. सिँगार्‍यौ काया
देखावटीमा
कहाँ छ माया ?

४. के गर्छौ बल ?
कात्रोमा खल्ती
हुन्छ निष्फल ।

५. सुन्दरी सुरा
दिनहुँ भोग्ने
अझै अधुरा !

■■

*कपन काठमाडौँ*



# भागबन्डा

## ✍ सीतादेवी छेत्री

एउटै कोखबाट जन्मिएका दुई भाइ ध्रुव र धीरजमा धेरै भिन्नता थियो। दाजु ध्रुव बाठा र पढाइमा तीव्र बुद्धिका थिए। बाह्र सिध्याएर फौजमा भर्ती भएका थिए। जागिरमा लागेको तेस्रो वर्षमा आमा गङ्गाले चारहजारेका भट्टराईकी छोरीसित जोडी बाँधिदिएकी थिइन्।

गङ्गाको कान्छो छोरा अलिक मन्दबुद्धि भएकाले पढ्न सकेन। सात कक्षासम्म बल्ल-बल्ल कति वर्ष अनुत्तीर्ण हुँदै पुगेका थिए। अगाडिको पढाइ गर्न नसकेर घरमै खेतीबारी र गाईबस्तु सम्हाल्न थालेका थिए।

धेरै सोझो स्वभाव भएकोले गङ्गालाई कान्छो छोराको धेरै पीर लाग्ने गर्थ्यो। म मरेपछि कसरी गरिखान्छ होला सोचिबस्ने गर्थिन्।

अट्ठाईस वर्ष नपुग्दै रातो, हरियो चुरा फुटाई सिन्दूर पुछिएकी गङ्गा। दुई छोरा हुर्काउन कम्मर कसेकी थिइन्। "छोराहरूको बिहे भएपछि मेरो आराम गर्ने दिन आउँछ। अहिले दुःख गरे पनि बुहारी आएपछि खुट्टा पसारेर बस्छु" भन्दै "बसेर खाने दिन आउँछ" भन्दै छिमेकीहरूसित भन्ने गर्थिन्। दुई छोरा, एक बिगाहा खेत, घरबारी र चार माउ गाई र बाख्रा थिए गङ्गाको सम्पत्ति।

ध्रुव छुट्टीमा आएको बेला गङ्गाले भनिन्, "छोरा, हिजोआज जिउले मलाई साथ दिएको छैन। तिम्रो त जागिर छ। बिहे पनि भयो। भाइ धीरज धेरै सोझो छ। मलाई त्यसको चिन्ता सधैँ लागिरहन्छ। मेरो श्वास रहँदै एउटी केटी हेरेर हल बाँधिदिन पाए मरे पनि आत्माले शान्ति पाउँथ्यो होला। धेरै मान्छेलाई 'केटी हेरिदेऊ' भनिराखेको थिएँ। कान्छा मामाले 'कालापहाडमा एउटी केटी हेरेको छु, छिट्टै गरी आउनू' भनी खबर पठाउनुभएको थियो। 'तिमीहरू आउँदा धीरजलाई सँगै लिएर आउनू' भन्नुभएको छ। सञ्चो नभएर जान सकेको छुइनँ। भोलि सबै गएर विचार गरेर आऊँ होला।"

भोलिपल्ट एउटा गाडी किराया गरी परिवारसहित कालापहाड मामाको घर पुगे। चियानास्ता खाएपछि मामाले भने, "केटी आठ वर्षकै हुँदा उसकी आमाको स्वर्गबास भएको थियो। ऊ जेठी भएर सानैबाट भाइ-बहिनी हेर्ने जिम्मा आइलाग्यो। साना-साना नानी सम्हाल्न नसकेर दोस्रो बिहे गरेका छन् केटीका बाबाले।

केटी मलाई असल लागेकी छिन्। दुःखले हुर्केकीले घरगृहस्थी चलाउन राम्रो अनुभव छ। मलाई धीरज भानिजको लागि सही जोडी हुन्छ होला लागेको छ। यसको अगाडि अब हजुरहरूको इच्छा हो।"

गङ्गाले मनमनै सोचिन्, 'हे भगवान्! मेरो सोझो छोरोलाई राम्रो मानी बिहे गर्न मानिदिए हुन्थ्यो! सानैबाट दुःख पाएकी रैछिन्। पक्कै मेरो छोरालाई बुझ्ने गर्छिन् होला।'

"पहिला गएर केटी हेरौँ भाइ।" भन्दै सबै केटीको घरतर्फ लागे।

केटी घरमा एक्लै रहिछिन्। आमाबाबा खेतमा गएका रहेछन्। पाहुनालाई आदरसँग भित्र बसाई पानी दिएपछि सोधिन्, "बाबासित केही काम छ भने म गएर बोलाएर आउँछु।"

गङ्गाले सोधिन्, "नानी तिम्रो नाम के हो?"

"मलाई सबैले जुनू भनी बोलाउने गर्छन्।"

"हामी तिम्रो बाबालाई भेट्न आएका हौँ। तिमी पाहुनासित बस्दै गर। म गएर बाबालाई बोलाई ल्याउँछु।" भन्दै मामा निस्कनुभयो।

मामा निस्किनुभएपछि जुनू चिया पकाउँछु भन्दै गइन्। गङ्गाले दुवै छोरालाई प्रश्न गरिन्, "मलाई त जुनू खूबै जँच्यो, तिमीहरूलाई कस्तो लाग्यो?"

ध्रुवले भने, "केटी त राम्री छिन्। धीरज, तँलाई

कस्तो लाग्यो ? जुनू मन परिन् ? बिहे त तैँले गर्ने हो ! राम्रो सोचेर जबाफ दे है !"

यति सुनेर धीरज घोप्टो मुन्टो लगाएर हाँसिरह्यो । निःशब्द ।

"केटी माग्दा हुन्छ अब कि ?"

टाउकोमात्र हल्लाएर 'हुन्छ' को इशारा गरे धीरजले ।

"आमा, धीरजलाई केटी मन परेजस्तो छ । मामा आएपछि कुरा अगाडि बढाउँदा हुन्छ ।"

"केटी हेर्दा लच्छिन परेकी छिन् । घर हेर्दै बुझिन्छ कति साफ-सुथरा राखेकी छिन् ।" गङ्गाले थप्दै भनिन् ।

मामा र जुनूका आमाबाबा आइपुग्नुभयो ।

एक छिन खेतीबारीको गफ गर्दै थिए । मामाले कुराको सुरुवात गर्दै भन्नुभयो, "बले दाजु, मेरी दिदी र भानिजहरू हजुरसित खासै काम लिएर कांग्लातोङ्बीबाट आउनुभएको छ ।"

"मसित त्यस्तो कस्तो खास काम पऱ्यो होला ?"

"फूल भएको ठाउँमा मौरी, भँवरा आउँदो रहेछ । हजुरकी जेठी छोरी जुनूको लागि मेरो कान्छा भानिज धीरजको लागि कन्यअर्थ आएका छौँ ठूलो आशा लिएर ।"

"फूल भएको ठाउँमा मौरी भँवरा अवश्य नै आउँछन्, पक्कै हो । हजुरको भानिजको बारेमा हामीलाई केही जानकारी छैन । माफी चाहन्छु, हजुरका भानिजले कतिसम्म पढ्नुभएको छ ? कुनै पेशामा हुनुहुन्छ कि ? हजुरले अलिक जानकारी गराइदिए धन्य मान्ने थिएँ ।"

"मेरा भानिज सात कक्षासम्म मात्र पढेका छन् । कुनै पेशामा लागेका छैनन् । घरको कामकाज थाप्लोमाथि आइपरेर अगाडिको पढाइ गर्न सकेनन् । घरमै खेतीबारी गर्ने जिम्मेवारी लिएर सम्हाल्दै छन् । दाइ-दिदीलाई भिनाजुको पेन्सन आउँछ । ठूलो भानिज फौजमा छन् र उनको दुई वर्षअगाडि बिहे भइसकेको छ ।"

"यता र उताको एउटै परिस्थिति रहेछ । भाइबहिनी हुर्काउने जिम्मेवारी आइपरेकोले मेरी छोरी पनि घरको व्यस्तताले गर्दा छ कक्षासम्म मात्र पढ्न सकिन् ।"

"आजभोलि त हाम्रो जस्तो जमाना छैन । उहिले त बाबाहरू गएर मागेर बिहे पक्का गरेपछि हेर्ने, मन पराउने चलन थिएन र चुपचाप बिहे गरिन्थ्यो । बिहेपछि मात्र देखादेख हुन्थ्यो । आजभोलि त मियाँ-बिबी राजी हुनुपर्छ अरे । पहिला दुवैलाई एकपल्ट सोध्नुपर्छ ।"

गङ्गाले भनिन्, "मैले अघि नै सोधेकी थिएँ धीरजलाई । केटाको तर्फबाट त पक्का छ । जुनू नानीलाई सोध्नुपऱ्यो होला ।"

जुनूका बाले आमालाई "सोध्नू" भनी आदेश दिए।

जुनूले अर्को कोठाबाट लुकेर सबैको कुरा सुनिरहेकी थिइन् । आमा आएको देखेर छिटो बाहिरतिर निस्किइन् । आमाले पल्लो कोठातिर लगेर भनिन्, "नानी, भित्र बसेका मान्छेहरू तिमीलाई माग्न आएका रहेछन् । त्यो नीलो कमीज लगाएका केटा रहेछन् । अगि चिया दिन जाँदा देखेउ होला, तिमीलाई कस्तो लाग्यो ? बाबाले सोधेर आइज भनी मलाई पठाउनुभएको हो ।"

जुनू केही बोलिनन् र लाज मान्दै बाहिरतिर निस्किइन् ।

"पख जुनू, बाबालाई के जवाब दिऊँ हुन्छ कि हुँदैन ?" आमाले तीन, चार पल्टसम्म सोधिन् तर जुनूको मुखबाट केही शब्द झरेन । बैठक कोठामा पस्दै भनिन्, "चार पल्टसम्म सोधेँ, केही जबाफ नदिई बाहिरतिर भागी । मलाई त केटीलाई पनि मन परेजस्तो लाग्यो ।"

गङ्गा मनको धड्कन बढाउँदै सुनिरहेकी थिइन् । कतै हुन्न भन्ने पो हुन् कि लाग्दै थियो । सबैले मन परेरै नबोलेको अनुमान लगाए ।

मामाले भने, "अब दुवै राजी भएपछि चिना मिलाएर हेर्दा कस्तो हुन्छ होला बले दाइ ?"

पण्डितजी बोलाई चिना देखाइयो । चिना मिल्यो भनेपछि बिहेको दिन निकालियो । अब भने गङ्गाले ठूलो सास फेरिन् र ढुक्क मानिन् । एकै दिन सबै काम निप्ट्याएर ढुक्क मानी साँझ सबै घर फिर्ता भए ।

मङ्सिरको सत्र गते जुनू र धीरजको शुभविवाह सम्पन्न भयो । गङ्गालाई कान्छो छोरोको बिहे भएकोले ढुक्क लागेको थियो । दोस्रोपल्ट जेठो छोरो आएपछि 'यो उनीहरूको बाबाको सम्पत्ति अंशबन्डा गरिदिन पाए

मलाई शान्ति मिल्ने थियो ।' मनभित्र सोचिरहिन् ।

गङ्गालाई दुई छोरालाई अंशबन्डा गर्न साह्रै गाह्रो लाग्दै थियो । पञ्चायत बोलाउनु घरको इज्जत सम्झेर अप्ठ्यारो लाग्दै थियो ।

'ध्रुवले महिनाको तलब पाउँछ, त्यसलाई केही दुःख हुँदैन । तर, धीरजको त म मरेपछि केही आउने बाटो हुँदैन ।' यस्तो सोची मामा, काका, गाउँका एकदुई बुजुर्ग बोलाई अंशबन्डा गरिदिने आग्रह गरिन् ।

सबै मिलेर खेतीबारी दुई भागमा भाग गरिदिएर ध्रुवलाई सोधे, "तेरो त जागिर पनि छ । अब घर र गाई बाख्रा रहे । यसको तँ के भन्छस् ?"

बाबाको सम्पत्ति हो गाईबाख्रा आधा गरौँ र घरमा म आधा भागमा बस्छु । आधामा आमा र भाइ ।"

ठूलो मामाले भने, "तिमी त जागिरमा जान्छौ । गाई, बाख्रा भाइले पाल्थ्यो होला ।"

"होइन मामा, भागबन्डा गरिसकेपछि सबै आधा गरी बाँडिदिएको ठीक हुन्छ ।"

सबैले आधा-आधा बटवारा गरिदिए ।

छुट्टी सिद्धिने बेला भएको थियो ध्रुवको, अलिक दिनको लागि आफ्नो परिवार पल्टनमा लगेर जाने भए ध्रुवले । गाई, बाख्रा सबै बेचेर खेतीबारी अधियाँमा मान्छेलाई गर्न दिएर उनीहरू पल्टनतिर गए ।

धीरज पत्नीको सहयोगले खेतीबारी गर्दै खुशीको साथ दिन बिताउँदै थिए । ध्रुव दशैँतिर दुई महिनाको बिदा लिएर आउने गर्थे । आएपछि भाइसितै खाने-पिउने गर्थे । बिदामा आउँदैपिच्छे भाइ-बुहारीले पालेर राखेको खसी, हाँस, कुखुरा सबै रित्याएर जाने गर्थे । दाजुलाई खुशी देखेर भाइ त्यसै खुशी हुने गर्थे । बिदा सिद्धिएर जाने बेलामा आमाले ध्रुवलाई सधैँ भन्थिन्, "भाइ सोझो छ । म मरेपछि भाइको ख्याल राख्नू है ।"

धीरजको बिहे भएको बाह्र वर्ष भइसकेको थियो । गङ्गा निकै बिरामी थिइन् । ध्रुव र धीरजले अस्पताल लगेका थिए । डाक्टरले "हाम्रो उपाय छैन, घर लगेर उहाँलाई मन परेको खुवाउनू, खुशी राख्नू" भन्दै सम्झाए । घरमा लगेर सेवा गर्दै थिइन् जुनूले । एक दिन बिहानै गङ्गाले छोरा-बुहारी, नाति-नातिना, आफन्त सबैलाई छाडी परलोक धाम गइन् । दुवै भाइ मिलेर तेह्र दिनको काजक्रिया राम्रोसित सिध्याए । कान्छो छोराले श्राद्धमा लागेको खर्च सबै एक्लै बेहोर्नुपर्‍यो । नानीहरूलाई पढ्न सुविधा हेरेर ध्रुवले आफ्नो भागको खेतीबारी सबै बेचेर बजारमा जग्गा लिएर घर बनाइसकेका थिए ।

जहिले छुट्टीमा आउँदैपिच्छे भाइबुहारीले पालेर राखेका हाँस-कुखुरा रित्याइ दिने गर्थे । भाइ सोझो, बुहारी पनि केही भन्न सक्दिन थिइन् । छिमेकीमा एक जना बूढो काकाले जहिल्यै विचार गर्ने गर्थे । एक दिन 'सारै भएन' सोची धीरजको घरमा आएर सम्झाउँदै भने, "यो कुरा मैले यहाँ आएर भन्ने हक त छैन तर देख्दा मन मान्दैन र भन्दै छु, नरिसाऊ है नानी ! पहिला त आमाको पेन्सनबाट पैसा आएर घर खर्च चल्थ्यो । अब त तेरो आउने बाटो यही बाख्रा, हाँस, कुखुरा त छ । सबै तेरो दाजुलाई खुवाइस् भने तेरा छोराछोरीलाई कसरी पढाउँछस् र हुर्काउँछस् ? हुन त तिमीहरूको घरेलु मामला हो । यो बूढो किन बाठो भएको सोच्छस् होला । दाइको भाग त सबै बेच्यो । तँ गाई हेर्न गएपछि यी बुहारी नानी खुलेल डाँडा गएर कति दुःखले पशुलाई घाँस लिएर आउने गर्छिन् । कति दुःख गरी हुर्काएकी छिन् यी पशुहरू । दाजु छुट्टीमा आउनुभन्दा पहिल्यै यी सबै बेच र कपडा लत्ता किन । अलिक पैसा साँच्ने गर, पछि काम लाग्छ नानी हो ! अगाडि तिमीहरू खुशी गर । मैले गल्ती भने पनि माफ गर्नू ल !" भन्दै निस्के । बूढा काकाले भनेको कुरा दुवैले विचार गरे । धीरजले आफ्नी पत्नीलाई भन्यो, "काकाले दिएको सल्लाह मलाई त सही लाग्यो । तिमीलाई कस्तो लाग्यो ?"

"मलाई पनि उचित लाग्यो । साँच्चै हो हाम्रो आउने बाटो नै त त्यही हो । पालेको सबै खाएर केही बिक्री नगर्दा घर चलाउनु साह्रै परिरहेको पनि छ । दूध बेचेको पैसाले दुई छोराको स्कूलको फिस तिर्न पनि पुग्दैन ।" दुवैले दशैँलाई नराखी सबै बेच्ने सल्लाह गरे ।

दाजु छुट्टी आएको दिन साँझतिर भाइ कहाँ गएर भने- "यसपालि धेरै कमजोरी लागेको छ । दुई वटाजति कुखुरा लगेर सुप बनाएर खानुपर्‍यो, जा पकडेर आइज ।"

"दाइ, पहिला त आमाको पेन्सनबाट पैसा आउने गर्थ्यो र घर चलाउन ठीकै थियो । मेरो त जागिर छैन । यही हाँस, कुखुरा, बाख्रा बेचेर घर खर्च चलाउँदै छौँ । सबै बेच्नुपर्‍यो पैसाको आपत परेर । अहिले साना चल्लामात्र छन् ।"

"म सधैँ आउँदा छुट्टीभरि खान पुग्ने राख्ने गर्थिस् । दशैँको लागि खसी त राखेको छस् होला नि ?"

"नानीहरूको पाँच महिनादेखि फिस तिर्न सकेको थिइनँ । स्कूलबाट नोटिस आएछ र उपाय नभएर खसी बेचेर फिस तिरियो ।"

"धीरज तैँले त गर्नु गरिछस् । खसीको मासु हजार रुपियाँ जति किलो पर्छ । घरमा पालेको कुखुरा कति महँगो छ, तैँले त सस्तै बेचिस् होला है ?"

"बुहारीले कसरी बेचिन्, मलाई थाहा लागेन । उनीले नै अनेक दुःख गरी पाल्छिन् ।"

'भाइ त सोझो थियो, बुहारी बाठी छिन् र भाइ पनि अब त बाठो भएछ' मनमनै सोच्दै ध्रुव आफ्नो घरतिर लागे ।

■■

*कांग्लातोङ्बी, मणिपुर, भारत*

---

कविता

# एउटा मान्छे चाहिएको छ

## ✍ भरत बोहरा



यहाँ सरकार दास खोजिरहेको छ
उसले हेर्ने विभिन्न अड्डाहरूको लागि
यहाँ समाज दास खोजिरहेको छ
उसको आधिपत्य स्वीकार गर्ने
र, उसको कोरेको रेखा नबिराई
हिँड्ने आज्ञाकारी दास !
यहाँ हरमानिस दास खोजिरहेका छन्
तिनको स्वार्थ पूरा गर्न
आफ्नै अस्तित्व मेटाउन तयार हुन सक्ने
बहादुर तर आज्ञाकारी दास ।

तथाकथित केही सपना
र, केही रहरहरू
केही कर्तव्य र केही जिम्मेवारी
पूरा गर्ने बहानामा
एक-आधा पेट भर्नको लागि
युगौँ-युगदेखि
पुस्तौँ-पुस्तादेखि
नैतिकता र मानवता
ज्ञान र विवेक त्यागेर
दास हुन तँछाडमछाड गर्दै
हिँडिरहेका छन्– मान्छे ।

हो, यही दास उत्पादन गर्ने समाज
दास उत्पादन गर्ने दासालय
उर्फ विश्वविद्यालय र
मालिक हुन खोज्ने तथाकथित राज्यबाट
प्रदान गरिने केही रङ्गीचङ्गी
प्रमाणपत्र, पदवि र अलङ्कार बोकी
दास हुन हानाथाप गरिरहेको भडबाट
दास हुन इन्कार गर्ने
एउटा मान्छे चाहिएको छ ।

■■

*पुर्चौडी न.पा.-०२, बैतडी*
*हाल : महालक्ष्मी न.पा. ललितपुर*



# धमिलो आकाश

✍ उमाकान्त पोखरेल

"मैले त्यस्तो कुनै अमानवीय कार्य गरेको छैन । त्यहाँ हामीले प्रवेश गर्न नपाउने भन्ने कुरा आजसम्म मैले सुनेको पनि थिइनँ । सार्वजनिक जग्गामा रहेको देवस्थलमा प्रवेश गरेर मैले पूजा गर्दा कस्लाई के हानी पुग्यो र ? पूजामा धनी र गरीबको पनि स्तर मापन हुन्छ र हजुर ?" सुकदेवले मनको बहसँगै आफ्नो सङ्क्षिप्त घटनाक्रम बताए ।

"यो विवादले उग्ररूप लिएको छ, आउने २५ गते छिनोफानोका लागि समाजका सबै भद्र-बुजुर्ग व्यक्तिहरूलाई उपस्थितिको लागि अनिवार्य गरिएको छ। तपाईं पनि उपस्थित हुनुहोला !" रामवीरले सूचना प्रवाह गरे ।

विषय-प्रसङ्ग थाहा भएर पनि उपस्थित कतिपय थाहा नभएका जस्ता देखिन्थे– कारण पटवारी बाजेको हैकम थियो त्यस गाउँमा ।

विवादित विषयचाहिँ- 'आस्था'सँग जोडिएको थियो । जसअनुसार सार्वजनिक स्थलमा रहेको एक पुरानो ढुङ्गालाई कुनै कुशल कारिगरले आफ्नो कलाद्वारा पूर्णता प्रदान गरी खुला चौरमा छाडेका हुँदा कालान्तरमा त्यसै सुन्दर ढुङ्गालाई बहुसङ्ख्यकले ईश्वर मानी पुजिरहेका भएता पनि आजसम्म त्यसमा पटवारी बाजेको आदेशानुसार केही जातिका मान्छेले मात्र प्रवेश गर्ने गरेकामा अहिले अर्को कुनै उपजातिले अचानक प्रवेश गरी पूजा गरेको विषयमा उत्पन्न भएको विवाद थियो ।

सबैको ध्यान निर्णायक मण्डलीमा केन्द्रित थियो । थोरै लापरवाहीले साम्प्रदायिकता भड्कने खतरा थियो । निर्णय सुनाउने जिम्मा अनिमेषलाई दिइयो ।

उनी पढेलेखेका बौद्धिक व्यक्ति भएकाले उनको निर्णय जहिले पनि स्वतन्त्र, सर्वहितकारी र विवाद रहित हुन्थ्यो ।

अनिमेष केही बेर विचार्छन् ।

विषय सामाजिक रूपान्तरणसँग जोडिएकाले उनलाई एक विद्वान्को कथन याद आउँछ-

'समाज कहिल्यै अगाडि बढ्दैन, यसले नयाँ कला उपार्जन गर्छ र पुरानो अन्तर्ज्ञान हराउँदै जान्छ ।'

अनिमेषले भने– "एक ढुङ्गा अति प्राचीन र अनुभवी हुन सक्छ तर बुद्धिमान कहिल्यै हुन सक्दैन । यो २१ औँ शदी हो !

सबैले आ-आफ्ना चश्माको धूलो पुछौँ, आकाश सफा देखिन्छ ।"

■■

*भद्रपुर-१०, झापा*

## लेखकहरूमा अनुरोध

**विगत २१ वर्षदेखि प्रकाशन हुँदै आइरहेको यस पत्रिकाका लागि कथा, कविता, मुक्तक, गजल, निबन्ध, समालोचनालगायतका साहित्यिक रचना प्रकाशनार्थ पठाइदिनुहुन लेखकज्यूहरूसमक्ष सविनय अनुरोध गर्दछौँ ।**

navarajpudasaini@gmail.com



# लकडाउनमा चोर

✍ कार्तिकेय घिमिरे

पहिलो दिन ।

"ढोका लगायौ बूढी ?" बुबाले सोधे ।

"लगाएँ बाबा लगाएँ ! कति धेरै डराएको !" आमाले झर्किंदै भनिन् ।

"होइन, लकडाउनको बेला चोरी बढेको छ । अनि सम्झाएको नि !" बुबाले सानो स्वरमा भने ।

छेउमै खेलिरहेको ६ वर्षको नयनले पल्याकपुलुक आमाबुबा दुवैलाई हेऱ्यो । सायद ऊ चोर को होला ? भन्ने कुरा सोचिरहेको थियो ।

"कति किताब पढेको ? पुग्यो अब सुतौँ । यो बाउछोरा दुवैले किताब पढ्न र खेल्न पाएपछि सुत्नै बिर्सेलान्जस्तो छ ।" आमाले रिसाउँदै भनिन् ।

"त्यसो होइन, यो खालिद होसेनीको 'दी काइट रनर' कथा पढेको नि ! गजब राम्रो रहेछ । छोड्नै मन लागेन । अब अलिकति मात्र बाँकी छ है ।" बुबाले भने ।

"अनि, छोरो केटो के गर्दै हुनुहुन्छ नि ?" आमाले नयनतिर हेर्दै सोधिन् ।

"चोर बनाएको !" किरिङमिरिङ यताउता धर्का कोरेको चित्र देखाउँदै नयनले भन्यो । चित्रमा उसले डराएको आँखा भने स्पष्ट बनाएको थियो ।

चित्र हेरेपछि बच्चा नयनलाई अँगालो मार्दै आमाले भनिन्- "नडराऊ सानू । चोरसोरले केही गर्दैन । मामू छँदै छु नि !"

दोस्रो दिन ।

"होइन हो कान्छा ! आज त चोरले मेरो १२ हजारको जुत्ता चोरेछ नि !" बिहान चिया पिउँदै गर्दा कमल काकाको बोली सुनियो ।

"हो र काका ? जुत्ता नि चोर्न थाले अब चोरले ?" बुबाले भने ।

"हो त बाबू, नयाँ जुत्ता थियो । छोरोले मरिहत्ते गरेर हिजै ल्याएको । लग्यो बजियाले !" कमल काकाले रिसाउँदै भने ।

"होइन हो बूढा, चोरको नि कतिकति बिगबिगी भएको हाम्रो टोलमा !" आमाले दुःख पोखिन् ।

"कोरोनाको लकडाउनमा धेरैको कमाइ-खाने बाटो गुमेको छ । खै के भनौँ बूढी । जुत्ता नै चोर्न चोर आयो भन्दा त मलाई नि अलिअलि बढी डर लाग्न थाल्यो है बूढी ! भोलि नै गएर यी केही गहना नि बैङ्कको लकरमा राखी हाल है !" बुबाले अलि डराउँदै भने ।

नयन बिहानको खाजा दूधु-चोकोज खाएर बसिरहेको थियो । उसले आफूछेउमै रहेको गुडिया बोकेर आमाको हातमा राखिदिँदै भन्यो, "यसलाई नि लाकरमा राखिदिनू है !"

आमा र बुबा दुवैले एक-अर्कालाई ट्वाल्ल परेर हेरे । आमाले चप्प माया गर्दै नयनलाई अँगालेर भनिन्- "हस् छोरा, भइहाल्छ नि ! बाबूको खेलौना गुडियालाई नि लकरमा राख्ने नि है !"

नयन फिस्स हाँस्यो ।

तेस्रो दिन ।

"लौन नि ढोका खोल्नुस् न कृष्ण दाइ !"

"को आयो एकाबिहानै कराउन ?" बुबाले फतफताउँदै ढोका खोले ।

ढोकामा सुरोज भाइ आँखाभरि आँसु पारेर उभिएका थिए ।

"के भयो भाइ ? किन रोएको नि ?" बुबाले सोधे ।

"मेरो त सुकाएको ठाउँबाट दुई जोर लुगा चोरी भएछ नि दाइ ! किन्ने पैसा नि छैन । कोरोनाले

जागिर नि गइहाल्यो । के गर्ने दाइ ? म त बर्बाद भएँ ।"

बुबाले आफ्ना एक जोर पाइन्ट र सर्ट दिएर सुरोज भाइलाई पठाए ।

"मलाई त लुगा नै चोर्न पनि चोर आयोभन्दा त झन् बढी डर पो लाग्न थाल्यो है बूढी ! घरमा भएका केही नगद पैसा नि भोलि नै लगेर बैङ्कमा राखिहाल है ! इसेवाबाट काम चलाउनुपर्छ अब ।" बुबाले डराउँदै भने ।

नयन ढुइँढुइँ गाडी खेल्दै बसेको थियो । ऊ खुर्र दौडेर सुत्ने कोठामा गयो । टेबुलमुनिबाट आफ्नो खुत्रुके बोकेर ल्याएर उसले आमाको हातमा राख्दै भन्यो- "मेरो मनीलाई नि लाखिदिनू है !"

आमा र बुबा दुवैले एकअर्कालाई ट्वाल्ल परेर हेरे ।

बुबाले माया गर्दै नयनलाई अँगालो मारेर भने- "हस् छोरा, भइहाल्छ नि ! म भोलि आफैँ बैङ्कमा गएर राख्छु नि है !"

नयन फिस्स हाँस्यो ।

००

यसरी दिनहरू बित्दै गए । हरेक दिन नयनले चोरको बारेमा केही न केही सुन्दै गयो ।

००

शुक्रबारको दिन ।

सुत्ने बेला भएको थियो । नयन ओछ्यान-छेउमा खेलिरहेको थियो । बुबाले दुःखी हुँदै भने- "यो चोरले त गर्नुसम्म गऱ्यो बूढी । कति दुःख दिएको होला !"

"त्यही त ! बाहिर राखेको त केही देख्नै नहुने भो भन्या !" आमाले रिसाउँदै भनिन् ।

नयनले जुरुक्क उठेर आफ्नो सानो रङ्गीन नयाँ बल बोकेर ल्यायो । अनि, बाबाको कम्प्युटरको घर्रा खोलेर फुत्त भित्र हाल्यो र घर्रा लगायो ।

यो देखेर बुबा र आमा दुवै फिस्स हाँसे ।

"लौ अब सुतौँ छोरा । भोलि बिहान बाउ र छोरा बिहान उठेर मर्निङ वाक जानुपर्छ नि है !" बुबाले नयनलाई ढाप मार्दै भने ।

"हाम्रो घरछेउको चौरमा गएर को जिती को जिती खेल्ने नि है !" नयनले खुशी हुँदै भन्यो ।

"हुन्छ, भइहाल्छ नि ! भोलि त म जित्छु है ?" बुबाले भने ।

"हुन्न म जित्न दिन सक्दिनँ है केटा !" नयनले भन्यो ।

नयनको जवाफ सुनेर आमा खितित्त हाँसिन् । अनि, बुबा पनि हाँसे । नयन पनि हाँस्यो ।

शनिबारको दिन ।

"बाबा ! ए बाबा !! एक हप्ताभरि चोरेर हैरान पार्ने त्यो चोरलाई टोलका केटाले समातेर चौरमा बाँधेका रहेछन् है !" सबेरै मन्दिर गएर फर्किएकी आमाले आत्तिँदै बुबालाई भनिन् ।

नयन र बुबाआमा आउनासाथ मर्निङ वाकमा जाने सल्लाह गरेर तयार भएर बसेको थियो ।

"हो र आमा !" यति भनेर नयन चौरतिर दौडियो ।

बुबा पनि "बाबू बिस्तारै है बिस्तारै !" भन्दै उसको पछिपछि दौडिए ।

नयन हस्याङफस्याङ गर्दै चौरमा पुग्यो । चौरमा टोलका छिमेकीहरूको भीड थियो । भीडलाई ठेलेर नयन भित्र पुग्यो ।

त्यसपछि अचानक नयन चिच्याउँदै करायो - "बाबा ! चोर भनेको त मान्छे पो रहेछ !!"

भीडका सबै जना उसलाई हेर्दै गलल्ल हाँसे ।

नयन बुबाको हात समातेर उभियो । उसले खम्बामा बाँधेको चोरलाई क्वाक्वारती हेऱ्यो ।

चोरको गालामा घाउ थियो । मुखबाट रगत आएको थियो । एक छिनपछि खै के सोचेर हो नयन अगाडि बढ्यो । ऊ चोरको नजिक गयो । उसले चोरलाई बाँधेको डोरी खोलिदियो ।

"होइन के गरेको यो बाबूले ?" भीडबाट कमल काकाले कराउँदै भने ।

चोरले यताउति हेऱ्यो । त्यसपछि ऊ बेतोडसँग दौडिँदै त्यहाँबाट भाग्यो ।

"लौ हेर कृष्णको छोराले गर्दा आज बल्लतल्ल समातेको चोर उम्कियो !" काकाले कराउँदै भने ।

"कस्तो नमज्जा भयो । त्यसलाई पुलिसले लौरोले पिटेपछि सामान कहाँ छ भन्थ्यो कि !" युवाहरूले भने ।

चोर भागेकोमा चौरमा जम्मा भएका सबै जना थकथक मान्दै पछुतो गर्दै गफ गर्दै बसेका थिए । तर, १० मिनेटपछि अचम्मै भयो । त्यो अघिको चोर एउटा ठूलो बोरा बोकेर लमकलमक गर्दै चौरमा आयो ।

उसले ग्वाँग्वाँ रुँदै चौरमा बोराको सामान खन्याइदियो । सामान चोरिएका टोलका सबै मान्छेहरूले एकएक गर्दै आआफ्नो सामान लिए ।

त्यसपछि नयन घुक्कघुक्क रुँदै गरेको चोरको छेउमा गयो । उसले आफ्नो खल्तीमा हात हालेर एउटा चोकोफन चकलेट निकाल्यो र चोरको हातमा राखिदियो । चोर नयनलाई क्वारक्वारती हेर्दै झन् जोडले हिँक्कहिँक्क गर्दै रुन थाल्यो ।

एक छिनपछि त्यहाँ अचम्म भयो । चोरलाई पिट्ने हातहरूमा बिस्कुट र चकलेट देखिए । सबैले चोरको अगाडि खानेकुरा राखिदिए । ठीक त्यतिबेला नि "बा.." भन्दै एउटा ५ वर्षको बच्चा कुदेर आयो । त्यहाँ भएका सबैले अचम्म मान्दै त्यो बालकलाई हेरे ।

"कसको हो यो बच्चा ?" कमल काकाले ठूलो स्वरमा कराउँदै भने ।

बच्चा खुरुरु दौडिँदै गएर त्यो चोरको काखमा बस्यो । ऊ बुबाको अगाडि खानेकुरा देखेर लोभियो अनि पकापक खान थाल्यो । उसले खाएको हेर्दा लाग्थ्यो ऊ धेरै भोकाएको थियो । एक छिनपछि एउटा खुट्टा काटिएकी महिला वैशाखी टेक्दै आइन् । उनले बोरामा बिस्कुट र चकलेट टिपेर हाल्न थालिन् ।

नयनले घर जाने बेलामा पुलुक्क चोरलाई हेऱ्यो । चोरले एउटा बिस्कुट र चकलेट नयनको हातमा राखिदियो । नयनले अप्ठ्यारो मान्दै बाबालाई हेऱ्यो ।

"हुन्छ लेऊ, दाजुको उपहार हो !" बुबाले भने ।

त्यसपछि नयन बाबाको हात समातेर घरतिर लाग्यो । ऊ घरतिर जाँदै गरेको भीडका सबैले हेरे । सबैभन्दा बढी ध्यान दिएर त्यही चोर बाउले हेऱ्यो ।

आजकल नयनको टोलमा त्यो चोरको परिचय फेरिएको छ । ऊ एउटा सानो छोराको पिता र एउटी अपाङ्ग श्रीमतीको पति बनेको छ । अब ऊ पनि एउटा असल टोलबासी बनेको छ ।

■■

*पोस्ट बक्स नं. २५८५९ काठमाडौँ, नेपाल*

चिल्लो पात

# मेरो जिन्दगी

## ✍ शान्ति तामाङ



साना नानी थिएँ पहिले, अहिले ठूली भएछु
हाँस्नमात्र हैन आमा, रुन पनि सिक्दै छु

जिन्दगीमा सधैँभरि रमाउन सिक्थेँ म
परिस्थिति यस्तो भयो गुम्सिन पो पुगेँ म
हाँस्नमात्र खोज्दै थिएँ, पाइला अघि सार्दै थिएँ
समयले साथ दिएन, साथी पनि पाइएन

जिन्दगीमा साथीहरू ! धेरै कुरा सिक्दै छु
खुशीमात्र होइन हजुर, दुःख पनि भोग्दै छु
ठूली भएँ अहिले म, धेरै कुरा बुझ्दै छु
आफ्ना सबै सम्मानहरू आमाकोमा जोड्दै छु ।

■■

*एलिगन्ट पर्ल इङ्लिस स्कूल,*
*तारकेश्वर-५, गोलढुङ्गा*



# आकाश उचालिरहेका ढुङ्गेचुली

✍ भेषराज रिजाल

झाङ्जिआजे सेन्टरबाट टिकट काटेर छिरियो भित्र । बसले बोकी हिँड्यो अग्लाअग्ला ढुङ्गे पहाडमुन्तिरको खोचैखोच । झाङ्जिआजे नेशनल फरेस्ट पार्क डुल्न जाँदै थियौँ हामी ।

अगस्त १५ सन् २०१९ ।

बीस जना नेपाली र केही चिनियाँहरू बोकेको बसको एउटा सिटमा छौँ नरेश शर्मा, रामचन्द्र शर्मा र म । सोच्छु– पात्र, परिवेश र समयले उल्लासित हुन्छ यात्रा । सहयात्राले रौनक थपिदिन्छ यात्रामा । चिनियाँ भूमिको यस्तै रमाइलो यात्रामा लठ्ठिएको छु म केही दिनदेखि । बाटो दायाँबायाँ फुलिरहेछन् टाँकी र इकिरो । बाँसघारीबाट कसैले सुसेलेझैँ बसभित्र गुञ्जिरहेछ मधुर चिनियाँ गीत ।

एउटा बिसौनीमा रोकियो बस । ढुङ्गे सिँढी उक्लेर चढियो केबलकार । केबलकारको बट्टा सर्किन थाल्यो कहालीलाग्दो भीरमाथिबाट ।

भीरको भय थामेर उचालिएका छन् अजङ्गका पहाडी चुलीहरू । कुनै चुचुराहरू फेदजत्तिकै खिरिला छन् त कुनै टुप्पोभन्दा फेद साँघुरो । हत्केलाजस्तो धर्तीले आकाशतिर औँला ठड्याएजस्तो । आकाशले धर्तीका औँला समातेर क्षितिजतिर पाइला चलाएजस्तो । कुनै सिपालु कालीगढले ताछेर बनाएका जस्ता छन् ती ढुङ्गे चुलीहरू । टाउको मर्काएर हेर्न खोज्छु चारैतिर । जता हेरे पनि भीरै देखिन्छ । सिरिङ्ग हुन्छ पैतालादेखि शिरसम्म । भीरको पीरमा पनि मुस्कुराइरहेका अनौठा पहाडहरूलाई देखेर बिर्सन्छु म सबैथोक ।

हल्का रातो, पहेँलो र सेतो रङमा पोतिएका छन् पहराहरू । पहराको चेपमा समेत उम्री हुर्केका छन् अनेक रुखविरुवा । कहिल्यै पानी देख्न नपाएका पहरालाई कसले गर्छ होला धोइपखाली र पारिदिन्छ सनित्त सुकिला । को बस्छ होला यी निर्जन पहाडमा र डुल्छ पहाडका रोमाञ्चक पत्रहरूमा । रङ्गीन इन्द्रेणीको फेर समातेर स्वप्नील आकाशमा उडिरहेछु म स्वच्छन्द ।

बोल्न खोज्छ छेवैको चिनियाँ किशोर । मोबाइल ट्रान्सलेटरका मद्दतले संवाद गराउनुहुन्छ भीम बूढा । हामी नेपाली भन्ने थाहा पाएपछि अचम्मित हुँदै किशोर बोल्छ– “निपोर !”

चिनियाँहरू नेपाललाई ‘निपोर’ भन्दा रहेछन् । तब “नेपाल र नेपालीलाई मन पराउँछु” भन्दै हामीतिर तानिन्छे एउटी चिनियाँ युवती । चिनियाँहरूको असल व्यवहारले प्रभावित हामीले ती युवतीलाई समेत भनिदिन्छौँ– “प्याउ ल्याङ ।” अर्थात्, सुन्दर महिला ।

ऊ खुशी हुँदै “महिला नभएर केटी हुँ” भन्छे । उसको सुन्दर कौमार्यलाई सम्मान गरेझैँ केबलकार हल्लिने गरी हाँसिदिन्छौँ हामी । तब तेन्जी माउन्टेनमा आएर रोकियो केबलकार । रमाइलोमा रल्लिँदा भयभित भीर पनि थाहै नपाई काटिँदो रहेछ ।

“सूर्योदयको पहिलो किरण र चाँदनी रातको चहकिलो चमक हेर्न प्रख्यात छ यो ठाउँ । यी पहाडको वरिपरि फैलिने बादलको तुफानी समुद्र र हिउँदको सफा हिउँ हेर्न पनि उत्तिकै लालायित हुन्छन् मान्छेहरू ।” टावरले जोशिलो पाराले निरन्तर तानिरहेछ हामीलाई । ऊ केही बोल्न थाल्यो कि घेरिहाल्छौँ हामीले उसलाई । लमतन्न डाँडाहरू क्षितिजसम्म पुगेर फर्कन्छन् आँखाको डिलमुन्तिर । बादलु झुण्डहरू वैँशालुको श्रृङ्गारझैँ लेसारिएका छन् आकाशे अनुहारमा । कतैकतै स-साना बस्तीहरू छरिएका छन् पहाडी भित्ताहरूमा । पहाडी चुचुराको छातीसम्म फैलिएका घुम्रे बादलको अनेक आकृति कल्पेर डाँडैडाँडा दौडिन्छ मन । मोहक प्रकृतिलाई साक्षी राखेर निर्जन चुलीहरूको जङ्गलमा डुलिरहन चाहन्छ मन । र त, हेलोङ पार्कको डिलबाट बेस्सरी आँखा डुलाएँ मैले । शोसी भ्यालीका हजारौँ चुलीहरू मसँग

बोल्न खोजे एकैचोटी । हेलोङ पार्कको बस बिसौनीबाट एउटा बस चढियो र ओर्लियो अलिपल्तिर ।

क्षितिजका पहाडी चुलीजत्तिकै अग्लिएर उभिएको भेटियो एउटा ढुङ्गे मूर्ति । गगनको सेतो बादलभन्दा चहकिलो थियो उसको स्वाभिमानी मुहार । पहाडी हरियालीमा हराएको थियो उसको लक्ष्यभेदी नयन । लेकाली स्वच्छतामा अडिएको थियो उसको दृढ पाइला । सङ्घर्षको धारिलो इतिहास छिचोलेर यहाँसम्म आइपुगेको थियो शायद ऊ ।

त्यो मूर्ति र छेवैको सुनौलो घोडा सामुन्ने घेरा बनाउन खोज्यौँ हामीले । अच्युतमणि नेउपाने र उद्धव थापा उभिनुभएपछि पूरा भयो अर्धगोलाकार घेरा । बलराम खत्रीले आकाश छोइने गरी उचाल्नुभयो टावरले बोकी हिँड्ने पहेँलो झण्डा । प्रकाश शर्माले दुइटा औँलाले आकाश छुन खोज्नुभयो उसरी नै । मुस्कानी तरङ्गले सबैलाई जोडेपछि मिलाएर खिचिदिइन् न्यान्सीले ।

“हाम्रो आजको यात्रा आधा सफल भयो ।” विजयी भावमा बोलेथ्यो टावर ।

ताली बजाएर उसलाई समर्थन गरेथ्यौँ हामीले ।

मिङ वंशका तानाशाहविरुद्ध बहादुरीसाथ लडेका किसान नेता स्याङ डकुनको सालिक रहेछ त्यो । हजारौँ दुश्मनलाई पराजित गरेपछि शेन्ताङ खोँचमा खसेर शहीद भएका थिए रे उनी । डकुनलाई ‘स्वर्गको सन्तान’ मानेर त्यही नामले आभूषित रहेछ– तेन्जी माउन्टेन पनि ।

उनकी प्रेमिकाले यी पहाडहरूमा कति खोजिहोलिन् उनलाई र चढाइहोलिन् पुष्पगुच्छा ? उनकै सम्झनामा अक्करिलो भीरमा उम्रिएर पहाडमास्तिरको आकाशमा मादक कलाकारिता कोरेका त होइनन् सल्लाका रूखहरूले ?

“उनकी प्रेमिकाको सम्झना र हजारौँ किसानहरूको आस्थाले बनेको होला डकुनको यो चट्टानी सालिक ।” पहाडजत्तिकै विशाल सालिकतिर फर्केर बोलेथेँ म पनि ।

“अब अर्कै पहाडहरूको पानोरोमा हेरौँ ।” टावर अघि लाग्यो । अलिकति खुट्किला हिँडेपछि पुगियो एउटा डिलमा ।

ओहो, सुन्दरताले चुलिएका पहाडी चुलीहरू देखिए । ठाउँ पाए आकाश छुन ठडिँदा रहेछन् चुलीहरू । मान्छेको मन छुन हातपाउ पसारेर क्षितिजसम्म फैलिँदा रहेछन् ती ।

सेतो बादलले ढाकेको आकाश उचालिरहेछन् ढुङ्गे चुलीहरू । खुट्टाले छुन नसकेका असङ्ख्य चुलीहरूलाई अनुभूतिले स्पर्श गरिरहेछु मैले । घुमन्ते पर्यटकका आँखामा बसेर संसार पुग्ने चुलीहरू छुन चाहन्छ मेरो रोमाञ्चक अनुभूति पनि ।

डिलको बारमुन्तिरको भयानक भीरलाई बिर्सेर खिचिइरहेछन् मान्छेहरू । हावा, पानी वा अन्य प्राकृतिक कारणले माटो क्षय भएर पत्थरिलो अस्थिपञ्जर बनेका अनौठा पहाडहरू देखेर त्रसित, उत्फुल्लित, आश्चर्यचकित भइरहेछु म ।

“झाङ्जिआजेमा जन्मेर कम्युनिस्ट आन्दोलनमा महत्त्वपूर्ण भूमिका खेलेका मार्शलको चिहान ।” टावर सगर्व ठडियो हाम्रो अघिल्तिर ।

चिनियाँ क्रान्तिका सपुतहरूलाई पहाडमा सजाएर अमर बनाइएको रहेछ । केबलकार, बाटो आदिले सिङ्गारेर प्रकृति र विकासलाई हातेमालो गर्दै हिँडाइएको रहेछ त्यहाँ । त्यसैले त खित्खिताउँदै हाँसेका रहेछन् चिनियाँ पहाडहरू ।

धुपीका रूखहरूको सान्निध्यमा शीतल हावा बहे पनि तेजिलो घाम लागिरहेछ । मनमा छरिएको छ रमाइलोको उस्तै उज्यालो । बस चढेर फेरि कुदियो डाँडैडाँडा ।

“हलेलुवा माउन्टेन र स्वर्गको एक नम्बर पुल ।” टावरको हात तन्कियो अद्वितीय पहाडतिर ।

सुनेथेँ– मध्यभागमा प्रायः बादल, कुहिरो लाग्ने हुँदा हलेलुवा माउन्टेनको माथिल्लो भाग आकाशमा तैरिरहन्छ । तर, बादल, कुहिरो नलागेको यो मौसममा पनि झन् अनौठो पो देखियो । हलेलुवा माउन्टेन धर्तीबाट उक्लँदै नीलो आकाशसम्म पुग्ने गोलाकार भऱ्याङजस्तो देखियो । अनि स्वर्गको एक नम्बर पुल– नीलो समुद्रमा बेगिइरहेको जहाज जस्तो वा दुइटा आकाश जोड्ने स्वर्गीय बाटोजस्तो ! रोमाञ्चक दृश्यमा हराउँदा गन्तव्य अल्मलिएको यात्रीझैँ भएँ म त ।

"जेम्स क्यामरनको अवतार फिल्म बनेपछि बढी प्रख्यात छ यो स्थान । हलेलुवा माउन्टेनलाई साउथन स्काइ कलम भनिन्थ्यो पहिले ।" टावरको अनुहारमा पनि छ अद्‌भूत खुशी । वरपरका पहाड हेर्न मिल्नेगरी भीरमा झुण्डिएको छ बाटो । अधिकांश चिनियाँसहित पर्यटकहरूको खचाखच भीड छ अघिपछि ।

भीरको बाटो र साँघुरो सिसाको पुल तरेपछि समथरिलो डिलमा देखियो पखेँटा फिँजाएको चरोको मूर्ति । त्यसको पखेँटामा बसेर फोटो खिचाउँदा औधि खुशी देखिई एउटी चिनियाँ बच्ची । फोटो खिच्ने उसको बाबु झन् खुशी देखियो । साथीहरूले पनि खिचाए पालैपालो । बालापन ओरालेर छातीमा कमल अधिकारी पनि बस्नुभयो चराको पिठ्युँमा । हामीले पनि खिच्यौँ चिनियाँ बच्चीको बाबुले झैँ ।

अलिपल्तिर पुगेपछि रोक्यो टावरले- "पहाडी चुलीहरू राम्रो देखिने सबैभन्दा उत्तम ठाउँ यही हो ।"

हाँगा हालेका रूखझैँ सुरिला पहाडहरू छन् । हात फैलाएर आकाशको नीलिमा बटुल्न खोजेझैँ छन् पहाडहरू । आलिङ्गनमा कस्सिएका पहाडका जोडीहरू सगर्व उभिएका छन् क्षितिजभरि । छातीमा कोणधारी रूख उमारेर सुन्दर जीवन बाँचिरहेछन् पहाडहरू । पत्थरमाथि पनि एकचिम्टी माटो, एक अञ्जुली शीत र एकमुठी स्वच्छ हावा लिएर खुशीखुशी हाँसिरहेछन् ती । रहरलाग्दा पहाडहरूको रोमाञ्चक दिनचर्याले औधि लोभ्यायो मलाई ।

हेरेर कहिल्यै नअघाउने मोहनी छ रूपसी चुलीहरूमा । लाएर कहिल्यै नसकिने माया छ चुलीहरूको मुस्कानमा । र त, धेरैबेर भुल्यौँ हामी ती यौवना पहाडी चुलीहरूको सान्निध्यमा । चुलीहरूको प्रेम पासोमा अल्झेर धेरैबेर बस्यौँ तिनकै काखमा ।

मन थाकेको छैन । रहर अघाएको छैन । पयर गलेका छैनन् । आँखा लोलाएका छैनन् । प्रकृतिले हामीलाई पनि पारिरहेछ आफूजस्तै तन्दुरुस्त । दृश्यका तरङ्गले मनभरि बेगिएको छ उन्माद प्रवाह ।

भीमले कहाँबाट ल्याएर बाँड्नुभयो यति रसिला आरू ! पहाडी दिव्यताझैँ यस्तो रसिलो सम्झना के हुन सक्छ र अरू !

एउटा पाखो ओर्लन लाग्दा राता बाँदरहरूले जिस्क्याए केहीबेर । यत्रो वन डुल्दा भेटिएका वन्यजन्तुलाई हेरियो सप्रेम । अचम्मित छु, छैनन् आकाशमा कुनै चराचुरुङ्गी र धर्तीमा कीटपतङ्गरहरू ।

घाम ओरालो लाग्दा मान्छेको धुइरो समेटियो खोलासरि । दुई घण्टा लाइनमा सर्किएपछि बल्ल पुगियो बाइलङ एलिभेटरसम्म । ३२६ मिटर अग्लो एलिभेटरबाट सुत्तै पुगियो पहाडको फेदीमा ।

बस चढेर बासतिर लम्कँदा पहरोको अनुहारमा चम्कँदै थियो उज्यालो घाम । र, पहाडको छातीमा निदाइरहेथ्यो जङ्गलको हरियो छायाँ ।

■■

# जन्मदिन

✍ पुष्पा नेपाल सुवेदी



तारा विवाह भएर त्यो घरमा आएदेखि सम्पूर्ण जिम्मेवारी उसकै काँधमा थियो । अफिस, घरपरिवार सबै सम्हालेकै थिई ।

सब्जी पसलमा पुगेर श्रीमान्, छोराछोरी र सासूलाई मन पर्ने तरकारी किनिरहँदा आफूलाई मनपर्ने तरकारी किन्नै बिर्सन्थी । चाडपर्व, उत्सवहरूमा सबैलाई मनपर्ने उपहार किन्दाकिन्दै आफूलाई आधारभूत कुरै किन्न बिर्सन्थी। उसलाई घरका सबैको जन्मोत्सव कण्ठस्थ थियो। सासूससुराको जन्मोत्सव अष्टचिरञ्जीवीको पूजा गरेर मनाउन र छोराछोरी र श्रीमान्‌को जन्मोत्सव केक काटेर मनाउन नबिर्सने तारा आफ्नो जन्मदिन अक्सर बिर्सन्थी ।

"आजको कुनै काम पेन्डिङ नराख्नुस् है ताराजी !" आदेश थियो हाकिम साहेबको । हतार गर्दागर्दै अफिसबाट निस्कँदा झण्डै छ बज्न लागिसकेको थियो । बाटो उस्तै जाम । उफ्, जाम खुल्न आधा घण्टा लाग्छ । घर सम्झी । पुग्दानपुग्दै सासू सुरु हुनुहुनेछ, 'आजकलका बुहारीको के कुरा ? केही मतलबै छैन ।' श्रीमान्‌लाई देख्नेबित्तिकै सोध्नेछे, 'चिया पिउनुभयो ?'

उनी कड्किनेछन् 'तँलाई नि मेरो मतलब छ ! अफिस पनि कतिबेर लाग्ने हो ? म आएको एक घण्टा भैसक्यो !' भान्सामा नपस्दै छोरीसँग भेट हुनेछ । उसको आँखा पढ्नेछे, 'मम्मी, तपाईँ कस्तो आमा हो ?'

जाम खुलिसकेछ । स्कूटी हुइँक्याई घरतिर । स्कूटी रोकेर घरभित्र पस्दै गर्दा ताराको आङ ढक्क फुल्यो । किन घरभित्र सबैतिर अँध्यारो छ ? ऊ सरासर आफ्नो कोठामा पसी । श्रीमान्‌ले आफूतिर तान्नुभयो ।

"ए ! के गरेको ? बत्ती किन नबालेको ?" चुपचाप तानेर उहाँले लिभिङ रूममा पुऱ्याउनुभयो । एकैचोटि सबैतिर झलमल्ल बत्ती बल्यो । कोठाको सजावट देखेर ऊ छक्क परी । शिरमाथि फूलको वर्षा भयो र सबैले एकै स्वरमा भन्नुभयो, "ह्याप्पी बर्थडे टु यु तारा !"

बल्ल सम्झी– ओहो ! आज मेरो जन्मदिन ! अरू बेला ग्लानिले निदाउन नसक्ने तारा आज खुशीले पनि निदाउन सकिन ।

■■ *इलाम*

# नयाँ घर

✍ प्रोल्लास सिन्धुलीय



"उसो भए के गर्ने त ?"

"के गर्ने भनूँ म ? विचार गर्नू न आफैँ !!" अलमलमै थिएँ, उनले झनै उल्झनलाई प्रोत्साहन दिइन् ।

"यो पनि कुनै जबाफ हो ! मैले तिमीलाई किन सोध्नु जरुरी ठानेँ भन त ? किनकि, मेरो बुद्धि-विवेकले यो समस्याको निकास भेट्न सकेन । तिमीले केही न केही अवश्य पर्गेल्नेछौँ भन्ने आशा त्यसमा मिसिएको छ ! यो गुत्थी झन् गाँठो परोस्; त्यै आशाले हो त मैले सोधेको ?"

उनी चुप भइन् । ढुङ्गाको देउता बोल्ला, अब उनी बोल्दिनन् ।

उनी चुप लागेरै पार लाग्ने समस्या यो थिएन ।

"कि अन्तै पठाइदेऊ, कि गाउँ जान देऊ ! यहाँ त म एक बस्तिनँ, दुई बस्तिनँ, तीन बस्तिनँ !!" बाको माग भयङ्कर जिद्दीयुक्त थियो ।

निकै दिनदेखि बाको किचकिच चर्किंदो गएको थियो । सम्झाउने यत्नहरू व्यर्थप्रायः बनिरहेका थिए ।

साह्रै ठूलो नभए पनि अभावै निम्त्याउन नदिने आफ्नै घर थियो यो शहरमा । दुई तलाको भाडाले बैङ्कको किस्ता तिर्न जेनतेन पुगेकै थियो । एक तलामा आफू बसेर पनि यौटा कोठा पाहुनापाछाका लागि उब्रिएकै थियो । माथिको आधा तला भने खाली त थियो तर अर्धेलो । घरबेटी भैखाँदो; आफूभन्दा माथि भाडाको मान्छे के राख्नु ! त्यसमाथि कस्तो राम्रोसित गमलामा बोटबिरुवा रोपिएका छन्, रेखदेख गर्न पनि उक्लिराख्नुपऱ्यो; कता अर्कालाई बीचमा घुसाउनु ! बस्नेलाई पनि असहज, हामीलाई पनि व्यवधान !

लोकेसनचाहिँ आफ्नै साधन नहुँदा पनि खासै अप्ठेरो थिएन । पुतलीसडकमा मेरो उद्यम, सुकेधारा चोकको ठीक माथि सेलिब्रेसन हाइटसँगैको हाइटमा हाम्रो घर । घर वा कार्यालय; खुत्रुक्क ओर्लेपछि त नेपाल यातायात जिन्दावाद !

वीणाको जागिर पनि सरुवा हुँदैहुँदै अन्ततः नजिकैको शिवपुरी मा.वि. बालुवाटारमा आइपुगेको थियो । बस चढे ढोकैमा झर्न पाइने । मसित जाने औसर मिले त झन् अच्छालेकिन भइहाल्यो ! मेरो आउने-जाने बाटो करिबकरिब त्यही हो । तर, उनको र मेरो अक्सर टाइमै मिल्दैनथ्यो । उनको जाने-आउने निर्धारित समय थियो; मेरो ठेगानै नहुने । सायद यस्तै अड्केलोले नै होला, "हिँड्नु नि पर्छ अलिकति त !" भन्दै उनी चप्पल कारखानाबाट छिरेर टुँडालदेवी मन्दिरहुँदै पैदलै जानु-आउनुमा रुचि दर्शाउँथिन् । फुच्चेलाई लिन-पुऱ्याउन त स्कूलबस आइहाल्थ्यो ।

यस्तो थियो हाम्रो व्यवस्था भनूँ कि अवस्था । यस्तोमा यौटा बूढो बाको उचित स्याहारसुसारको वातावरण बनाउन नसक्ने हुतिहारा हुनुको रुचि र बाध्यतामा हामी अवश्य थिएनौँ । लौ ! बाले भनेबमोजिम नै गरिदिउँला अरे ! पठाइदिउँला अरे गाउँमा ! या, यतै कतैको वृद्धाश्रममा ! यो समाजको गिद्धेदृष्टि, आफन्तजनका दाउ, चिनेजानेकाको मात्रै के कुरा; छुस्स कुरो फुत्कियो भने सामाजिक सञ्जालमा कुरै नबुझी बुरुबुरु उफ्रिने 'आदिम सोचका अत्याधुनिक मान्छेहरू' र तिनले मिनेट पनि ढिलो नगरी दिने 'फैसला' र सजायस्वरूप लगाइने लाञ्छनाका वर्षा !! के थेगिसक्नु हुन्थे होलान् र ! अनि, हामीलाई पनि त के शान्ति होला र ! यस्तो विषम परिस्थितिको सामना गर्नुभन्दा ६८ वर्षीय बाको खप्की, घुर्की खाँदै, बस्दै गर्नु कता हो कता सहज !

हाम्रा बा उतिबेलैका चल्तापूर्जा– चार भोटले हारेका प्रधानपञ्च । चपर्चण्डालले जितेको हुनाले उनी सिर्फ चार भोटकै कारणमात्र हारेका हुन् भनेर कसैले पत्याएका थिएनन् । जे होस् बा चानचुने व्यक्तित्व होइनन् । हामीलाई अझै 'पर्जापतिको छोरो' भनेरै चिन्छन् चिन्नेमध्ये आधीसरोले ! पढेलेखेका, विद्वान् पनि त हुन् उनी । उस बेला आई.ए. उत्तीर्ण गर्नु भनेको मैले अहिले कनिकुथी गरेको एम.ए. भन्दा केको कम्ता हुन्थ्यो होला र !

यत्ति घामड कसरी हुन सके हाम्रा बा ?

कतै वीणा ... ... ...?

होइन, होइन ! उनी झन् गौप्राणी ! पढेलेखेकी, संस्कारी, बुज्झकी, सुशील, विवेकी... म पो कस्तो छु कुन्नि; उनी त भने-चाहिएजस्तै छिन् ।

कतै जात पो ?

अहँ, त्यो त झन् के हुन्थ्यो होला र ! आफैँले रोजेको त हो तर बिहे गर्ने बेलामा बा-आमासित प्रष्टै कुरा भएको थियो– "मैले मन पराएकी केटी बिजातकी छिन् । तपाईंहरूकै घरमा भित्र्याउने हो, स्वीकृति दिनुहुन्छ भने आँट्नुपर्‍यो ! होइन, हुँदैन भन्नुहुन्छ भने क्यै बिग्रिहालेको छैन; म कुरो मिलाउँछु ।"

"तेरो मनले खा'को त छ नि ?" कुरो कोट्टिएसँगै बाले सोधेका थिए ।

"त्यो त छ बा !" मैले कुरो खस्न नपाई स्विकारेको थिएँ ।

"जिन्नगी बिताउनी तैँले हो । तेरो चित्त बुझेछि सक्किगो ! तेरो अनुहार उजेलो देख्न पाए हाम्लाई त्यसै तुष्टि मिल्छ ।" बाले यत्ति भनिसक्न नपाउँदै मैले आमाको मुहारतिर छड्के नजर फ्यालेको थिएँ ।

"के मतिर आँखा फ्याल्छस् ए ! बाले हुन्छ भनिहाले, तैँले मन दि सकिस् ! म को हुँ र बाउछोराको निर्नयमा भाँजो हाल्नी ? पछि यल्ले क्यै भनि पो हाल्छे कि भनेर बकाउन खोज्या होस् भने यी यो हातपाउ चलुन्जेल मलाई बुहारी चाइया छैन । चाइए नि तैँले शहराँ पोको पारेर लगिहाल्छस् ! यौटा नाति, नातिनाचैँ खुट्टा लागे'छि हाम्रा पोल्टाँ हाल्दिस् भने लाख भो ! त्यत्ति भा छोरो असल रै'छ, भाग्यमानी भएम् भन्ठानम्ला !"

आमा कम्ताकी थिइन् र ! ब्याडे गह्रा कता बनाउने ठेगान छैन, एक मुठा बिउ पहिल्यै मागिसकिन् !

त्यस दिन कुन जातकी बुहारी आउँदै छे भनेर समेत आमा-बाले सोधेनन् । बुहारी भित्रिएपछि घरभित्र कहीँ छोइछिटो पनि गरेनन् ।

"जे भए नि बूढाबूढीको मन हो, घर जाँदाचाहिँ बार्देऊ है !" भनेको थिएँ उनलाई, "सधैँ बार्ने गर्‍या भए बार के रे ! नत्र याँ दुई दिन नौटङ्गी किन रच्नुपरो !" भनेर आमाले रजस्वला बार्नसमेत दिइनछन् ।

एक दिन भावुक भएर आमाले भनेकी थिइन्, "हाम्ले छोरी मान्यौँ भने त्यो नाताले यिनी यो बज्याकी बुइनी हुने भइन् । घरजम गरिसक्या छन्, पाप लाग्ला फेरि ! तर, यिनी नाटिकुटी छोरीकै लच्छिन र बेहोराकी छिन् !"

आमाको वाक्य खस्न नपाउँदै बाको उद्गार निस्किएथ्यो, "तबैतारे ! 'नदिने सासू आइतबार बार्छिन्' भन्ने उखान चरितार्थ गर्न के खोज्छेस् ए ! यो बज्या चैँ काँ छोरोजस्तो छ र ! ज्वाइँजस्तो व्यहोरा छ यस्कोचैँ । हेर न घराँ आउँदा नि कुटुम्बझैँ गजक्क परेर बस्छ, सुख-दुःख नि केकसो छ, भन्दैन-सोध्दैन । उतिमाथि ब्या गर्दा तैँले त्यै यौटा शर्त राखेकी थिस् होइन- नाति-नातिनाको ? टेर्‍यो यल्ले ? कानाँ तेल हालेर बस्यो ! पछि बुहारीलाई भन्नासाथ फ्याट्टै पठाइदिइन् नाति !"

बुहारीलाई साख्खै छोरीभन्दा बढ्ता गर्ने यस्ता बा-आमा; जातको कुरामा कहाँ त्यतिविधि सङ्कुचित हुन सक्छन् र .....!! जात-बिजातको कुरा कसैले सम्झिएको पनि त छैन आजसम्म ।

अहिले त आमा बितेको पनि छ साल भइसक्यो । आमा हुन्जेल हाम्रो छोरो उतै गाउँमै थियो । आमाको कार्जे सकिएपछि बा एक्लै परे । त्यहाँ चारैतिर आमाको याद छरिएका छन्, तिनले सताउलान्; यता दृश्य-परिवेश फेरिन्छ, शान्ति हुन्छ भनेर बालाई यतै ल्याइयो । बा आउने भनेको भन्दा तीन महिना पछिमात्र छोरो आउने भयो । त्यस सालको पढाइ नसकी बीचैमा उसलाई ल्याउन मिल्ने थिएन । उसले पनि आइहाल्न उस्तो हतार देखाएन । बरु स्कूलकै होस्टेलमा बस्छु भन्यो बाँकी दिन ।

नाति जान नपाउने भएपछि बाका खुट्टाहरू पनि गाडी चढ्न मानेनन् ।

"तँलाई कमाउनु छ, छुटिसक्यो होला, जा ! मेरो त कमाइधमाइ क्यै छैन । त्याँ नि भातै खा'र बस्नी हो, याँ नि त्यत्ति त जुरिहाल्छ । यो केटोले जाँच सके'छि सँगै आउँला ।" उनले यस्तैयस्तै भनेर मलाई लखेटे । आमाविना एक साल करिब त बसेकै हुन्; बस्छन् अरू दुई-तीन महिना हजुरबाउ-नाति ।

म लिन जाउँला भन्ठान्दै थिएँ, उनीहरू आइहाले छोरोले जाँच तुर्नासाथ ।

आजकल अनलाइन कक्षामा बस्न र पढ्न माथिको यौटा कोठो कब्जा गरेको छ छोरोले । त्यसबाहेक ऊ चौबीसै घण्टा बाकै आसपासमा हुन्छ । ऊ त हाम्रो भन्दा धेरै बाकै छोरो न हो ! तीन साल पनि नछिचोल्दै

बाआमाको पोल्टोमा पुगेको थियो ऊ । हाम्रो बरु यसै भन्न नसकिएला; यो छोरोले बाको चित्त दुखाउनै सक्तैन, शङ्कै नगरे हुन्छ ।

अहिले प्लस टु सक्न लागेको छोरो, सरकारी स्कूलमा पढाउने पत्नी, सानुतिनो बिजनेस गरिबसेको म अनि बा । यत्ति त हौँ सम्पूर्ण परिवार । यस्तोमा बालाई अटेसमटेस हुने, निसास्सिने दिन यो घरमा कसरी आइलाग्यो ? पशुपति, गुह्येश्वरीको दर्शन गर्न बारबार गइराख्नुहुन्थ्यो, कतै त्यो बन्द भएर पो हो कि !

"उसो त बा दिनभर एक्लै हुनुहुन्छ । मनमा नानाथरी कुरा खेल्दा हुन् । आमाको यादले सताउँदो हो । गाउँको झझल्को आइराख्दो हो । अरू पनि केही कुरा छन् कि मनमा ! बाको मन बुझ्न सकेनौँ कि हामीले !" उनले कुरोको चुरो फोइन् ।

"हो नि ! गाँठो परेकै त्यहीँ हो– हामीले बाको मन बुझ्न सकेनौँ । सकेका भए बा किन यस्तरी छटपटाउँथे ! हाम्ले किन बुझ्थेनौँ उनको समस्या !" मैले मन भारी पारेर भनेँ ।

"मैले बुझेको त तपैँले टाइम नदे'र हो । ख्वै बस्नुभा'को बासित ? दोहोरो कुरा नगर्नुभा'को कति भयो; याद छ ?" उनले टोकसिन् ।

मैले कुरा काटेँ, "तिम्लाई के था' हामी बाउछोराको सम्बन्ध ! हामी आँखाले कुरा गर्छौं !"

"तपाईंको आँखाको जय होस् ! सधैँ त्यसै गरिबस्नू अनि बाउ बौलाऊन् !"

"के भन्छिन् यिनी ! मैले के बिराम गरेँ र ? त्यत्रो दिन लकडाउन भएर बल्ल खोल्न पा'छ । नचलाउनू त्यो ? दश सालको मिहिनेतमा ताल्चा लाइदिऊँ ?" म खनिएँ; उनी केही बोलिनन् ।

उनको कुरा पनि ठीकै हो ! सँगै नबसेको त होइन तर अलग्गै कुराकानी केही भएको छैन बासित । लकडाउनको बीचमा घरमै थुनिँदा सबै सँगै भइयो । कतै बाउछोरा छुट्टै बस्न मन थियो कि ? मसित मात्रै गर्ने कुनै गुनासो पो थियो कि ? यस्तो सम्झेर मेरो मनै भरङ्ङ भयो ।

पैसा जिन्सीमा व्यापकै उदार हाम्रा बा खानेकुरामा असाध्यै लोभी छन् । गाउँमा छँदा बेसाएर भए पनि मीठो खानुपर्ने उनलाई । त्यो बुझेरै हो, वीणाले खानेकुरामा कुनै कमी हुन दिएकी थिइनन् । मासु खूब मन पर्ने बालाई । जात फरकफरक हुन्छ, हप्तामा दुई-तीन छाक माछामासु अवश्य पाक्छ ! उस्तो अम्मली त होइन तर साँझको मासुसित भने अर्थोकको पनि अपेक्षा रहन्छ भन्ने वीणाले बुझेकै छिन् । अक्सर म साथी लाग्थेँ, अचेल त्यसोचाहिँ भएको छैन । माहोल पनि बिग्रेको छ । मन झनै अशान्त छ, त्रसित छ । यस्तोमा खानपिनतिर ध्यान कसोरी जानु !

साँझ पर्न लागिसकेको थियो । बा छतमै रहेछन् । वीणासित यत्ति गलफत्ती गरेपछि म पनि माथि उक्लिएँ । छिमेकीको बाँसका भाटाले घेरिएको बारीमा टन्नै कुखुरा चर्दै गरेका देखिए । दुइटा फुच्चा तीमध्येको यौटा समात्न छेकारो हाल्दै रहेछन् ।

"लोकल त के होलान् हगि बा ! क्वाइलर कि के भन्छन् नि; त्यस्तै होलान् !" मैले कुरोको पोयो फुकाएँ ।

मतिर हेर्दै नहेरी बाले भने, "खूब चिन्दोर'छस् ! माउले काढ्या चल्ला हुन् ती ! चारोटा त ऐले नि ओथारोमै छन् ।"

अरे ! बालाई त इतिवृत्तान्त थाहा रहेछ ! दिउँसो पछाडि हात बाँधेर यसो टहल्न निक्लिनुहुन्थ्यो, छिर्नुभएको रहेछ क्यार त्यहाँ ।

एक छिन अल्मलिएजस्तो गरेर म सोही छिमेकतिर लुसुक्क लहसिएँ । फर्कँदा यौटा रातो भाले च्याप्प भ्याएँ ।

दोस्रो लकडाउनले घ्वाप्ल्याक्कै छोपेको थियो यो शहरलाई । बिहान नौ बजेपछि औषधीबाहेक कुनै पसल खोल्न प्रतिबन्ध थियो । म भाले भुल्ल्याउनतिर लागेँ । छोरोले चिथरै पारेर भए पनि काटकुट गर्‍यो । कुन्नि कतातिरको हो, यसो चोरढोकाबाट छिरेर वीणाले 'अर्थोक' पनि व्यवस्था गरिदिइन् ।

आज निकै दिनपछि बासित जमेर बसियो ।

भन्न त पिएको बेला साँचो कुरा फुत्किन्छ भन्छन् ! न बाले कुरो उठाउनुभयो, न त मैले कोट्याउने ह्याउ गरेँ । बस्यौँ, खायौँ, पियौँ, साँझ सकियो; रात पर्‍यो । बाहिरको अँध्यारोले हामीभित्रको अँध्यारोलाई झनै अत्यासलाग्दो बनाइदियो ।

बा कोठामा छिरे । भित्ते घडीले साढे एघार हानिसकेछ । निकै अबेला पनि त भइसकेछ नि ! केही बेरपछि बिहान हुनेछ । बाहिर कहीँकतै अन्धकार रहने छैन ।

तर, हामीबीचको यो अँध्यारो ?

उठ्दै गर्दा बाको अनुहारमा नियालेर हेरेको थिएँ । विषाद्का रेखा कहीँकतै रहे-भएको भान भएन । यस्तो उज्यालो अनुहारको मान्छेको मनमा कस्तो विषवृक्ष उम्रिएको होला ?

अन्ततोगत्वा बा जाने नै भए ।

"त्यहाँ गएर पनि पन्ध्र दिन क्वारेन्टाइनमा बस्नुपर्छ अरे !" भन्ने डर देखाएर लकडाउन राम्रोसित नखुल्दासम्म बालाई रोक्न सकियो; बस त्यत्ति हो ।

बा हामीसित नबस्ने, जाने विषयमा जेजति संवाद भए, ससुरा-बुहारीबीच नै भए । मसित प्रत्यक्षमा केही कुरा हुँदै भएन । वीणाले जे-जति-जसरी सुनाइन्; बस त्यत्तिको भर हो । पत्नीकै चश्माले मैले बालाई के-कसो बुझेँ ? बुझेँ कि बुझिनँ ? कतै गलत पो बुझेँ कि ?

मनमा अनौठो त्रासदिका बीच पनि 'कि वृद्धाश्रम पठा, कि गाउँ जान दे' भनेर फत्फताएको फत्फतायै गरिरहेका बालाई रोक्नु कतिन्जेल र कसरी ?

माटो-काठको घर । पाँच सालबढी भयो धुवाँ नबलेको । के हाल भयो होला ? बस्नलायक के हुँदो हो र ! आँगन, चोटामा झार उम्रेर मनग्ये फस्टाए होलान् ।

बुहारी सरकारी जागिरे; गाउँमा घर चलाउने गरी जानु सपना भइहाल्यो । नातिकेटो साथी गइदिन्छ कि भन्ने आशा थियो होला; उसले बाह्र कक्षा करिबकरिब सक्यो । पोहोरझैँ यसपालि पनि एस.ई.ई.को जाँच नलिने निर्णय त सरकारले गरिसक्यो तर बाह्र कक्षाको अझै अन्योलमै छ । जाँच लिन पनि सक्छ; नलिन पनि । अथवा, स्कूलले जस्तै गरी अनलाइन लिन पनि बेर छैन । सरकारको कानुन, सरकार नै जानून् ! जसो भए पनि परीक्षाका लागि कुर्नै पऱ्यो । त्यसपछि भने एक-दुई महिना केटो फिरी होला । तर ?

तर, पढ्न कि गाउँ-नजिकैको शहर जानुपऱ्यो कि यतै काठमान्डू नै आउनुपऱ्यो । हाम्रो गाउँको अन्तिम शिक्षा भनेकै बाह्र कक्षासम्म मात्रै हो । त्यो पनि पोहोरदेखि सुरु भएको ।

नातिकेटो हजुरबालाई साथी नहुने पक्कै थियो ।

पुऱ्याउनसम्म त म जान सक्ने भएँ ।

"केही सूचना नआउन्जेल म नि उतै जान्छु । अनलाइन पढाइ पनि सक्किइहाल्यो । किताब लैजान्छु, पढ्न उतै भैहाल्छ । जाँचको टुङ्गो लागेपछि आउँला," भनेर छोरो पनि पछि लाग्ने भयो ।

हामी तीनै जनाले गाउँतिर जान कुम्लो कस्यौँ । पहिलेजस्तो दुई दिन कहाँ लाग्नु ! गाडीमा खुट्टा चढायो कि झर्ने ट्याम आइहाल्छ ! बिपी राजमार्गले कम्ता छोट्याइदिएको छ र !

लौ ! अचम्म !! हाम्रो गाउँको घर त झलमल्लै पो रहेछ !

आमा हुँदा जस्तो थियो, उस्तै पो रहेछ घर । म जिल्लिँदै थिएँ, बाले भन्नुभयो, "शारदेकी आमालाई छाड्देको थेँ चाबी । खेतीपाती नि उसैको जिम्मा थ्यो, घर नि दुरुस्तै राखिछे ।"

हाम्रै घरमा बस्दारहेछन् शारदाका आमाछोरी । शारदाका बुबा शहरतिरै बस्छन् । एकाउन्टेन्ट हुन् क्यार, कुन्नि कुन पो डिपार्टमेन्टल स्टोरमा काम गर्छु भन्दै थिए । तर, पछिल्लो पटक भेट्दा उनी उस्तो कुरा गर्ने मूडमा देखिएका थिएनन् । कतै कुनै तनावमा पो थिए कि ! हाम्रा बा, शारदेका बा; कसैले हाम्रो घर, जग्गाजिमी उनीहरूले स्याहारेको सन्दर्भका कुरा मसित चुहाएका थिएनन् । कसरी पत्तो होस् त मलाई यो सब ! म त झार उखेलौँला, मक्केका, सडेका छाना, खाँबा, पर्खाल दुरुस्त पारौँला, कमेरो, पोतो, के गर्नुपर्छ गरौँला, बाको लागि घर साबुत बनाउँला अनिमात्र फर्कूँला भनेर बाह्र-पन्ध्र दिनकै योजना बुनेर गाउँ गएको थिएँ ।

घर जस्ताको तस्तै देखेपछि आमाको हुरुक्कै याद आयो । आमा यतै छिन्; अब निस्केलिन् कि जस्तो लागिराख्यो । बाले केही दिन बस् पनि भनेनन्, म पनि छटपटाएँ । आमाको यादले साँच्चै विचलित पार्दै लग्यो मलाई ।

बालाई के भयो होला झन् !!

कोभिडको दोस्रो लहरले तहल्का मच्चाएर गइसकेको थियो । तेस्रो लहर आउँछ भनेर विज्ञहरूले तर्साउँदा तर्साउँदै पनि लकडाउन खुकुलो हुँदैहुँदै हटेको थियो । जनजीवन सामान्यतिर लम्किँदै गयो । हाम्रा उद्योगधन्दा पनि ढुङ्गामुनि थिचिएका दूबोझैँ बिस्तारै टाउको उठाउन थाले ।

काठमान्डू बस्दा काठमान्डूको दुःख बुझे क्यार; बाले खुर्सानीटारे पाटो बेचेर पैसा पठाइदिए । थपथाप पार्दा बैङ्कको टेन्सन पनि तुरियो । बाहिरी भागमा रङ

लगाएर हो कि धितो फुकेर हो कुनि, शहरको घर पनि निकै उज्यालो देखियो । गाउँमा जग्गाजिमी अभैm टन्नै छ, बाले बेच्दै, खाँदै गरेर पनि सिद्धिँदैन । एकै ठाउँमा छैन, दुःख त्यत्ति हो । टुक्राटुक्रा छ साततिर ।

"सुन्नु न ! बाको बिहे गर्दिने हो कि !" उनले भूमिकासुमिका गोली मार्; फ्याट्टै भनिन् ।

"के भन्छे यो ?" 'तिमी' भन्थेँ, आवेशमा 'तँ' भन्दिएँ ।

म तर्सिएको देखेर सायद, उनी चुपो लागिन् । यसरी चुपो लागेपछि अक्सर उनी बोल्दिनन् ।

उनले गहिरिएर मेरो अनुहारमा हेरिन् । अनि, तरकारी केलाउनतिर ध्यान दिएभैmँ गर्दै भनिन्, "अब हामी बासित बस्न पाउने हैनम् क्यार ! यता बस्न बूढाले उस्तो मन गरेनन् । साथी भनौँदो यो केटो नि यतै फर्किहाल्यो । बालाई एक्लै, एकान्तमा....! के गरेर बसून् बिचरा ! ठिटामिटा हुँदा बरु कोही भए नि हुने; नभए नि हुने । बूढेसकालमा चाहिने रै'छ साथी भनेको । निहुँ खोज्ने भए नि, करकर गर्ने भए नि, झर्कीफर्की गरिराख्ने भए नि...." उनी बोल्दै थिइन्; मैले कुरो काटेँ, "यो उमेरमा कहाँ खोज्नु केटी ? किन खोज्नु ? कसरी खोज्नु ?"

"यौटा सानु, सहज कुरालाई तपाईँ यत्ति जटिल किन सोच्नुहुन्छ हँ ?"

"किन चम्केकी यो आइमाई ! बाईस-पच्चीसको मान्छेलाई केटी खोज्न जान लाग्या हो र ? लोकलाजको पनि डर ! बाको इच्छाको पनि कुरा आउँछ ।"

"केटीको, बाको चिन्ता तपैँलाई कल्ले गर्नु भन्या छ र !"

"के जिब्रो चपाइराख्या ! के भन्न खोज्या, प्रष्ट भन न !"

"कुरा प्रष्टै छ त– हाम्रा बा गाउँमा एक्लै परे । पत्नी बितिगइन्, छोरा-बुहारी भनौँदा हामी साथ दिन नसक्नी, अरू नजिकका कल्लाई चासो, कल्लाई फुर्सद ! यसो मुखबोलाउ साथी नि मुस्किल छ बालाई । यस्तोमा बालाई माया गर्ने कोही छन्; आउँछन् भने तपैँ-हाम्लाई टाङ अडाउनुचैँ किन पऱ्या छ र ! होइन त ?"

कुरोको चुरो बुझ्न नसकेर ट्वाल्ल पर्दै म पत्नीको मुहार नियाल्न थालेँ । म अनभिज्ञ हुनु बेग्लै कुरा; पक्कै केही रहस्य अवश्य छ ! के गरे बाले ? कुनै उपद्रव ? बा गाउँमा नगई नछाड्नु...., अकस्मात् बाको बिहेको कुरा उठ्नु ...., घर जस्ताको तस्तै रहनु...., शारदेका बा मसित कुरै गर्न तड्फडाउनु.... सम्झँदै आङ सिरिङ्ङ भयो ।

वीणाको अनुहारमा गौढ गरेँ, कुनै विष्मयका धर्सा देखिएनन् । यो कुनै सामान्य जिज्ञासा वा बासँगको प्रेमाभाव थियो कि बाप्रतिको मेरो श्रद्धा, आदर्शमाथि व्यङ्ग्य ? खुट्ट्याउनै हम्मे पऱ्यो । केही नभएभैmँ चुपचाप बस्नु पनि परिस्थितिनुकुल थिएन ।

वीणालाई नजिकै तानेर सोधेँ, "समस्या के हो ? गाँठी कुरा भन न !"

कुरा केही दिनअघिको रहेछ ।

धेरै दिनपछि वीणाको स्कूल खुलेको थियो । पहिलो दिन नै उनले थाहा पाइन्– उनलाई खोज्दै यौटी अधबैँसे महिला निकै पटक त्यहाँ आइसकेकी रहिछिन् ।

गार्ड दाइले बताएको हुलिया कहीँ, कसैसित हेक्कायोग्य लागेन वीणालाई । ती महिलालाई वीणाको नाम पनि थाहा रहेनछ । सिर्फ हुलिया र घर कतातिर हो ? यत्तिको भरमा गार्ड दाइले अन्दाज गरेका रहेछन्– तिनले वीणा मिसलाई नै खोजेको हुनुपर्छ !

"तपैँलाई नै खोज्या हो कि भन्ने लख काटेँ । सुकेधाराबाट आउने भनेपछि हजुर नै त हुनुपर्छ ! हो नै भने पनि हजुरको नम्बर मसित थिएन । स्कूल खुल्ने लक्षण पनि थिएन । दुई-तीन चोटि त मैले नै भेटेको हुँ; अरू बेला पनि आएकी थिइन् कि !"

गार्ड दाइको प्रष्टोक्तिमा महिलाले भेट्न चाहेकी मान्छे वीणा नै हुन् कि भन्ने त थियो तर हुन् नै भन्ने पक्का थिएन । यस्तोमा मनभरि आशङ्का र जिज्ञासाका बिरुवा अङ्कुराउनु, मौलाउनुको अर्थ 'माछो, माछो– भ्यागुतो' हुन पनि सक्थ्यो ।

तै, गार्ड दाइलाई आफ्नो नम्बर छाडेर आइछिन् उनले ।

गएको शनिबार, म बिहानै निस्किएको थिएँ । वीणालाई स्कूलबाट फोन आएछ । ती महिला स्कूलको गेट ढकढक्याउन फेरि आइपुगिछिन् । वीणा हुर्दुराउँदै निस्किइछिन् ।

"पर्जापतिकी बुहारी नि नानी ?" कहिल्यै नदेखेकी महिलाले अनुहार नियाल्दै सोधिछिन् ।

"हो, हो ! म उहाँकै बुहारी हुँ !" उनैलाई खोजेकी रहिछिन् भन्ने बल्ल पक्का भएछ ।

सामान्य भलाकुसारीपछि वीणाले ती महिलालाई घरमै लिएर आइछिन् । अनि, सुरु भएछ..... श्री स्कन्धपुराणे.... माघमहात्मे.....! उफ् !!

पुष-माघकै दिन थियो। दिउँसो घरमा कोही नहुने, विरक्त पनि लाग्दो हो । बुबा यसो टहल्न निस्कनुहुन्थ्यो । गाउँको मान्छे, घाइँघुइँ उस्तो मन नपराउने । कहिलेकाहीँ पशुपति, गुह्येश्वरीतिर गए पनि प्रायः उहाँ घरनजिकैको शङ्खपार्कमा छिर्नुहुन्थ्यो । बेलुकातिर त त्यहाँ रमितै हुन्छ; जोडी नभएका विरलै देखिन्छन् । बिहान-दिउँसोचाहिँ बूढापाकाहरू बाक्लै देखापर्छन् ।

सधैँजसो आउने-जाने भएपछि बातचित, चिनापरिचय हुने नै भयो । यौटा अघोषित सङ्गठन नै बनिसकेको रहेछ बाहरूको । त्यही सङ्गठनकी एक सदस्य बनेकी थिइन्– नित्यादेवी । तीन भाइ छोरा, दुई बहिनी छोरी; सबैको घरजम भइसकेको; पतिले संसार छाडेको पनि डेढ दशक नाघिसकेको । कान्छा छोरा-बुहारीसित रहिछिन् तिनी चप्पल कारखाना चोकबाट अलिक भित्रतिर, टुँडालदेवी मन्दिरछेउ । दिनभर घरमा कोही नहुने, ठ्याक्कै हाम्रा बाको जस्तो अवस्था रहेछ उनको पनि ।

परिचय राम्रोसित मौलाउन नपाउँदै कोभिड-१९ को डरले सरकारले लकडाउन गरिदियो । झण्डै दुई महिनाजति त कोही घरबाट निस्कनै नसक्ने-नपाउने अवस्था आयो । त्यसपछि अलिअलि खुकुलिँदै गएको समयलाई सदुपयोग गर्दै बा थोरै बेरका लागि भए पनि घरबाहिर निस्कन थाले ।

केही दिनपछि उनी पनि आउन थालिछिन् । सायद उनका छोराबुहारी पनि हामीजस्तै काममा जान थाले क्यार ! बिस्तारै भेट्ने क्रम लम्बिँदै गएर साँझसम्म पुग्न थालेछ । शङ्खपार्क, साँझको भेटघाट; पाकै भए पनि सुहाउँदो जोडी ... ... ! बाहरूको अघोषित सङ्गठनमा पार्टी-विभाजनका रेखा कोरिँदै गएछ । र, एकातिर परेछन्– सिर्फ यी दुई सदस्य ।

बाले राम्रोसित खाए, खाएनन् ?

बालाई केही शारीरिक समस्या त छैन नि ?

बाको जीवन सन्तोषयोग्य त छैन नै ! तर, जस्तो छ, हाँसीखुशी नै देख्न पाए हामीलाई पुग्यो । पीर भने पनि, दायित्व भने पनि यत्ति हो हाम्रो । बाँकी बाकै तजबिज । हामीले चासो लिनुपर्ने कुनै ठाउँ भेटेका थिएनौँ; भेटेकै भए पनि उस्तो पछि लागिहाल्ने थिएनौँ ।

रहँदा-बस्दा नित्यादेवीका छोरा-बुहारीसमक्ष कसैले यो कुरा जोडतोडका साथ, तोडमोडका साथ पुऱ्याइदिएछन् ।

शङ्खपार्क आउने नित्याकर्म अकस्मात् बन्द भयो । जाने, एक्लै धुमधुम्ती बस्ने, साँझतिर फर्कने; बाको यो वैराग्य निकै दिनसम्म चलेछ । एक दिन मित्रमण्डलीकै कसैले बालाई सुनाइदिएछन्, "आमाले इज्जत फाल्न लागिन् भनेर छोराबुहारी यहाँबाट डेरा सरेर अन्तै गए अरे !"

कहाँ बस्थे ? त्यो थाहा छैन । कता सरे ? त्यो झन् पत्तो छैन । दुई हात परको मित्रता .... पत्तै पाएको भए पनि खोजौँ, के भनेर खोजौँ ?

बाको विषाद्को रेखा उसै मौलाएको होइन रहेछ । पशुपति-गुह्येश्वरीको ढोका बन्द भएर होइन, सतिदेवीको दर्शन नपाउँदाको शिव-छटपटी पो रहेछ !

एक दिन वीणा घर फर्किँदै गर्दा बाले औँल्याएका रहेछन्, "मेरी बुहारी ! शिवपुरी स्कूलमा पढाउँछिन् ।"

सिर्फ त्यही डोरो पहिल्याउँदै नित्यादेवी स्कूलको ढोकासम्म आइपुग्न सम्भव भएको रहेछ ।

वीणाले परिल्याउँदै गर्दा ढोका घऱ्याक्क खुल्यो । छोरो आइपुगेछ क्याम्पसबाट ।

"राजकुमारको भर्खर सवारी भो ?" सङ्केत पनि नगरी ढोका ठेलेको देखेर मैले व्यङ्ग्यवाण हानेँ ।

"महाराज सर्कारको खोपीको ढोका कहिले खुल्ला भनेर एक घण्टादेखिन् धर्ना दे'को ! खुल्दैन त !" उसले झटारो यतै फर्कायो ।

"तँलाई बज्या ! आफूभन्दा ठूलो मान्छेसित मुखमुखै लाग्छस् !! एक झापु हानेर बाउको बिहे देखाइदिन्छु अनि चाल पाउलास् !" वीणाले झाँको झारिन् ।

मैले मुस्कुराउँदै भनेँ, "यल्लाई नि बाउको बिहे देखाइदिने ? म त आफूले मात्र बाउको बिहे हेर्न पाउने भएँ भनेरै मख्ख थिएँ !!"

"साँच्ची ! आमाको बिहे हेर्नचैँ हुन्छ कि हुँदैन होला हगि छोराछोरीले ?"

कुरोको चुरो बटार्दै यो प्रश्न वीणाले हामीसित गरेकी अवश्य थिइनन्; सायद समाज र समयसित गरेकी हुनुपर्छ ।



poetprollas@gmail.com

# “कविताको अर्थ कविले भन्दा पाठक र समीक्षकले देख्नुहुन्छ र लगाउन सक्नुहुन्छ भन्ने लाग्छ ।”

– डा. शिव गौतम

हार्बडलगायत अमेरिकाका प्रतिष्ठित विश्वविद्यालयहरूमा 'बायोस्ट्याट'को प्राध्यापन र अनुसन्धान गर्दै आएका डाक्टर शिव गौतम मूलतः अमेरिकामा नेपाली मूलका एक सफल प्राज्ञिक व्यक्तित्वको रूपमा चिनिन्छन् । विक्रमको तीसको दशकदेखि कथा, कविता र निबन्ध-लेखनमा सक्रिय गौतमका 'झ्याम्ली बाख्रोको पाठो' निबन्धसङ्ग्रहलाई उच्च बौद्धिकताले भरिएको नौलो प्रयोगसहितको निबन्धसङ्ग्रह मानिन्छ । हालसालै उनको 'शीतांशु' शीर्षकको छोटा गद्यकविताहरूको सङ्ग्रह प्रकाशित भएको छ । थोरै शब्दमा धेरै भन्ने सामर्थ्य राख्ने उनका कविताहरूमा जीवनको सूक्ष्म चिन्तन भेटिन्छ । साहित्य-कर्ममा चार दशक लामो इतिहास बनाइसकेका साहित्यकार गौतम चर्चाभन्दा बाहिर साधनामै व्यस्त छन् । हार्बड विश्वविद्यालयमा अनुसन्धानमा व्यस्त हुन थालेपछि आफ्नै साहित्यिक साथीभाइले समेत आफ्नो साहित्यिक चिनारी चटक्कै बिर्सेर प्राध्यापक/अनुसन्धानकर्ताको रूपमा मात्रै चित्रण गर्ने गरेको अनुभव छ गौतमसँग । यस पटकको पुस्तक-वार्तामा 'शीतांशु' कवितासङ्ग्रहमाथि केन्द्रित रहेर ऋषि बस्ताकोटीले डा. गौतमसँग गर्नुभएको छोटो कुराकानी प्रस्तुत गरेका छौँ ।

*प्रश्न १. शीतांशु कवितासङ्ग्रहको लागि हार्दिक बधाई छ । यो सङ्ग्रहको नाम शीतांशु कसरी रहन गयो ? यो सङ्ग्रहका कविताहरू कुन प्रसङ्गमा, कहिले लेखिएका हुन् ? सङ्क्षेपमा बताइदिनुस् न !*

**डा. शिव गौतम :** तपाईंलाई धेरै-धेरै धन्यवाद छ ऋषिजी । मलाई केटाकेटीदेखि नै, बिहानै चौरभरि दूबोमा छरपष्ट छरिएका वा फूल र पातमा डल्ला परेर बसेका शीतका थोपाले घामका किरण थापेर निकालेको टलललाई चारैतिर सम्प्रेषित गरेको दृश्य रमाइलो लाग्थ्यो । चौरभरि पोखिएका ती हीराका दानाले मन पुलकित हुने गर्थ्यो । त्यस्ता दृश्य भ्वाट्ट आँखाअगाडि आउनेबित्तिकैको त्यो भावलाई, त्यो अनुभवलाई र त्यो अनुभूतिलाई धेरै शब्द खर्च नगरी, स्वाट्ट पढ्नेबित्तिकै त्यही दृश्यलाई जीवन्त गराउने एउटा सानो शब्दको खोजीको गर्दा 'शीतांशु' जन्मिएको हो । अनि, मैले नेपालीको शीत र संस्कृतको अंशु (किरण, घामका किरण) जोडेर शीतांशु शब्दको निर्माण गरेँ । संस्कृतका विद्वान्लाई सोध्दा एक जनाले के भन्नुभयो भने 'संस्कृतमा शीतांशु शब्द पहिलेदेखि नै छ र त्यसको अर्थ चन्द्रमा हुन्छ ।' संस्कृतमा शीत भनेको चिसो हुने




रहेछ । अर्को एक जनाबाट मैले सोचेको जस्तो अर्थमा पनि यसलाई उपयोग गर्न सकिन्छ भन्ने ढाडस पाएपछि ढुक्क भएँ । अनि शीतांशु शब्दले केही संस्कृत जान्ने पाठकलाई सुरुमै चन्द्रमातिर नतानोस् भनेर गाता बनाउने भाइलाई गातामा पनि शीतको थोपा र त्यहाँबाट निस्कंदै गरेको प्रकाश भएको चित्र राखिदिन अनुरोध गरेँ । अन्त्यमा, बिहानै चौरभरि हीरा छरिएको जस्तै एउटा कविताको किताबभरि शब्द-हीरा छर्ने एउटा स्वःफूर्त परिणाम पनि हो यो पुस्तक ।

केहीकेही कविताका अन्य केही प्रसङ्ग छन्, सबै भन्न थाले लामो र झर्कोलाग्दो होला । म खाली एक-दुई वटा कविताको सन्दर्भमात्र कोट्याउन चाहन्छु । जस्तो- पहिलो कविता शीर्षक सुरुमा 'तिमीले जान्छु भनेपछि' थियो । पछि त्यसलाई फेरेर 'अपरिग्रह' राखेँ । यसो गर्दा कविता र शीर्षकमा मैले भन्न खोजेको कुराको बढी मेल होला जस्तो लाग्यो मलाई । बौद्ध र जैन धर्ममा पाइने 'अपरिग्रह' शब्दलाई म 'असमातिनु' भन्ने अर्थ लगाउन चाहन्छु, यद्यपि यो शब्द नेपालीमा छैन होला तर मलाई लाग्छ यो अर्थ्याउन त्यति गाह्रो हुँदैन । यो कविताको पृष्ठभूमिमा माया नै छ र अझ झन् माया मार्दाको माया ।

एउटा उदाहरण दिनुपर्दा, मानौँ एउटा मान्छेले आफूलाई मन परेको मान्छे पाउन मरिहत्ते गर्छ । तर यदि त्यो आफूले अत्यधिक मन पराएकोले अरूलाई नै मन पराएको रहेछ भने, दोस्रोको खुशी पूरा हुन दिनु पहिलो मान्छेको कर्तव्य हैन र ? हामी सकेसम्म, हुनेसम्म आफ्ना प्यारा

छोराछोरीको इच्छा पुऱ्याइदिन चाहन्छौँ, उनीहरूलाई खुशी र सुखी भएकोको देख्न चाहन्छौँ । किनभने हामी उनीहरूलाई माया गर्छौं । त्यस्तै अर्को सोचाइमा, सांसारिक कोलाहल र मुसा कुदाइ त्यागेर (त्यसबाट असमातिएर) सुखी जीवन जिउने जैन धर्मको सोचको पनि पृष्ठभूमि छ यो कविताको सृजनामा । (अरू एक-दुई कुरा कविता लेखिसकेपछि आएकाले तिनीहरूलाई प्रसङ्गको सूचीमा राख्न मिल्दैन होला) । त्यस्तै, अर्को कविता 'तिम्रो तस्वीर' छ । यसो झट्ट हेर्दा यो मायासम्बन्धी कविता देखिन्छ र हो पनि तर सायद धेरैले अर्थ लाउनेभन्दा बेग्लै माया हो । यसमा मेरो एउटा कमजोरी लुकेको छ । शायद मैले राम्रो शीर्षक राख्न सकिनँ भन्ने लाग्छ र अर्को मनले ठीकै छ जस्तो पनि लाग्छ । यो कविताको पछाडि मेरो बुबाको सम्झना छ । मेरो बुबाको स्वर्गबासपछि मैले उहाँको तस्वीर भित्तामा राख्न सकिनँ, तस्वीर देख्दा मलाई एकदमै नराम्रो लागेर आउँछ भनेर । मेरो घरमा आउँदा, मेरो बुबाको तस्वीर नदेख्दा आफन्तले भन्लान् भन्ने एक प्रकारको डर पनि थियो । यसरी त्यो तस्वीर बाहिर ल्याउन सकेको पहिलो पल्ट हो ।

यो किताबको अन्तिम कविता मैले मेरी छोरीको बालसुलभ चञ्चलता, उसको उन्मुक्त हाँसोलाई सम्झेर लेखेको । कविता लेख्दा मलाई यस्तो कतिपय अवस्थामा उही कविता माया, प्रकृतिको वर्णन अनि ईश्वरको वन्दना आदि जेमा पनि मिल्ने रहेछन् जस्तो लाग्यो । त्यसैले यो कविता पछाडि, माया, प्रेम, पूजा अर्चना, वन्दना, प्राकृतिक सौन्दर्य सबैको भूमिका छ ।

कतिपय मान्छेले म त अरूको जस्तो त्यस्तो उस्तो होइन, वा म अरूभन्दा बग्लै हूँ (अर्थात् उच्च नैतिक वा विचार आदिको) भनेको देखेको छु । तर, सबैले म बेग्लै (उदाहरणको लागि मबाहेक अरू सबै भ्रष्ट) भन्यो भने कमसे कम त्यो सोचमा सबै एकै ठाउँमा छन्, कोही एक्लै छैनन् नि भन्ने खालको सोचले 'एक्लोपनको घुइँचो' जन्म्यो ।

कविता किन लेख्नुहुन्छ ? भन्ने कुरा मलाई निकै पल्ट सोधिएको छ । यस्तो सोध्दा मैले त्यसको खासै र आफैँलाई पत्यार लाग्ने खालको उत्तर दिन नसकेको असफलताले प्रेरित भएर त्यही शीर्षकको एउटा कविता निस्कियो ।

छन्दमा लेखिने कवितामात्र कविता हुन् भन्ने धारणा राख्नुहुन्छ मैले त्यसो होइन कि भन्दै फूलको छन्द नामक कविता मैले लेखेको हुँ । यसको कुरा मैले आफ्नो भूमिकामा पनि अलिकति राखेको छु ।

हिन्दू धर्ममा भनिने वा मानिने एउटा मूलभूत कुरा (जस्तै हामी यहाँ सधैँ हुन्छौँ) अनि समय-स्थानलाई (Space–time) पोको पार्ने प्रयास हो 'म र म-इतरको सम्बन्ध' कविता ।

एउटा कविताको एउटा मात्रै अर्थ वा एउटामात्रै प्रसङ्ग, पृष्ठभूमि नहुन सक्छ । फेरि कविताको अर्थ कविले भन्दा पाठक र समीक्षक देख्छन् र लगाउन सक्छन् भन्ने मलाई लाग्छ ।

***प्रश्न २. सङ्ग्रहभित्रका सबैजसो कविताहरू भाव र विचारका हिसाबले सघन भईकन आकारका हिसाबले निकै छोटा छन् । शब्द चलाउन मीतव्ययी देखिनुहुन्छ, के यो अभ्यास कविता लेखनमा नयाँ धार/संरचना विकास गर्न खोज्नुभएको हो ? नेपाली कविता विधामा शीतांशुले पक्डेको धार अलि भिन्न होइन र ?***

**डा. शिव गौतमः** मेरा लामा कविता पनि प्राय आफैँमा पूर्णजस्ता लाग्ने हरफहरूका समूह-समूहका सँगालाजस्ता हुन्छन् जस्तो लाग्छ । अर्को कुरा, अरूको कुरा ध्यान दिएर सुन्न प्राय पाँच मिनेटभन्दा बढी सकिँदैन भन्ने निर्देश आफ्नो पेशागत कार्यका मिटिङमा मलाई भनिएको छ । एउटा सानो झण्डाले ठूलाठूला देशलाई समेत प्रतिनिधित्व गरी राखेको हुन्छ । पुराना-पुराना वेदका कतिपय मन्त्रहरू पनि छोटा छन् । पुराना ऋषि मुनिले एउटा ओम् भन्ने अक्षरले यो सारा जगत्लाई बुझाउने कविता रचेका थिए । केही कुरा भन्न सधैँ धेरै शब्द अनिवार्यै हुन्छ भन्ने केही छैन । कविता, त्यसैले पाठक र कविको बीचको एक प्रकारको संवाद होला, जुन छोटा-लामा जस्ता पनि हुन सक्छन् ।

शाब्दिक मितव्ययिताभन्दा पनि प्रभावकारिता र आफूले भन्न खोजेको कुरा सजिलै कविताबाट निस्केर पाठकसम्म पुग्छ कि होला भन्नेतिर अनायासै कहिलेकाहीँ ध्यान चाहिँ जान खोज्छ । बाँकी कुरा प्रकृतिका खोला आफैँ बगेजस्तो, फूल आफैँ फुलेजस्तो हो कि - खोला बग्न पनि गुरुत्व त चाहिन्छ नै, कविता फुर्न, फुल्न पनि एउटा मनमा लागेको कुरा, कल्पना, विषयवस्तु त चाहियो नै !

नयाँ धार ल्याउन खोजेको हो कि भन्नेमा, मसँग त्यस्तो गतिलो आधार छैन, तर साथीभाइका कुरा, टिप्पणी आदिले गर्दा मलाई पनि त्यतातिर सोच्ने बनाइदिएको छ ।

***प्रश्न ३. एक जना व्यस्त प्राध्यापक/अनुसन्धानकर्ता, झन्डै चालीस वर्षदेखि साहित्यकर्ममा पनि उत्तिकै सक्रिय हुनुहुन्छ । साहित्यकर्ममा केले प्रेरित गर्छ ? तपाईंको लेखनका स्रोत र उर्जा के हुन् ?***

**डा. शिव गौतमः** खै यो के हो के हो मैले पनि बुझ्न सकेको छैन । सायद भाविले लगाइदिएको एउटा लहना होला, अथवा त्यस्तो केही अदृश्य शक्ति होला, जसले यस्तो गर्न लगाइराख्छ, विभिन्न मान्छेमा हुने एक प्रकारको जन्मजात आग्रह पो कि ! अन्धकारमै छु । तर, अहिलेलाई कतिसम्म मेसो पाएको छु जस्तो लाग्छ भने : बेला-बेला यसो केही लेख्न मन लाग्छ । शब्दका कटाक्ष र तिनले गर्ने हाउभाउ र इशाराले चाहिँ म बेला-बेला भुतुक्कै हुन्छु ।

*प्रश्न ४. चर्चाको पछि नलाग्ने, आफ्नो कर्ममा अनवरत लागिरहने बहुआयामिक व्यक्तित्वका धनी हुनुहुन्छ । आत्मसन्तुष्टिको कुरा गर्दा पेशागत जीवनका सन्तुष्टि र साहित्य सिर्जनाबाट प्राप्त सन्तुष्टिबीच कस्तो अन्तर हुने रहेछ ? तपाईंको साहित्य सिर्जनाको ध्येय के हो ?*

**डा. शिव गौतमः** पहिलेदेखि नै चर्चाको पछि लाग्नुहुँदैन भन्ने अन्धविश्वासले मलाई थिचेको छ । अनि, आफू चर्चाको पछि लाग्नुहुँदैन भन्ने तर व्यवहारमा त्यसको उल्टो गऱ्यो मैले नै मलाई गरेको कुरीकुरीको लाज कहाँ लगेर छोप्ने ? तर, बेलाबेला विभिन्न क्षेत्रमा लाग्ने गरेका फूर्ति र चुरीफुरीका मेला देखेर, त्यो बजारमा गएर एकदुई थोक किनेर ल्याऊँ कि भन्ने लोभ नलागेको भने होइन ।

सायद पेशागत सन्तुष्टिबाट मात्र सन्तोष मान्न सक्ने मान्छे होइन, मलाई एकजना मित्रले भनेको र त्यो ठीकै पनि लाग्छ । मेरो लागि पेशागत सन्तुष्टि र सिर्जनाजन्य सन्तुष्टि एकअर्काका पुरक हुन् जस्तो लाग्छ ।

साहित्य सिर्जनाको ध्येय त्यस्तो केही पनि छ जस्तो लाग्दैन सिवाय शब्द, अक्षर र विचारसँगको, छलफल र माया-प्रीति साटासाट गर्दा जन्मेका रचना, सिर्जनाहरू । एक हिसाबले आफ्ना सिर्जना छोरा-छोरीजस्तै होइनन् र ?

*प्रश्न ५. शीतांशु प्रकाशनपछि कस्तो प्रतिक्रिया पाइरहनुभएको छ ? आगामी साहित्यिक योजना के छन् ?*

**डा. शिव गौतमः** अहिलेसम्म राम्रो प्रतिक्रिया पाएको छु । बरू अलिक समय लगाएर अलिक राम्ररी ध्यान दिएर लेखेको भए हुन्थ्यो कि भन्नेचाहिँ लागेको छ । समयको अभावले अलिक अप्ठेरो पार्ने गरेको छ ।

आगामी साहित्यिक योजनाको बारेमा त्यति धेरै सोचेको त थिइनँ तर अहिलेचाहिँ केही सोच बन्दै छ । छापिएका कथाहरूको सङ्कलन गरेर एउटा कथाको किताब निकाल्ने सोचमा छु । जीवनमा एउटा कविताको किताबचाहिँ निकाल्छु निकाल्छु भन्ने पहिलेदेखिकै सोच थियो । त्यो निस्कियो, त्यसैमा दङ्ग परेँ, जीवनको साहित्यिक लक्ष्य पूरा भयो भन्ने लाग्यो, अरू साहित्यिक कृति निकाल्ने कुनै पनि कतै पनि केही सोच थिएन । अनि, त्यसपछि नसोचेको कुरो भयो– थप एउटा कविताको किताब पनि निस्कियो । फेरिफेरि नसोचेको कुरा हुँदै गए । मैले नसोचेका धेरै कुरा भएका छन्, त्यसैले हेर्दै जाऊँ, के हुन्छ !

■■

**नारदीय**

## *कल्पतरु सम्पादकको कृति सार्वजनिक*

मिति २०७९/०९/१७ गते जिल्ला समन्वय समिति काठमाडौँको सभाकक्षमा 'कल्पतरु' सम्पादक एवम् कवि रेहित सैँजुको कृति 'परावर्तन' मुक्तकसङ्ग्रह सार्वजनिक भएको छ । 'कल्पतरु' पत्रिकाका प्रधान सम्पादक एवम् नेपाल साहित्यिक पत्रकार सङ्घका उपाध्यक्ष साहित्यकार नवराज पुडासैनी 'ज्योत्स्ना' को सभापतित्वमा सम्पन्न सो कार्यक्रममा प्रमुख अतिथि साहित्यकार एवम् मुक्तक सागर पत्रिकाको सम्पादक निशा केसी हुनुहुन्थ्यो । प्रमुख अतिथिलगायत उपस्थित सम्पूर्णबाट सामूहिक रूपमा पुस्तक विमोचन भएको थियो । विमोचित कृतिको बारेमा विशेष अतिथि प्राध्यापक डा. कृष्ण भण्डारी 'मुमुक्षु'ले विस्तृत समीक्षा गर्नुभएको थियो भने चिरञ्जवी दाहाल, ऋद्धिनारायण श्रेष्ठ, विनोद नेपाल, अबिका थापा मगरलगायतले शुभकामना मन्तव्य राख्नुभएको थियो । एलपि पराजुलीको स्वागत मन्तव्यबाट सुरु भएको उक्त कार्यक्रमको सञ्चालन कलाकार तथा साहित्यकार भुवन शिवाकोटी चौघरेले गर्नुभएको थियो । विमोचित कृतिभित्रबाट विष्णुप्रसाद आचार्य 'अतृप्त', राजबाबु श्रेष्ठ 'सागर'ले मुक्तकवाचन गर्नुभएको थियो ।

कार्यक्रमको समापन हुनुभन्दा पहिले स्रष्टा रेहित सैँजुले लेखकीय मन्तव्य दिनुभएको थियो ।

■■











RBBL को साथ गरौं

# समृद्धिको शुरुवात

## विशेषताहरू:

- न्यूनतम ब्यालेन्स रू. १,०००/- ।
- हरेक महिना रू. ५००/- देखि रू. १००,०००/- सम्म जम्मा गर्न सकिने ।
- ब्याजदर: हरेक महिना ALCO Committee ले तोके अनुसार ।
- ब्याज त्रैमासिक रूपमा भुक्तानी ।

तपाईको आफ्नै बैंक




राष्ट्रिय वाणिज्य बैंक लि. केन्द्रीय कार्यालय, सिंहदरबार प्लाजा, काठमाण्डौ
फोन: (९७७-१) ४२५-२५९५ । फ्याक्स: (९७७-१) ४२५-२९३१ । इमेल: rbb.info@rbb.com.np

# GROUP SMS ON NET

हजारौं जनसँग डिजिटल रूपमा सहजै जोडिनुस्,
केवल **एक क्लिक** मा !




## 10,000 SMS
Rs. 5,000 10 days

## 5,000 SMS
Rs. 2,500 5 days

## 2,000 SMS
Rs. 1,000 2 days

( Rates are exclusive of all taxes )

### Steps to Subscribe the offer

1. Login to: https://groupsms.ntc.net.np & fill all the fields.
2. OTP Verification and agree all the Customer disclaimer.
3. Purchase the required Group SMS Pack.
4. Upload the Excel file.
5. Type the SMS & Send.

राष्ट्रको सञ्चार



NEPAL TELECOM

ntc.net.np twitter.com/ndcl_nt facebook.com/NepalTelecom.NT Instagram.com/nepaltelecomofficial